सादर भेट
सावित्री थापा
०७३/६/८

श्रीमद्‌भागवद् गीता

# त्रिवेणी

लेखिका : सावित्रि जङ्‍म थापा
संस्करण : प्रथम, २०६५
प्रकाशन प्रति : १००० प्रति



ISBN : 978-9937-2-0911-3

प्रकाशक : वृद्ध सेवा कोष, शान्ति आश्रम
काठमाडौं

कम्प्युटर डिजाइन : खड्गप्रसाद खनाल
नवराज दाहाल
नेत्र तिम्सिना

मुद्रण : एनपीटीसी लिमिटेड
सरस्वतीनगर, चावहिल, काठमाडौं, नेपाल
फोन नं.: ४८११२२६, ४८११३७१, ४८११७४५
फ्याक्स : ४८११५१८
ई-मेल : nptc@wlink.com.np

# गीता-वन्दना

**पार्थाय प्रतिबोधितां भगवता नारायणेन स्वयं**
**व्यासेन ग्रथितां पुराणमुनिनां मध्ये माहाभारते**
**अद्वैतामृतवर्षिणी भगवतीमष्टदशाध्यायिनी**
**मम्बः ! त्वामनुसन्दधामी भगवद्गीते ! भवद्वेषिणीम् ॥**

स्वयम् भगवान् श्री नारायणले माहाभारतको युद्धमैदानमा अर्जुनलाई सुम्झाइएकी, पुराण आदि लेख्ने श्री वेदव्यास ऋषिद्वारा पुस्तकको रूपमा रचिएकी, अद्वैतरूपी ब्रम्ह अमूर्तको वर्षा गर्ने भएकी, सोह्र ऐश्वर्यले परिपूर्ण भएकी, अठार अध्यायले युक्त बनेकी, मानवमात्रलाई भवसागरबाट पार लगाउने यस्ती आमारूपी भगवती "गीता" लाई म सदा हृदयमा धारण गर्दै उहाँको वन्दना गर्दछु ।



## विष्णु वन्दना

**शान्ताकारं भुजगशयनम् पद्मनाभं सुरेसम्**
**विश्वाधारं गगनसदृशं मेघ वर्णम् शुभाङ्गम्**
**लक्ष्मी कान्तम् कमलनयनम् योगिभिर्भी ध्यानगम्यम्**
**बन्दे विष्णु भवभय हरणम्, सर्व लौकैकनाथम् ॥**

शान्तःस्वरूप, नागमाथी शयन गरेका, नाईटोमा कमलधारण गरेका, देवताका देवता, विश्वका आधार, आकास झैं व्यापक, मेघको रङ्ग जस्तो आँखा भएका, लक्ष्मीका पति, योगीहरूको ध्यानबाट चिन्न सकिने, संसारी राप तापबाट मुक्त गर्ने, सबैका मालिक, यस्ता चार हात सहितका श्री विष्णु भगवानलाई म प्रणाम गर्दछु ।




# श्रीकृष्ण वन्दना

हे कृष्ण करुणा सिन्धो, दीनबन्धो जगत्पते
गोपेश गोपिकाकान्त, राधाकान्त नमोस्तुते

करुणा तथा दयाका सागर, दुःखका सहारा, जगतका पिता, गोपीहरूका ईश्वर, गोपिनी तथा राधाका स्वामी यस्ता श्री कृष्ण हजुरलाई नमस्कार गर्दछु ।

# गीता-महात्म्य

**गीता गंगा गायत्री सीता सत्या सरस्वती:**
**ब्रह्मबलि ब्रम्हविद्या त्रिसन्ध्या मुक्तिगेहिनी**
**अर्धमात्रा चिदानन्दा भवाग्नि भ्रान्ति नासिनी**
**वेदत्रयी परानन्ता, तत्वार्थ ज्ञानमञ्जरी ।**

भगवान् श्रीकृष्णको मुखबाट निस्किएकी श्री मद्भागवद्गीता गंगाजस्तै पवित्र र सर्वहितकारी, गायत्रीझैं लोककल्याण गर्ने, सीताजस्तै आदर्श र सहिष्णुताले भरिएकी, सत्या अर्थात् सावित्रीजस्तै निष्ठा भएकी, सरस्वतीझैं विद्याबुद्धि प्रदान गर्ने, प्रत्येक शब्दहरूबाट ब्रह्मत्वको प्रवाह गर्ने, ब्रह्मविद्याले जस्तै सबैलाई ईश्वर/ब्रह्मसँग साक्षात्कार गराउने, त्रिसन्ध्या अर्थात् बिहान, दिउँसो, बेलुका सबै समयमा ध्यान गर्न योग्य भएकी, मानिसले मुक्ति प्राप्त गरी सच्चिदानन्दमा पुग्ने माध्यम भएकी, परब्रह्म रूप अर्थात् चिदानन्दस्वरूप भएकी, यस भवसागररूपी दुःखकष्टलाई हरण गर्ने भएकी, मनका शंका र भ्रान्तिलाई हटाई भगवान्मा लीन गराउने भएकी, सबै वेदउपनिषद्को सार, ईश्वरीय वाणी जसको कुनै अन्त्य छैन, जो अथाह र नित्य छ, जसको अध्ययन र स्मरण गर्नाले तत्वज्ञान प्राप्त हुन्छ त्यस्ती ज्ञानकी खानी हुन् श्रीमद्भागवद गीता ।

**लिखित्वा धारयेत्कण्ठे बाहुदण्डे च मस्तके ।**
**नाश्चन्यपद्रवा: सर्वे बिघ्नरूपाश्च वारुण ॥**

श्रीमद्भगवद् गीताको उपदेशलाई लेखेर जसले कण्ठमा धारण गर्छ, यसलाई जसले आफ्नो मनबुद्धिमा राख्दछ र सोहीअनुसार कर्म गर्दछ, त्यसका सबै चिन्ता, कष्ट र तनावहरू नष्ट हुन्छन् र जीवनमा आइपर्ने सबै बिघ्नबाधा तथा आपद्विपद्हरू हटेर जान्छन् । किनकि गीताको सन्देशलाई मननचिन्तन गर्ने व्यक्ति सुखदुःख, म-

मेरो र मायामोह, जसको कारणबाट मानिस चिन्तित, दुःखी र असहाय बन्दछ, को जन्जालबाट मुक्त हुन्छ। उसलाई कुनै प्रकारको भय, त्रास, दुःखकष्ट र पीडाले छुन सक्दैन।

**गीता शास्त्रमिदं पुण्य यः पठेत् प्रयतः पुमान्।**
**विष्णोपादमवाप्नोति भयशोकादि वर्जित ॥**

श्रीमद्भगवद् गीता शास्त्रलाई जसले राम्रोसँग पढ्छ र यसको उपदेशहरूलाई पालना गर्दछ, त्यस्तो व्यक्ति संसारी सबै दुःखकष्टबाट पार हुन्छ र उसलाई कुनै प्रकारको डरत्रासले सताउँदैन। त्यस्तो व्यक्ति सांसारिक दुःखकष्ट, भय, त्रासबाट मुक्त भई उसको अर्को जन्म पनि सुखद् र सफल बन्दछ।

**सर्वोपनिषदो गावो देग्धा गोपालनन्दनः:**
**पार्थो वत्स सुर्धीर्भोक्ता दुग्धं गीतामृतं महत ॥**

विश्वका संम्पूर्ण वेदउपनिषदको सारको रूपमा रहेको गीता, जस्लाई यहाँ दुध र वेद उपनिषदलाई गाईको संज्ञा दिइएको छ र गोठालो बनेर श्रीकृष्णले वेद उपनिषद रूपि गाईलाई दुहुनु भएको छ। अर्जुनले बाछाको रूपमा दुध पगार्ने काम गरेका छन। यसरी श्रीकृष्ण स्वयंले दुहेको दुध रूपि गीतामृतलाई अर्जुनको माध्यमबाट सम्पूर्ण श्रद्धालु भक्तहरूले पान गर्ने सुअवसर प्राप्त गरेका छन्।

**मल विर्मोचनं पुंषां जलस्नानं दिनेदिने।**
**सकृद गीतामृतस्नानं संसारमल नासनम् ॥**

फोहरमैला सफा गर्नका लागि मानिसले दिनहुँ स्नान गर्ने गर्दछन्। त्यसो गर्दा उसको शरीरमा फोहरमैला जम्मा हुन पाउँदैन र शरीर स्वच्छ बन्दछ। पानीको स्नानबाट मानिसको बाहिरी शरीर अर्थात् यो भौतिक शरीर मात्र शुद्ध हुन्छ। उभित्र रहेका कुभाव, कुकर्म, दुष्टता र अज्ञानतारूपी फोहरमैलालाई पानीले पखाल्न र सफा गर्न सक्तैन। गीता उपदेशरूपी अमृतधाराबाट

मात्र मनमस्तिष्कभित्रका कुभाव, कुवीचार र अज्ञानतालाई पखाल्न सकिन्छ। अमृतरूपी गीताको पान र स्नान गर्नाले यस जीवनमा सुखशान्ति प्राप्त भई मृत्युपछि मोक्ष प्राप्त गरेर सदाका लागि सच्चिदानन्दमा रमाउन पुगिन्छ।

**गीता सुगीता कर्तव्या किमन्यैंशास्त्र विस्तरै।**
**या स्वयं पद्मनाभस्य मूखपदमाद्विनि सृता॥**

गीता सबै वेद, उपनिषद् र शास्त्रहरूको सार हो। त्यसैले गीतालाई पढेपछि र बुझेपछि मानिसले अरू वेद, शास्त्र, पुराण आदि केही पढ्नुबुझ्नु पर्दैन। गीता स्वयं श्रीकृष्ण भगवानको मुखारविन्दबाट निस्केको अमृतमय दिव्यवाणी हो, जसलाई बुझेर मनन गरेर तदनुरूप अनुशरण गर्नाले मानिसलाई सांसारिक दुःख, कष्ट र भयले सताउँदैन र मानव जीवनको यथार्थतालाई बुझेर कर्म ज्ञान र भक्तिको माध्यमबाट ऊ सदाका लागि आनन्दमय भगवान धाममा बास गर्न पाउँछ।

# गीताको गरिमा

निष्ठामयी धैर्यवती सावित्रीझैं गीता यिनी ।
सरस्वति महादेवी विद्याबुद्धि प्रदायिनी ॥

ज्ञानभक्तिको शिक्षाले ब्रम्हतत्व चिनाउने ।
गीता हुन् मनको हाम्रो अन्धकार हटाउने ॥

कर्तव्य कर्मको बाटो, गीताले नै देखाउँछिन् ।
कल्याण भक्तिको मार्ग, हामीलाई हिँडाउँछिन् ॥

उपयोगी अति गीता सबैलाई उसैगरी ।
मिथ्या उपदेश यस्को, हुँदैन है कसैगरी ॥

सबैले पुजिने गीता, रक्षा गर्ने कृपा गरी ।
सबैबेला सधैं उस्तै हित गर्ने उसैगरी ॥

मनको मोह त्यो नास्ने, भ्रम हाम्रो हटाउने ।
गीता ठूलो गुरु हाम्रो सत्यमार्ग देखाउने ॥

सबैको सार हो गीता, हो ज्ञानको भण्डार यो ।
प्राणीमात्रको लागि यो कल्पवृक्षसमान हो ॥

गीताभक्तिको सागर शिक्षा यसको अपार छ ।
कुकर्मबाट हटाई, सत्कार्यमा लगाउँछ ॥

गीता गर्दैन विभेद, सानोठूलो कुनै पनि ।
यसले समान देख्दछ नरनारी बराबरी ॥

# लेखकको बुझाइमा गीता

गीता हो प्रभुको गीत, गीता हो सबको सार ।
गीता अजर शाश्वत, गीताको महिमा अपार ॥

जीवन गीत हो गीता, वेदादिको निचोड यो ।
गीता अपार अमूल्य ब्रह्माण्डको रहस्य यो ॥

समयोचित ज्ञान यो, भण्डार हो ब्रमहमतत्वको ।
कल्याणकारी अमृत यो, अथाह सिन्धु ज्ञानको ॥

न त श्रुतिस्मृति हो यो, न हो वेद पुराण यो ।
मुटु हो यो सब शास्त्रको, ज्ञानको कल्पवृक्ष यो ॥

आत्मा अजर अमर, भन्छ अनित्य देह यो ।
देह मर्छ बारम्बार आत्मा रहन्छ नित्य यो ॥

आफू कर्ता नमान, माध्यम तिमी कर्मको ।
गीताको अमूल्य वाणी, परमहितैषी मित्र यो ॥

कर्मयोगी बन भन्छ, गीताले सधैंभरि ।
नराखी फलको आशा, कर्म गर दिलैदेखि ॥

जेजस्तो गर्दछौ कर्म, फल मिल्छ उसैगरी ।
फलमा अधिकार केही, छैन तिम्रो कसैगरी ॥

समभाव तिमी राख, सुखदुःख दुवैमा नै ।
न आत्तिनु नमात्तिनु, लाभहानी कुनैमा है ॥

तेरोमेरो छैन कोही, को आफ्नो को पराइ हो ।
लिएर आएका छौं है, देह हाम्रो क्षणिक यो ॥

# भूमिका

वैदिक सनातन हिन्दू परम्परामा नित्य स्वाध्यायका लागि निर्धारित गरिएका शास्त्रीय ग्रन्थहरूमा श्रीमद्भगवद्गीताको आफ्नै अद्वितीय स्थान छ। यसको माहात्म्यमा उल्लेख भएको अतिप्रसिद्ध श्लोकले भन्दछन् सर्वशास्त्रमयी गीतालाई नै राम्ररी पढेर र तदनुकूल जीवन जिएर त्यसलाई सुमीता बनाउनु पर्दछ। अरु शास्त्रका ठेलीहरूमा अल्झेर के हुन्छ र ? किन भने गीता त साक्षात् भगवान् गोविन्दका मुखारविन्दबाट प्रकट भएको हो। वेदलाई प्रकट गर्ने वेलामा भगवान् श्रीमन्नारयणका नाभिकमलबाट ब्रम्हाजी प्रकट हुनुभयो र ब्रम्हाजीका मुखबाट वेद प्रकट भएका थिए परन्तु गीता चाहिँ साक्षात् भगवान् श्रीहरिको मुखबाट प्रकट भएको हो।

उपनिषद्हरूको सार भएको हुनाले गीता स्वयं 'उपनिषद्' का रूपमा पनि मानिएको छ। यसलाई 'ब्रम्हविद्या' र 'योगशास्त्र' भन्ने पदवी पनि दिइएको छ। यो 'ब्रम्हविद्या' हो किनभने सम्पूर्ण जगत्का परमकारण, सम्पूर्ण आत्माहरूका पनि आत्मा कणकणव्यापी परब्रम्ह परमात्माको बारेमा सत्य कुरा यसमा बताइएको छ। यो 'योगशास्त्र' हो किनभने परमत्मासितको नित्यसम्बन्धरूप योग, कर्ममा कुशलतारूप योग, सिद्धि र असिद्धि दुवैमा समानतारूप योग, चित्तवृत्तिको निरोधरूप योग यी सबै योगहरूको यसमा स्पष्ट रूपले प्रतिपादन गरिएको छ। यी सबै कुरातिर दृष्टि दिंदा गीता अत्यन्त गहन छ र सम्झिन गाह्रो छ जस्तो लाग्छ परन्तु भगवान्को हुन सकियो भने चाहिँ बुझ्न सजिलो हुन्छ। जो उहाँको भएर ज्यूँछ जो उहाँलाई नै जीवनको परम लक्ष्य मान्दछ र जसले भगवान्सितको सम्बन्धलाई नै अविनाशी सम्बन्धको रूपमा चिनेको हुन्छ त्यस्ता भक्तलाई भगवान्ले भनेका गीताका यी पावन सन्देशहरू सम्झिन सक्ने शक्ति प्राप्त हुन्छ। भगवान्

भन्नुहुन्छ- 'म कस्तो छु तात्विकरूपले मेरा के के विशेषता छन् भन्ने कुरा साधकले मेरो भक्तिद्वारा मात्र जान्न सक्दछन्। त्यस्ता मलाई तात्विकरूपले जान्ने भक्तहरू अन्तमा मेरो धाममा प्रवेशसमेत गर्न पुग्दछन्।'

***भक्त्या मामभिजानाति यावान्यश्चास्मि तत्त्वतः।***
***ततोमां तत्त्वतो ज्ञात्वा विशते तदनन्तरम्॥ भगवद्गीता १८।५५***

जीवात्मा भगवान्को अंश हो तर उसले धारण गरेको शरीर चाहिँ प्रकृतिको अंश हो। त्यसैले जीवात्माको अस्तित्वमा दुइटा अंश मिलेका हुन्छन्। एउटा चेतन परमात्माको अंश (ऊ आफू) अनि अर्को जड प्रकृतिको अंश (उसको शरीर) यसरी दुईवटा अलग अलग तत्त्वहरूका अंश प्राणीको जीवनमा रहेका हुन्छन्। चेतन परमात्माको अंशपट्टिबाट पर्न जाने प्रभावबाट ऊ परमात्मातिर तानिन्छ र परमात्माको ध्यान चिन्तन भक्तितिर लम्किन्छ। जडात्मिका प्रकृतिको अंश शरीरपट्टिबाट पर्न जाने प्रभाव बढी भयो भने चाहिँ ऊ सांसारिक सुखतिर बढी आकर्षित बन्दछ। चेतनताको अंश जति प्रभावशाली हुन्छ साधक त्यति नै आध्यात्मिक उन्नतिको भागी हुन सक्दछ। त्यसै दिशामा अघि बढ्दै जाँदा ऊ भगवान्को बन्न पुग्दछ। म भगवान्को अंश हूँ, आत्मा हूँ भन्ने अनुभूति मनमा आउन थालेपछि मानिसको सोच र व्यवहार नै परिवर्तित हुन थाल्दछ। उसको आहारविहार र अन्य समस्त चेष्टाहरू सात्त्विक बन्न थाल्दछन्। राजस तामस प्रकृतिका आहारबिहार र चेष्टाहरू छुट्तै जान्छन्। ऊ मुक्तिको पथमा अग्रसर बन्दै गई अन्तमा भगवद्धामको अधिकारी बन्दछ। अचेतन शरीर प्रकृतिको अंश हो र त्यसपट्टिको जति प्रभाव बढी हुन्छ त्यति नै ऊ परमात्माबाट पर-पर हुँदै भौतिक रमाइलोमा अल्भिँदै जान्छ र संसारको बन्न पुग्दछ। संसारतिरको यो आकर्षण प्रबल हुनगयो भने गीताको अर्थ बुझ्न साह्रै गाह्रो हुन्छ। आफ्नो

चेतन आत्माको अनुभूतिलाई बिर्सिंदै गएपछि मानिस जडतातिरै लहस्सिन गई अन्तमा घोर भवबन्धनमा जकडिन पुग्दछ।

भगवद्गीता कुनै वादविशेषको पुष्टिको लागि रचिएको नभई जीवमात्रको शाश्वत कल्याणका लागि परम कृपालु प्राणीमात्रका परमपिता भगवान् श्रीवासुदेवले अर्जुनलाई निमित्त बनाएर वात्सल्यवश भावीयुगका सम्पूर्ण दिग्भ्रमित जीवनसाधकहरूलाई समेत दृष्टिगत गरी दिनुभएको दिव्य अर्ती हो। गीताको सन्देश मनन गरेर मानव मात्रले जुनसुकै समय, ठाउँ र परिस्थितिमा भए पनि तिनको सदुपयोग गरेर आफ्नो कल्याण गर्न सक्तछन्। केवल तिनको सही सदुपयोग गर्न सक्ने विशुद्ध बिवेकको आवश्यकता रहन्छ।

श्रीमद्भगवद्गीता कर्म, भक्ति र ज्ञानको त्रिवेणी हो। गीताको सन्देशअनुसार कर्म जीवनको जग हो। कर्म नगरिकन कोही एकैछिन पनि बस्न सक्तैन कर्म गर्नै पर्दछ सबैले। त्यसमा पनि मानवको जस्तो जीवन पाएर चेतन प्राणीले त कर्म नगरी बस्नै हुँदैन। केहीकथं आफ्नो लागि केही गर्नु आवश्यक रहेनछ नै भने पनि लोकसंग्रह (लोकप्रेरणा) का लागि पनि ठूलाबडा र जान्नेसुन्नेहरूले कर्तव्य कर्म गर्नै पर्दछ। नत्र सर्वसाधारणहरूमा समेत अकर्मण्यताको गलत संस्कार बस्न पुग्दछ र सम्पूर्ण समाजको लागि वरदान बन्न सक्ने सार्थक जीवन पनि मूल्यहीन हुन गई निरर्थक बन्न जाने डर हुन्छ। भगवान्ले कर्मयोग नामक तेस्रो अध्यायका २२, २३ र २४ सौं श्लोकहरूमा यही कुरा बताउनु भएको छ।

जान्नेहरूले सामान्य जनसाधारणहरूलाई समेत प्रेरणा मिल्ने गरी सावधानीसाथ कर्म गर्नु पर्दछ। कर्मको आदर्श रूप हो त्यसलाई योगका रूपमा परिणत गर्नु। कर्मयोगीको सम्पूर्ण प्रयत्न लोककल्याणको लागि भगवत्सेवाको भावनाले कर्म गर्नमा रहन्छ। कर्मयोगी निःस्वार्थी हुन्छ। ऊ फलाशामा जेलिएर आसक्त

बनेर कर्म गर्दैन। भगवान् भन्नुहुन्छ- 'अतीतका जनकादि राजर्षिहरूले त्यही निष्कामतामा विकसित कर्मयोगकै आधारमा सिद्धि मात्र होइन संसिद्धि नै प्राप्त गरेका थिए। त्यसैले अर्जुन ! तिमीले पनि आफ्ना पूर्वजहरूले गरेजस्तै गरी निष्कामतासाथ लोकसंग्रहकै लागि भए पनि निरन्तर कर्म गर्दै रहनुपर्दछ।'

***कर्मणैव हि संसिद्धिमास्थिता जनकादय:।***
***लोकसङ्ग्रहमेवापि सम्पश्यन्कर्तुमर्हसि॥ भगवद्गीता (३।२०)***

गीतामा मानव जीवनको पूर्ण सफलताको लागि कर्मी होइन कर्मयोगी नै बन्ने प्रेरणा दिइएको छ। त्यसैगरी ज्ञानी मात्र होइन ज्ञानयोगी नै बन्नुपर्ने शिक्षा यहाँ प्रदान गरिएको छ। जीवनको पूर्ण सफलताको लागि तपस्वी मात्र होइन तपयोगी नै बन्नुपर्ने कुरा पनि गीतामा सम्झाइएको छ। जताबाट पनि योगमै पुग्ने प्रेरणा गीताले दिएको छ। योगी बन्नुको अर्थ भगवान्सँग नित्य सम्बन्धित रहनु हो। कर्मयोगको मतलब कर्मद्वारा भगवान्सँग सम्बन्ध जोडिनु हो। ज्ञानयोगको तात्पर्य हो ज्ञानको माध्यमबाट पनि भगवान्सँगै सम्बन्धित हुनु हो र भक्तियोगको अर्थ पनि भक्तिद्वारा भगवान्सँग नित्य सम्बन्धित रहनु हो। प्रश्न उठ्न सक्तछ 'भक्ति त भगवान्सँग यसै पनि सम्बन्धित नै त हुन्छ नि ?' तर सकाम भक्तिमा त त्यो सम्बन्धपूर्ण सम्बन्ध हुँदैन। भगवान् साधनरूपमा मात्र सम्बन्धित रहनुहुन्छ। चिताएको कुरा पूरा गरिदिनेसम्मका लागि मात्र उहाँको सम्बन्ध रहन्छ। उहाँकै लागि त त्यो सम्बन्ध हुँदैन। त्यसैले भक्तियोग शब्दले निष्कामतासाथ सम्पूर्णरूपमा भगवान्सित सम्बन्धित हुनु भन्ने अर्थ आउँछ। भगवान् भन्नुहुन्छ-

***'तपस्विभ्योऽधिको योगी ज्ञानिभ्योऽपि मतोऽधिक:।***
***कर्मिभ्यश्चाधिको योगी तस्माद् योगी भवार्जुन ॥'भगवद्गीता(६।४६)***

अर्थात्- हे अर्जुन ! तपस्वीभन्दा तपोयोगी श्रेष्ठ हुन्छ। ज्ञानीभन्दा ज्ञानीयोगी श्रेष्ठ हुन्छ। कर्मीभन्दा कर्मयोगी उत्तम हुन्छ। त्यसैले तिमी योगी बन। अर्थात् सम्पूर्ण साधनापथहरूबाट तिमी पूर्णरूपले मसँगै सम्बन्धित रहूँ।

यसरी सार्थक र सफल जीवनको आधार ज्ञानयोगी बनेर आफूलाई शरीर मानव होइन आत्ममानवका रूपमा सोची चिन्मय आत्माका रूपमा अनुभव गर्दै जीवन जिउनु पर्दछ भन्ने सम्झाइएको छ। ज्ञानयोगले कहिल्यै पनि आफूलाई जडतातिर झर्न नदिई आफ्नो स्वस्वरूपानुभूतिमै ध्यान आकृष्ट गरी सधैं चेतनता प्रदान गरिरहन्छ। पूर्णताको जीवन जिउने रहर राख्ने साधकले आफ्नो चेतन आत्माको विस्मृतितिर लहस्सिइ स्वस्वरूपानुभूतिबाट वञ्चित हुनु हुँदैन भन्ने सावधानी ज्ञानयोगबाट प्राप्त भइरहन्छ। त्यसबाट प्रबुद्ध साधकले लाभान्वित बन्नु पर्दछ। तेह्रौं अध्यायको सातौं श्लोकदेखि एघारौं श्लोकसम्म ज्ञानको लक्षण बताइएको छ। त्यसको श्रद्धासाथ परिपालन गरेर सामान्य ज्ञानी होइन ज्ञानयोगी नै बन्नु पर्दछ भन्ने कुरामा बल दिइएको छ।

यसप्रकार कर्म र ज्ञान दुवैलाई योगमा परिणत गरिसकेपछि ती दुवै समर्पणभावमा पुगेर पुर्ण बन्दछन्। अनि भक्तिको परिपक्वता प्राप्त हुन्छ। गीतामा भक्तिलाई बीचमा हृदयको स्थानमा राखिएको छ। भक्तिद्वारा नै कर्म पनि र ज्ञान पनि योगमा परिणत भएर पूर्ण बन्दछन्। बाह्रौं अध्याय सम्पूर्ण नै भक्तियोगका नामले बताइएको छ र भक्त कस्तो हुनुपर्दछ भन्ने कुरा त्यहाँ तेह्रौंदेखि बीसौं श्लोकसम्मको अंशमा प्रतिपादन गरिएको छ। कर्म, भक्ति र ज्ञानको योग त्रिवेणी जीवनमा प्रवाहित भएपछि मानवको जीवन पूर्ण बन्दछ भन्ने भगवद्गीताको सन्देश छ। त्यसैले पहिला ६ अध्यायले कर्मलाई, त्यसपछिका ६ अध्यायले भक्तिलाई र सबैभन्दा पछिल्ला ६ अध्यायले ज्ञानयोगलाई महत्व दिएर सम्झाइएको छ।

हुनत कर्मयोग, भक्तियोग एवं ज्ञानयोगमध्ये प्रत्येकलाई आफैंमा स्वतन्त्ररूपमा पनि साधनापथको मान्यता प्राप्त छ र निष्ठासाथ अवलम्बन गरेमा यीमध्ये प्रत्येकले मानवलाई जीवनको परमलक्ष्य प्राप्त गराइदिन्छन् भन्ने तथ्य स्वीकृत छ तर पनि कर्मलाइ कर्मयोग बनाउन ज्ञान र भक्तिको प्रकाश आवश्यक पर्दछ। ज्ञानलाई पनि ज्ञानयोगमा परिणत गर्न भक्ति र कर्मको सहगामिता आवश्यक हुन्छ। त्यसैगरी भक्ति स्वयं पनि आत्मबोधरूप ज्ञानको सहगामिता र समर्पणभावपूर्ण निष्काम कर्मको साथ पाएर अझ अनन्यता र परत्व प्राप्त गरेर परिपूर्ण हुन्छ। यी तीनमध्ये प्रत्येकलाई पूर्णताको निम्ति अन्य दुईको सापेक्षता सधैं रहेको हुन्छ।

व्यावहारिक जगत्का लागि गीताले दिने आदर्श शिक्षा निष्काम कर्मयोगको प्रेरणा हो। फलाशामा नजेलिइकन लोकहितको लागि निःस्वार्थ भावनाले कर्म गर्ने व्यक्तिले कर्मबन्धनमा पर्नु पर्दैन भन्ने गीताको पवित्र शिक्षा अध्यात्मप्रेमीहरू एवं सार्थक जीवनका हिमायतीहरूमा अत्यन्त लोकप्रिय छ। कर्ममा निःस्वार्थता त्यसै आउँदैन त्यसका लागि सम्पूर्ण जगत्का परमाधार, सबैका परमहितैषी प्राणी मात्रका जीवनदाता परमपिता परमात्माप्रति भक्ति जागृत भएपछि मात्र यो मुक्तिद्वार साधनधाम मनुष्यजीवन प्राप्त भएकोमा कृतज्ञताको भाव जागृत हुन्छ। अनि मानिस यस जीवनलाई वरदान मान्दै र शुद्धमनले लोकहितका कार्यहरूलाई भगवत्सेवाको भावनाले सम्पन्न गर्दै पूर्णताको यात्रामा अग्रसर बन्न समर्थ हुन्छ।

भगवद्गीताले जाति, वर्ण, लिङ्ग, सम्प्रदाय आदि बाह्य उपाधिहरूप्रति निरपेक्ष रही मानव मात्रमा समताको अनुभूति गर्ने उच्चतम् आध्यात्मिक ज्ञान प्रदान गर्दछ। आफूलाई शरीर, इन्द्रिय, मन र बुद्धिभन्दा माथिको सच्चिदानन्दमय परमात्माको

अंश आत्माका रूपमा अनुभूति गर्न गीताले सिकाउँछ। विश्वमानव समाजमा शान्तिको चेतना जागृत गर्न सघाउ पुऱ्याउने मूल तात्त्विक ज्ञान प्रदान गर्ने अनमोल शिक्षा गीताबाट प्राप्त हुन्छ। सानो आकारमा भइकन पनि व्यवहार र परमार्थ दुवैमा मानवलाई कुशलतासाथ पारङ्गत गराई जीवनको सार्थकता र पूर्णता प्राप्त गरेर अन्तमा भवबन्धनबाट सदाको निम्ति मुक्त तुल्याइदिने अनमोल जीवनसाधनाले भरिएको गीतालाई गागरमा सागरको उखानसित जोडेर हेर्ने गरिएको छ। गीताका यी पवित्र शिक्षाहरूको समाजमा प्रचार हुन सके मानव जीवनलाई खुशी, शान्त र समुन्नत बनाउने दिशामा सघाउ पुग्नेछ।

कर्मठ विदुषी श्रीमती सावित्री थापाद्वारा 'श्रीमद्भगवद्गीता कर्म, ज्ञान र भक्तिको त्रिवेणी' शीर्षकमा लेखिएको गद्यमय र पद्यमय गरी दुई खण्डमा विभाजित विवेचनापूर्ण ग्रन्थ मैले सरसर्ती हेरें। आफ्नो धर्म संस्कृतिको गरिमाबाट परिचित एउटी आधुनिक युगकी प्रबुद्ध नारीको हैसियतले सावित्री थापाजीले भगवद्गीताजस्तो गहन शास्त्रको अध्ययन गरेर त्यसका प्रेरणादायी सन्देशहरूलाई 'सय थोपा गीतामृत' भन्ने अनुष्टुप शैलीका सयवटा सन्देशका थोपा भएको सरलता र मिठास दुवैले युक्त लघुकृति २०६३ सालमा प्रकाशित गर्नु भई जनचेतना जगाउन प्रयत्न गर्नु भएको पाउँदा मलाई साह्रै खुसी लागेको थियो। यस कृतिका सूत्रात्मक सन्देशहरूले गीतासन्देशको संक्षिप्त झलक बोकेको मैले अनुभव गरेको थिएँ। त्यसपछि हालै लेखिएको गीताका सारभूत शिक्षाहरू समेटिएको त्योभन्दा ठूलो यो अर्को कृति प्रकाशनको तयारीमा रहेको पाउँदा झन् प्रसन्नता भयो।

यो पुस्तक पद्यमय र गद्यमय गरी दुई खण्डमा विभाजित रहेको छ। 'भगवद्गीता' भन्ने शीर्षक रहेको पहिलो पद्यमय खण्डमा अनुष्टुपशैलीका दुई-दुई हरफका रचनाहरूले यो कृति सजिएको छ। भगवद्गीताका श्लोकहरूको अर्थलाई सकेसम्म

पूर्णरूपमा अभिव्यक्त गर्ने प्रयास यिनमा गरिएको छ। दोस्रो खण्डमा रहेको 'गीतासारसंक्षेप' भन्ने शीर्षकको गद्यात्मक कृतिले गीताका सारपूर्ण शिक्षाहरूलाई प्राञ्जल नेपाली भाषामा प्रस्तुत गरेको छ। उहाँको उक्त गद्यात्मक कृति पढ्दा लेखिकाज्यूले गीताको सन्देशलाई बुझ्न निकै मिहिनत गर्नुभएको मात्र होइन धेरै बुझ्नु पनि भएको स्पष्ट प्रतीत हुन्छ। सबै श्लोक नराखी तत् तत् विषयका मुख्य मुख्य श्लोक छानेर तिनको अर्थ उहाँले यसमा दिनुभएको छ। यस कृतिले गीता पढ्न र सम्झिन चाहनेहरूलाई धेरै सजिलोसित गीताभित्र प्रवेश गराइदिन सक्ने सम्भावना बोकेको मैले पाएको छु। यी दुवै कृतिहरूले विदुषी लेखिकाको आध्यात्मिक क्षेत्रमा पनि उल्लेखनीय भूमिका खेल्ने उदात्त रहर मनमा तरङ्गित भएको मैले पाएँ।

सावित्री थापाज्यूमा सामाजिक सेवाप्रति अगाध रुचि रहेको र सोहीबमोजिम उहाँ अहिलेसम्म पनि त्यस क्षेत्रमा निरन्तर सक्रिय रहनुभएको मैले पाएको छु। वास्तवमा समाजसेवाजस्तो समष्टिकल्याणप्रति समर्पित रहनुपर्ने क्षेत्रका लागि भगवद्गीतालाई एउटा भावनात्मक आचारसंहिताका रूपमा धेरै अघिदेखि मान्यता प्रदान गरिँदै आएको छ। गीतामा अन्तर्निहित लोकसंग्रहका भावनाहरूको मर्म सामाजिक क्षेत्रका कार्यकर्ताहरूमा परिचित गराउन सम्भव हुने हो भने मानवताको रक्षासँगै सामाजिक क्षेत्रमा आध्यात्मिक चेतनाप्रतिको आकर्षणसमेत बढ्न गई सामाजिक समुत्थानमा ठूलो सघाउ पुग्ने निश्चित छ।

शक्ति स्वरूपा नारीले रुचिसाथ अगुवाई गरेमा जुनसुकै क्षेत्रमा पनि जागृति ल्याउने क्रममा सफलताले साथ दिएको पाइएको छ। हाल सामाजिक सुधारको क्षेत्रमा सक्रिय रहेका आमा समूहहरूबाट सञ्चालित दुर्व्यसन उन्मूलन र अन्य सुधार अभियानसँगै धार्मिक आध्यात्मिक क्षेत्रमा नारीले पुऱ्याएका

योगदानहरूले यस कुरालाई उजागर तुल्याएका छन्। सावित्री थापाजीबाट भएको आध्यात्मिक कृतिरचनातर्फको यो रुचि र उत्साहले पनि नारी समुदायलाई जागृत तुल्याउनमा उल्लेखनीय उद्बोधन दिनेछ भन्ने मलाई लागेको छ।

वास्तवमा उपनिषद् युगका गार्गी, मैत्रेयीजस्ता प्रबुद्ध अध्यात्मप्रेमी विदुषीहरूकै बहिनीको रूपमा आफूलाई प्रस्तुत गर्न तम्सिने यो उत्साह अगि बढ्दै गएमा नारी हस्ताक्षरको यो पवित्र अभियानले समाजको सर्वाङ्गिण समुत्थानमा रुचि राख्ने नारी चेतनामा ऊर्वरता थप्ने आशा लिन सकिन्छ। सावित्री थापाजीको आशास्पद उत्साह जागृत बनिरहोस् र नारी जगत्मा आध्यामित्मक आस्थाको उज्यालो छर्ने यस्ता अरु रचनाहरू उहाँबाट रचित हुँदै रहुन् भनी हार्दिक शुभकामना टक्र्याउँछु।

२०६५/०२/०५

खेमराज केशवशरण

आचार्य खेमराज केशवशरण
केशवकुटी ६९२, धर्मभक्तमार्ग
सिफल, काठमाडौं-७

# मेरो भनाइ

संसारमा "श्रीमद्भगवद् गीता" सबैभन्दा बढी लोकप्रिय तथा सर्वोत्तम ग्रन्थ मानिएको छ। यो सबै प्रकारका धर्मग्रन्थ तथा वेद, उपनिषद् आदिको सार हो। गीतालाई सर्वमान्य आत्मदर्शन संगीता पनि भनिन्छ। यो स्वयम् भगवान् श्रीकृष्णको मुखबाट निस्किएको उपदेशहरूको सँगालो हो, जुन अति गहन, अमूल्य, अथाह र अक्षय छ। गीता एक महान् दार्शनिक ग्रन्थ हो, जसले अन्य सबै दर्शनशास्त्रलाई मार्गदर्शन गर्दछ। यसले सबै प्रकारका दर्शन, सिद्धान्त र विचारको समन्वय गर्दछ। गीतालाई विश्वका ठूलाठूला दार्शनिक, वैज्ञानिक, चिन्तक तथा माहानुभावहरूले आफ्नो प्रेरणाको स्रोत तथा मार्गदर्शकको रूपमा स्विकारेका छन्। गीता सिर्फ धर्मग्रन्थमात्र नभई यो कर्मग्रन्थ पनि हो। यसले सबै काल, परिस्थिति र देशका मानिसहरूलाई आ-आफ्नो कर्म गर्न कर्तव्यमा लाग्न र सही बाटोको अनुशरण गर्न प्रेरित र मार्गदर्शन गरेको छ। हिन्दु धर्मावलम्बीका लागि मात्र नभई धर्म, वर्ण, जातजाति अर्थात् सम्पूर्ण मानवका लागि सत्मार्गमा लाग्न गीता प्रेरक बन्नसकेको छ। यसले कुनै निश्चित धर्म र सम्प्रदायमा सीमित नभई सम्पूर्ण मानवधर्मलाई समेटेको छ। गीताले कर्म, भक्ति र ज्ञानको माध्यमबाट मानिसलाई यस जन्ममा सुख, शान्ति र सार्थक जीवन बिताउने र अन्त्यमा मोक्ष प्राप्त गर्ने उपाय बताउँछ। यसले निष्काम कर्ममा जोड दिएको छ। गीताले मानिसलाई आ-आफ्नो कर्तव्यपथमा अग्रसर गराउने र कर्मबन्धनबाट उसलाई मुक्त गरी यस जीवनमा सुखशान्तिपूर्वक बाँच्न सक्ने र अन्तमा मुक्तिको अवसर प्रदान गर्दछ। जसले गीताको उपदेशलाई राम्ररी बुझेको छ त्यस्तो व्यक्ति कहिल्यै आत्तिने, मात्तिने र झोक्राउने हुँदैन। उसले जीव

र आत्माको सम्बन्धलाई राम्ररी बुझेको हुन्छ। भगवान् श्रीकृष्णले अर्जुनलाई माध्यम बनाएर सम्पूर्ण मानवजातिलाई गीताको उपदेशद्वारा कर्तव्यबोधको सन्देश दिनुभएको छ।

'गीता' सम्पूर्ण मानवजातिको आत्मालाई शान्ति र आनन्द दिने, आध्यात्मिक चिन्तन बढाउने, जीवन र जगत्को सही स्वरूप चिनाउने, सबै धर्म, वर्ण, जातजातिबीच समभाव राख्न सिकाउने ज्ञान, भक्ति र कर्मद्वारा मानवजीवन सार्थक बनाउन प्रेरित गर्ने एक सर्व कल्याणकारी साधन हो। भिन्नभिन्न मत, सिद्धान्त र आस्था भएका सबै खाले व्यक्तिहरूले आ-आफूले चाहेको कुरा यस ग्रन्थमा पाउन सक्दछन्। जीवनलाई सुखमय र सार्थक बनाउने सबै प्रकारको ज्ञान हामी गीताबाट प्राप्त गर्न सक्दछौं। गीताको अध्ययन, चिन्तन र मननबाट मानिसमा ज्ञान, बुद्धि र विवेकको प्रादुर्भाव हुन्छ, जसले गर्दा मानवजीवनमा आइपर्ने सुख, दुःख, भय, चिन्ता, क्रोध, लोभ, मोहबाट उसले आफूलाई प्रभावित हुन नदिई परम आनन्द र शान्तिपूर्वक बाँच्न सक्दछ। गीताको सन्देश/उपदेश कुनै व्यक्ति विशेषको लागि मात्र नभई आफ्नो कर्तव्यकर्मबाट च्यूत हुने बाटो बिराएका सम्पूर्ण मानव समाजका लागि ठूलो हितकारी र गुणकारी छ।

"कर्मगर, फलको आशा नराख", "शरीर अनित्य र आत्मा नित्य छ", "म को हुँ", "म र मेरो भ्रमबाट मुक्त होऊ", "तिमी स्वयम् कर्ता होइनौ, माध्यम मात्र हौ", "सबै कर्म ईश्वरमा अर्पण गर" जस्ता शाश्वत सर्वहितकारी र सदा उपयोगी सन्देश दिने र त्यसतर्फ अग्रसर हुन प्रेरित गर्ने एकमात्र सदाबहार ग्रन्थ "श्रीमद्भागवत गीता नै हो। 'गीता' ज्ञान भक्ति र कर्मको समन्वयात्मक व्याख्यान हो, जसले 'शुद्धं हृदय दौर्बल्यं त्यक्त्वों स्थित परम् तप' अर्थात् हृदयको दुर्बलतालाई त्यागेर कर्तव्य गर्न मानिसलाई प्रेरित गर्दछ। कर्तव्यच्यूत, अहंकार, तनाव र 'तेरोमेरो'को

द्वन्द्वबाट पीडित बन्न पुगेको आजको मानवसमाजको सुखशान्ति र मुक्तिका लागि 'गीता' एक ठूलो माध्यम बन्नसकेको छ। गीताको मूल विषयवस्तु आत्मज्ञान नै हो, जुन करिब ५ हजार वर्षअघिदेखि गुरुशिष्य परम्पराबाट प्रचलित हुँदै आएको छ।

म आध्यात्मिक वातावरणमा जन्मेको र हुर्केकोले होला सानैदेखि आध्यात्मिक चिन्तनमननले मेरो मनमस्तिष्कलाई बिथोलिरहन्थ्यो। बाल्यकालमा म मेरी स्वर्गीय फुपूज्यू 'बेटी' सँग धार्मिक प्रवचनहरू सुन्न भक्तपुर नगरभित्रका विभिन्न देवालय, शिवालयहरूमा पुग्दथें। घरमा मेरी हजुर आमा स्वर्गीय श्री हरिप्रियादेवीको अधिकांश समय धार्मिक ग्रन्थहरू गीता, रामायण, माहाभारत, सुखसागर, कल्याणजस्ता पुस्तकहरू पढ्नमा बित्दथ्यो। म हजुरआमाको छेउमा बसेर उहाँले पढ्नुभएका ती धार्मिक ग्रन्थहरूलाई बुझे पनि नबुझे पनि एकचित्तले सुन्ने गर्दथें। करिब ५ दशक अगाडी 'गीता' का उपाशक तथा वाचक ब्रम्हलीन स्वामी ईश्वरानन्दले दिनुभएको प्रवचनको दृश्य र उहाँले गाउनुभएका गीताका भजनहरू अझैसम्म पनि मेरो आँखा र मनभित्र ताजै छ। गीताको उपदेशबारे बाल्यकालदेखि मेरो मनमस्तिष्कमा एउटा खुल्दुली पैदा भइरहेको थियो। तर, गृहस्थी जीवनयात्राको क्रममा मेरो मनमस्तिष्क अन्यत्र नै व्यस्त रहन गयो, जसले गर्दा चाहना हुँदाहुँदै पनि 'गीता' बारे मैले केही बुझ्न, सिक्न र जान्न पाएकी थिइनँ, जुन मेरो जीवनका लागि दुर्भाग्य नै मान्नु पर्दछ। जीवनको उत्तरार्द्धमा आइपुगेर गृहस्थ कर्मबाट केही फुर्सद मिल्नथालेपछि मेरो मन 'गीता' बुझ्ने, जान्नेतर्फ पुन: आकर्षित हुनपुग्यो र मैले सकेसम्म गीताका पुस्तक, प्रवचन आदि पढ्न, बुझ्न र मनन गर्न थालें। जतिजति म 'गीता' लाई पढ्दै जान्छु र त्यसलाई दोहोऱ्याउन थाल्दछु, त्यतित्यति नयाँनयाँ कुराहरू बुझ्न थाल्दछु। 'गीता' जस्तो अति

गहन ग्रन्थलाई जति पढे पनि, जति बुझे पनि त्यसको गहिराइमा पुगेर तथ्य पत्ता लगाउन सकिँदो रहेनछ। गीताको ज्ञान, उपदेशलाई जति बुझे, जाने पनि पूर्णता प्राप्त हुन सक्दो रहेनछ। यो अथाहा ज्ञानको सागर हो भन्ने मेरो मान्यता रहेको छ।

वर्तमान अवस्थामा विश्व हत्या, हिंसा र द्वन्द्वबाट आक्रान्त बन्न पुगेको छ। त्यसैले मानिसको जीवन अशान्त, असुरक्षित, चिन्ता र तनावबाट आन्दोलित बनेको छ। आजका मानिसहरूमा प्रायः राजसी र तामसी गुणहरूको बाहुल्य रहेको पाइन्छ। उनीहरूको खानपिनमा राजसी र तामसी तत्त्व बढी हुने भएकाले उनीहरूको स्वभाव राजसी र तामसी हुनु स्वाभाविक पनि हो। राग, द्वेष, अहंकार तथा क्रूरता आदि यिनै राजसी तथा तामसी स्वभावका उपज हुन्, जसले गर्दा आज संसारभर झै-झगडा, हत्या, हिंसाजस्ता कार्यहरू बढिरहेका छन्। त्यसैले मानिसको जीवन भय, चिन्ता, असुरक्षा र पीडाले अस्तव्यस्त बनेको छ। बुद्ध जन्मेको हाम्रो देश नेपाल शान्ति र अहिंसाको देशको रूपमा विश्वभर आफ्नो छुट्टै पहिचान बनाउन सफल भएको थियो। तर, केही वर्षयतादेखि यो देश हत्या, हिंसा, अशान्ति र अस्थिरताको थलो बन्नपुगेको छ। आज तमाम नेपाली जनता भय, त्रास, अशान्ति, असुरक्षा, कुण्ठा र चिन्ताबाट ग्रसित भएका छन्। यस्तो अवस्थामा 'गीता' को उपदेशमात्र एक यस्तो उपदेश हो, जसले मानिसलाई यो अवस्थाबाट पार लगाउन सहयोग पुऱ्याउँछ।

गीताको उपदेशको पालना गर्नाले अर्थात् गीताले देखाएको बाटोमा चल्नाले मानिसमा आत्मशुद्धि र मानवीय गुण अर्थात् सद्गुणहरूको प्रकट हुन्छ, कर्तव्य र अकर्तव्यको ज्ञान हुन थाल्दछ जसले गर्दा मानिसको मनबाट कुकर्म, कुविचार, कुबुद्धिहरू हट्न गई शान्त, सुन्दर र सुरक्षित मानवसमाजको स्थापना गर्न मद्दत गर्दछ। गीताजस्तो सर्वहितकारी संहिताको अनुशरण गर्नाले

हामी देहात्म बुद्धि (भौतिक शरीरलाई म र मेरो सम्झने) भएका व्यक्तिहरूले यस जीवनमा सुख, शान्ति र मृत्युपछि मोक्ष प्राप्त गर्नसक्नेछौं। यस कुरालाई स्वयं श्रीकृष्णले गीतामा व्यक्त गर्नुभएको छ र अन्य शास्त्र, ग्रन्थ, उपनिषद् आदिले पनि पुष्टि गरेका छन्। यस्तो अति महत्वपूर्ण उपयोगी तथा सर्वकल्याणकारी उपदेश (गीता) लाई सर्वसाधारण मानिसहरू (जो संसारी माया, मोह, आशक्ति र अहंकारको जन्जालमा फसेर दुःख पाइरहेका छन्) ले पढ्न, बुझ्न र जान्न पाए भने अवश्य पनि उनीहरूको ठूलो कल्याण हुनसक्ला भन्ने मेरो विश्वास रहेको छ।

श्रीमद्भगवद् गीताको भाषानुवाद यसअघि धेरै नेपाली विद्वत्वर्गबाट भएको छ तापनि अर्को एउटा थप भेटको रूपमा जनसाधारणले बुझ्नसक्ने सरल नेपाली भाषामा यसलाई लिपिबद्ध गर्न सकिएमा सर्वसाधारणले पनि गीताको उपदेशलाई बुझ्न र जान्न सक्ने र यसले दिएको ज्ञानको अनुशरण गरेर यस लोक र परलोक दुवैलाई सुधार्न सक्ने थिए भन्ने मनमा लागेर मैले यो पुस्तक लेख्ने प्रयास गरेकी हुँ। 'गीता' स्वयं प्रकाशपुञ्ज हो र त्यसमाथि प्रकाश पार्न खोज्नु सूर्यलाई बत्ती देखाउनु जस्तै हो। आध्यात्मिक दर्शन, साहित्य र ग्रन्थहरूको यथेष्ठ अध्ययन र ज्ञान प्राप्त गर्न नसकेकी मजस्ती साधारण व्यक्तिले 'गीता' जस्तो कर्म, भक्ति र ज्ञानको अथाह तथा अक्षय स्रोतलाई आफ्नो छोटो बुद्धि र विवेकले जेजस्तो बुझ्न, जान्न र पाउन सके सोही कुरालाई सर्वसाधारण नेपाली जनताले बुझ्न र जान्न सकून् भन्ने उद्देश्यबाट यो पुस्तक लेख्ने प्रयास गरेकी हुँ। 'गीता' को अध्ययनबाट हाम्रा दाजुभाइ, दिदीबहिनीहरूले आफ्नो जीवनलाई सुखमय र सार्थक बनाउन सकून् र हरेक व्यक्तिमा सद्गुणको विकास भई नेपाली समाज समुन्नत र समृद्ध बन्न सकोस भन्ने कामनासहित यो पुस्तक जनसमक्ष प्रस्तुत गर्ने जमर्को गरेकी

हुँ। यो पुस्तकको अध्ययन, मनन र चिन्तनबाट नेपाली जनतामा अलिकति पनि ज्ञान, विवेक र कर्तव्यबोध, जसको अभावले आज सम्पूर्ण राष्ट्र संकटग्रस्त अवस्थामा पुगेको छ, आउन सक्यो र उनीहरूलाई कर्म, भक्ति र ज्ञान मार्गमा अग्रसर हुने प्रेरणा दिन सक्यो भने मैले आफ्नो सानो प्रयास सफल भएको मान्ने छु। यो पुस्तक लेख्नको लागि आवश्यक सहयोग पुऱ्याउने मेरा पति श्री भोलामान सिंह थापा, छोरी भावना विष्ट, छोरा सुदीप सिंह थापा, बुहारी सुजान थापा, मान सिं थापाका अतिरिक्त मलाई सधैं आफ्नो आशीर्वादबाट शक्ति प्रदान गर्नुहुने मेरो स्वर्गीय पिता श्री गोविन्दहरि जंगम र माता श्री जमुना जंगमप्रति हार्दिक आभार व्यक्त गर्दै पुस्तक प्रकाशनमा सहयोग पुऱ्याउने भाई भरत जंगम र अन्य सबै सम्बन्धित महानुभावहरूमा हार्दिक आभारसहित धन्यवाद ज्ञापन गर्दछु। साथै प्रकाशक **"शान्ति आश्रम बृद्ध सेवा कोष"**लाई हार्दिक धन्यवाद दिन चाहन्छु।

**"त्वदीयं वस्तु गोविन्द तुभ्यमेव समर्पय"**

सावित्री जङ्गम थापा
मिति :- २०६५, भाद्र

# विषयक्रम



## गीता सारसंक्षेप गद्यमा

प्रथम अध्याय

## विषादयोग

**धृतराष्ट्र सञ्जयलाई सोद्धछन्**

लडाइँ गर्ने हेतुले, जमेका कुरुक्षेत्रमा
के हुँदैछ सञ्जय, कौरव पाण्डवबीचमा
१

**सञ्जय भन्दछन्**

व्यूह रचनायुक्त, पाण्डव सेना जसै देखी
दुर्योधन भन्दछन्, द्रोणचार्य छेउ पुगी
२

हेर्नुहोस् गुरुवरज्यू, व्यूहाकार सेना त्यहाँ
धृष्टद्युम्नले रक्षित, वीर पाण्डव त्यो सेना
३

महारथी जति जे छन्, एकत्रित सबै यहीं
अर्जुनझैं शुरवीर, राजा विराट सात्यकी
४

महाबली पराक्रमी, योद्धा धेरै ती जेजति
सामेल छन् सबै राजा, शैव्य कुन्तिभोज पनि
५

राजा द्रुपद विक्रान्त, महावीर पुरुजित
जुटेका छन् अभिमन्यू, युधामन्यू सबै वीर
६

आचार्य ! सुन्नुहोस् भन्छु, सबै नाम जति पनि
हाम्रा साथमा जोजे छन्, योद्धाहरू सेनापति
७

द्रोणाचार्य, कृपाचार्य, भीष्म, कर्णहरू पनि
अश्वस्थामा, विकर्ण छन्, शुरवीर सबै यहीं
८

शुरवीर साहसिला शस्त्रज्ञाता पनि ती हुन्
आफ्नो जीवन अर्पने, मेरा लागि सबै ती छन्
९
भीष्मको आगुवाइमा, जुट्नाले ती बीरहरू
अवश्य हार खानेछन्, पाण्डवका ति सेनाहरू
१०

**दुर्योधन आफ्ना सेनाहरूलाई आज्ञा गर्दछन् –**

योद्धाहरू सबै आफ्नो मोर्चाबन्दीको ढालले
भीष्मपितामहलाइ, सुरक्षा दिनू होसले
११
भीष्मपितामह उठे, होसजोश बढाउँदै
उच्च गर्जन सिंहझैं, शंखनाद घन्काउँदै
१२
यसरी स्वरले ठूलो, शंखघण्ट ढोल बजे
मृदङ्ग नगरा आदि, बाजा जे छन् सबै बजे
१३
सेतो घोडाले सजित, रथमा बस्ने कृष्णले
साथमा पनि अर्जुनले, भूमि गुन्जाए शंखले
१४
घन्काए कृष्णले धर्ती, पाञ्चजन्य शंख फुकी
शंखहरू बजाउँछन्, अर्जुन भीम दुवै पनि
१५
कुन्तिपुत्र युधिष्ठिर, शंख आफ्नो ती फुक्दछन्
"अनन्त विजय" नाम, भेणी पुष्पक घन्किन्छन्
१६
सहदेव, नकुल दुवै, फुर्तीले शंख फुक्दछन्
सुघोष शंखको साथै, सबै शंख ती घन्किन्छन्
१७

धनुर्धर, काशीराज, माहारथी शिखण्डी ती
धृष्टद्युम्न विराटराजा!, द्रुपद अनि सात्यकी
१८
द्रौपदीका पाँचै छोरा, अभिमन्युसहितले
घन्काउन पृथ्वी थाले, आ-आफ्नो शंखनादले ॥
१९
शंखनादको ध्वनिले, धरा आकाश गुन्जियो
असंख्य कुरु सेनाको, हृदय त्यहाँ तर्सियो ॥
२०
मोर्चाबन्दी सबैतिर, आफन्त छन् जतातते
लिई धनुष हातमा, तयार भए अर्जुन जसै ॥
२१
सम्बन्धीदेखि सर्वत्र, अर्जुन बोल्छन् शोकमा
लैजाउ रथलाई कृष्ण ! दुवै सेनाको बीचमा ॥
२२
हेर्छु म विपक्षी योद्धा, प्रभु राख रथ यहीं
कस्तासँग म लड्दैछु, हेरूँ को छन् कहाँ कति ॥
२३
बुद्धिहीन दुर्योधनका, हितैषी छन् को के कति ?
देखूँ प्रभु ! योद्धालाई, राजा छन् आएका कति ॥
२४
धृतराष्ट्र छेउ बस्दै, सञ्जय दृश्य बताउँछन्
घटना जोजति देखे, दृश्य सबै सुनाउँछन् ॥
राजन् ! श्रीकृष्णले आफ्नो, रथलाई घुमाएर
राखी दिनुभो त्यस्लाई, भीष्मद्रोणबीचतिर ॥
२५
खडा गर्दै रथलाई, सबै योद्धाका सामुमा
कृष्ण भन्दछन्, पार्थलाई, हेर सैन्य ती शत्रुका ॥
२६

बाबुबाजे बराजु ती, सबै काका गुरुहरू
दाजुभाइ भतिजा छन्, वरिपरि सखाहरू ॥
२७

मामा छन् ससुरा नाता, पर्ने त्यस्तै धेरै अरु
अर्जुन जब हेर्दछन्, देख्दछन् आफन्तैहरू ॥
२८

उपस्थिति त्यहाँ देखी, आफ्ना बान्धव युद्धमा
अर्जुन कृष्णका सामु बिन्ती गर्छन् शोकमा ॥
२९

देखी स्वजन मान्यवर, युद्धको भूमिमा जसै ।
जोड्दै हात श्रीकृष्णमा, बोल्छन् अर्जुन काँपदै ॥
३०

हुँदैछ शिथिल अङ्ग, मुख गयो मेरो सुक्दै
रोमान्च अति कम्पन छ, इन्द्रियमा मेरो खुबै ॥
३१

सकिनँ थाम्न गाण्डिव, गयो भुइँमा खुस्केर
जमिन काँपेको देख्छु, सक्दिन बस्न अडेर ॥
३२

जल्दैछ शरीर मेरो, सारा आगोले पोलेर
सक्दिन केही गर्न है, द्विविधामा म परेर ॥
३३

हे केशव ! देख्दिन म, राम्रो लक्षण भोलिको
देख्दिन हित आत्माको, स्वजन मारी शान्ति यो ॥
३४

चाहाना छैन हे कृष्ण ! विजय पाई सुखको
देख्दिन लाभ पाएर, राज्यभोग यो देहको ॥
३५

पुज्य गुरु, दाज्युभाइ, बाजे र बराजु पनि
देख्दैछु ससुरा, मामा, आफन्त ती सबै यहीं ॥
३६

आफू मरे पनि कृष्ण ! अरुलाई म मार्दिन
त्रिलोकै पाई के गर्नु, मारी सम्पूर्ण स्वजन ॥
३७
प्रशन्न मन हुँदैन, आफन्तलाई नासेर
पाप ठूलो पो लाग्नेछ, सन्तान आफ्ना मारेर ॥
३८
धृष्टराष्ट्रका छोराहरू, आफ्ना वान्धव मारेर
माधव ! मिल्दैन सुख है, सन्तान हत्या गरेर ॥
३९
मित्रद्वेष कुलनाश, कुकर्म हुन् दुवै प्रभु
भ्रष्टचित्त हुने तिनले, के बुझून् ती दोषहरू ॥
४०
पाप दोष बुझीहिंड्ने, हामीजस्ता यी वीरले
पापाचार नहोस् भन्दै, विचार गर्नु छ होसले ॥
४१
सनातन कुलधर्म यो, मासिन्छ कुलनाशले
फैलिन्छ पापको ज्वाला, कुलमा धर्मनाशले ॥
४२
पाप बढ्दै जाँदा यहाँ, दूषित बन्छन् स्त्रीहरू
फैलिन्छन् कुलमा कृष्ण ! वर्णशंकर वंशहरू ॥
४३
वर्णशंकर बन्नेछन्, माध्यम कुलनाशको
रिसाउँछन् पितृहरू, नपाई पितृदान त्यो ॥
४४
नपाई तर्पणश्राद्ध, पितृ जान्छन् अधोगति
हुनेछ भोलि त्यो कर्म, कुललाई नास्ने मति ॥
४५
हाम्रो धर्म सनातन, नासिनेछ तुरुन्तै नै
वर्णशंकर बढ्नाले, मासिन्छ कुलधर्म नै ॥
४६




युद्धभूमिमा आफन्तलाई देखेर अर्जुन युद्ध नगर्ने अठोट गरी श्रीकृष्णमा विन्ती गर्दै

नासिन्छ उसको कुल, जस्को स्वधर्म मासिन्छ
हुनेछ नर्कको बास, यस्तो कृष्ण है सुनिन्छ ॥
४७

चिन्तित पार्थ ति बोल्छन्, पाप म कसरी गरूँ
राज्यसुख भोग्नलाई, बन्धु म कसरी मारूँ ॥
४७

शास्त्रयुक्त कौरवले, मारे वेश मलाई छ
शस्त्ररहित मेरा लागि, मर्नु बरु श्रेय छ ॥
४८

चिन्ता लिएर मनमा, छोड्दै धनुष हातले
अर्जुन रथको कुनामा, बस्छन् थचक्क शोकले ॥
४९

## द्वितीय अध्याय
# सांख्य योग

**सञ्जय भन्छन् –**

आँखाभरि आँसु लिइ, शोकाकुल र चिन्तित
अर्जुनलाई देखेर, बोल्नुहुन्छ जनार्दन ॥
१

न यसले स्वर्ग नै मिल्छ, न कीर्ति न बिरोचित
किन खिन्न भयौ पार्थ ! के हो यस्को त्यो कारण ॥
२

सुहाउन्न नपुंसकता, तिमीलाई हे अर्जुन
मनको दुर्बल्य त्यागी, युद्ध गर्न अघि बढ ॥
३

**अर्जुन भन्दछन् –**

मान्यवर पितामह गुरुलाई, मधुसुदन ।
कसरी वाणले हान्नु, दुवै मेरा ती पुज्य छन् ॥
४

नमारी बरू भिक्षाको, अन्न खान म राजी छु ।
मारेमा मान्य ती जनलाई, पाप पो म भेट्नेछु ॥
५

लडाइँ गर्नु, राम्रो हो अथवा नराम्रो त्यो ।
जान्दिनँ यो पनि कृष्ण ! जित कस्को हुने पो हो ॥
६

आफ्नै बान्धव मारेर, कुलको छैन भलाइ ।
बन्धु मारेर बाँच्नको, छैन रहर मलाई ॥
७

अस्थिर मन भएको, सम्झी अज्ञानी मलाई
मार्ग देखाऊ सही लौ, मेरो संझेर भलाई ॥
८

पर्छु म शरण तिम्रो, सत्मार्ग देखाऊ लौ।
उचित शिक्षा ज्ञान त्यो, बताउ मलाई लौ॥
९
निष्कण्टक राज्यभोग, ऐश्वर्य पनि प्राप्त छ।
राज्यसुख मिले पनि, चोट व्यथा छिपेको छ॥
१०
मनका शोक चिन्ताले, इन्द्रिय यो सुकाउने।
उपाय देख्दिन केही, शोकलाई हटाउने॥
११

**सञ्जय धृतराष्ट्रलाई भन्छन्–**

कृष्णसँग अर्जुनले, नरम बोली बोलेर
गर्दिन युद्ध गोविन्द, भन्दै पन्से ती नुहेर॥
१२
दुई सेनाबीच त्यहाँ, शोकाकुल देखेपछि।
बोल्छन् कृष्ण हाँसेर, पार्थसामु गई उनी॥
१३
अर्जुन ! तिमी गर्दै छौ, शोक नगर्ने कुरामा।
बोल्दै छौ बोली अज्ञानी बन्दै व्यर्थको कुरामा॥
१४
उचित हुन्न शोक यो, मारिने मर्ने कुरामा।
गर्दैनन् है ज्ञानीहरू, चिन्ता नगर्ने कुरामा॥
१५
सत्य छैन कुरा यस्तो, हिजो हामी थिएनौं कि
साँचो यो पनि होइन, भोलि हामी रहन्नौं कि॥
१६
बालवृद्धयुवा देह, लिन्छन् सबै ती जीवले।
शरीर बदलिन्छ नै, मोह नगर्नु धीरले॥
१७

इन्द्रिय सुखदुःख यो, अनित्य र क्षणिक छ ।
त्यसैले तिमी हे पार्थ ! धैर्य गर जसो हुन्छ ॥
१८
सुख दुःख सम देख्ने, यस्ता धिर पुरुष नै ।
इन्द्रिय विषयबाट, मुक्त भै मोक्ष हुन्छ है ॥
१९
टिक्दैन असत्य सधैं, सत्य नासिन्न बुझ त्यो ।
तत्वज्ञानी दुवै कुरा, तत्वद्वारा देख्छ त्यो ॥
२०
जो नित्य सर्वव्यापी छ, त्यो तत्व बुझ अर्जुन ।
जो सदा अविनाशी छ, सकिन्न त्यो नासन ॥
२१
आत्मा शाश्वत नित्य छ, शरीर यो अनित्य छ ।
पार्थ ! त्यसैले लड है, तिम्रो त्यसैमा हित छ ॥
२२
जो मारें जो मर्‍यो भन्छौ, अज्ञानता दुवै हो यो ।
आत्मा न मर्छ, मारिन्छ, मनको भ्रममात्र हो ॥
२३
आत्मा न कहीं जन्मिन्छ, न मर्छ यो घरीघरी ।
नित्य अमर आत्मा हो, मर्दैन यो देह मरी ॥
२४
आत्मा नित्य अविनासी , भन्ने कुरा जो बुझ्दछ ।
यस्तो व्यक्ति धनन्जय ! न ऊ मारिन्छ, मार्दछ ॥
२५
पुरानो कपडा फेरेर, नयाँ लुगा लगाएझैं ।
जीर्ण शरीर त्यागेर, नयाँमा आत्मा पस्छ है ॥
२६
अमर यो आत्मालाई, काट्न सक्दैन शस्त्रले ।
न यो जल्दछ आगोले, न गल्छ जलवायुले ॥
२७

सकिन्न भेदन यस्लाई, न त सकिन्छ छेडन ।
आत्मा सदा अचल छ, सर्वव्यापी सनातन ॥
२८
अचिन्तन अविकार, सम्झी आत्मा हे भारत ।
डुबेर शोकमा बस्नु, व्यर्थ छ लौ तिमी बुझ ॥
२९
आत्माको जन्म मृत्युमा, छ विश्वास भने पनि ।
तिम्रो लागि उचित छैन, यस्तो शोक गर्नु पनि ॥
३०
जो जन्मिन्छ, त्यो मर्दछ, जो मर्दछ त्यो जन्मिन्छ ।
प्रकृतिको नियम हो, शोक गर्नु है व्यर्थ छ ॥
३१
थिएन जन्म पहिले, हुँदैन मृत्युको पछि
अहिले मात्र देखिन्छ, यसमा शोक किन अनि ॥
३२
आत्मातत्वका बारेमा, कोही ज्ञानी ती जान्दछन् ।
सुन्ने जान्ने बुझ्ने ती, अज्ञानैसरी बन्दछन् ॥
३३
सबैका देहमा बस्ने, अमर आत्मा यो नित्य छ ।
शोक गर्नु यसका लागि, तिम्रो लागि अयोग्य छ ॥
३४
कुलधर्म तिमीले सम्झी, शोक गर्नु त व्यर्थ छ ।
कर्तव्य क्षेत्रीको लड्नु, भलो तिम्रो त्यसैमा छ ॥
३५
यो यस्तो युद्ध हो पार्थ, स्वर्गद्वार जहाँ खुल्दछ ।
भाग्यमानी ती क्षेत्री हुन्, जसले युद्ध स्विकार्दछ ॥
३६
धर्मयुद्ध तिमीले यदि, गर्दैनौ भने पन्छेर ।
पापको भारी बोक्नेछौ, बस्छौ कीर्ति गुमाएर ॥
३७

सम्झनेछन् सबै जनले, अकीर्ति कायर त्यो ।
मृत्युभन्दा कठिन हुन्छ, तिमीलाई सहन यो ॥
३८

सबको नजरमा पनि, अति डरछेरुवा तिमी ।
युद्धबाट डराएको, मानिन्छौ भगुवा तिमी ॥
३९

तिम्रा वैरीहरू बोल्छन्, नबोल्ने बचनै कति ।
निन्दा गाली सुनी बस्दा, दुःखकष्ट हुन्छ अति ॥
४०

स्वर्ग, राज्य दुबै मिल्छ, युद्ध हार्दा, जिते पनि ।
त्यसैले युद्धका लागि, पार्थ ! अघि सर तिमी ॥
४१

सुखदुःख, लाभहानी, जित हारमा सम रही ।
युद्ध गर्दा तिमीलाई, लाग्दैन पाप कसैगरी ॥
४२

निष्काम कर्मको ज्ञान, दिएको छु बुझ सखे ।
कर्मबन्धन त्यागेर, कर्मयोगी बन प्रिये ॥
४३

न हानी न पर्छ बिघ्न, कर्मयोगमा जो स्थित छ ।
जन्म, मृत्यु, भयबाट, सदा मुक्त त्यो बन्दछ ॥
४४

निष्काम कर्मयोगीको, बुद्धि हुन्छ सदा स्थिर ।
अबिबेकी सकामीको, हुन्छ बुद्धि नै अस्थिर ॥
४५

जो भोग आशक्तिमा रम्छ, कर्मफल चाहन्छ जो ।
स्वर्ग प्राप्ति र भोगादि, उसको बन्छ लक्ष्य त्यो ॥
४६

स्वर्गसुखलाई जस्ले, ठूलो मान्यता राख्दछ ।
जो कर्मफलको आशा, राख्दै त्यसमा लिप्त छ ॥
४७

आशक्ति युक्त मान्छे जो, रम्छ ऐश्वर्यमा अति ।
त्यस्ता व्यक्तिको बुद्धि, हुन्न स्थिर कहीँ कति ॥
४८

अनाशक्त भई पार्थ, भोगादिको त्याग गर ।
हर्षशोकरहित तिमी, नित्य लौ प्रभुमा रम ॥
४९

सागर पाएपछि जसै, नदीको महत्व छ के ?
ब्रह्मतत्व बुझेपछि, वेदादि ज्ञान हुन्छ के ? ॥
५०

कर्ममा अधिकार तिम्रो, होइन फलमा बुझ ।
फलको इच्छा त्यागेर, कर्मयोगी तिमी बन ॥
५१

कार्यसिद्धि असिद्धिमा, सम भै बुद्धि योगले ।
कर्मयोगी बन पार्थ ! अनाशक्त भै चित्तले ॥
५२

निष्काम कर्म हो श्रेष्ठ, सकाम कर्म नीच छ ।
बुद्धियोगी बने साथी, जीवन सार्थक बन्दछ ॥
५३

समबुद्धि हुने मानिस, पापपुण्यदेखि सधैं ।
मुक्त भई परमात्मामा, मिल्नेछ समयोगी भै ॥
५४

समबुद्धि हुने ज्ञानी, फलको आश त्यागदछ ।
कर्म बन्धन तोडेर, देवपद प्राप्त गर्दछ ॥
५५

हुन्छ जब बुद्धि निर्मोह, भोग इच्छा हट्दछ ।
वैराग्य तब नै मिल्छ, भोग इच्छा जब मर्दछ ।
५६

विचलित बुद्धि तिम्रो यो, ईश्वरमा जब स्थिर छ ।
तब परमात्मासँग त्यो, नित्य साक्षात्कार बन्दछ ॥
५७

**अर्जुन सोध्दछन् –**

के हो लक्षण योगीको, स्थिर बुद्धि भएको जो ? ।
उसको बसाइ चलाइ, केकस्तो है हुन्छ त्यो ? ॥
५८

**श्रीकृष्णजी भन्नुहुन्छ –**

मनका जति कामना, जस्ले त्यस्लाई त्यागदछ ।
आत्मा स्वयं जो स्थिर छ, स्थितप्रज्ञ ऊ बन्दछ ॥
५९

विचलित हुन्न व्यक्ति जो, सुख-दुःख सम रही ।
निर्भय छ जो निर्विकार, स्थितप्रज्ञ हो त्यो पनि ॥
६०

शुभअशुभमा जस्को, मन अविचलित छ ।
स्थितप्रज्ञ उही हुन्छ, रागद्वेषरहित छ ॥
६१

भोगबाट इन्द्रियलाई, सर्वाङ्ग कछुवाले झैं ।
समेट्छ जसले पार्थ, बन्नेछ स्थिरबुद्धि है ।
६२

हुँदैन आशक्तिको नास, इन्द्रियादि निवृत्तले ।
स्थितप्रज्ञको आशक्ति नासिन्छ प्रभुकृपाले ॥
६३

आशक्ति नहटेसम्म, इन्द्रिय बलवान् बनी ।
बलैले हर्दछ यस्ले, विद्वानको मन पनि ॥
६४

इन्द्रिय वशमा राखी प्रभुमा स्थित हुन्छ जो ।
अनाशक्त भई पार्थ, बन्दछ स्थितप्रज्ञ त्यो ॥
६५

विषय चिन्तन गर्छ जो, त्यसले आशक्ति ल्याउँछ ।
हुन्छ आशक्तिमा काम, कामले क्रोध डाक्दछ ॥
६६

मुर्ख भइन्छ क्रोधले, क्रोधले ल्याउँछ विस्मृति ।
बुद्धिनाश गरिदिन्छ , विस्मृतिले विनाश पनि ॥
६७
अन्तस्करण इन्द्रियादि, वशमा जो राख्दछ ।
रागद्वेष रहित पार्थ ! प्रशन्न त्यो बन्दछ ॥
६८
प्रशन्न चित्त छ जस्को, दुःख त्यसको हट्दछ ।
यस्ता कर्मयोगीहरूको, प्रभुमा बुद्धि टिक्दछ ॥
६९
इन्द्रियवश नहुनेको, हुँदैन बुद्धि भावना ।
भावबिना न शान्ति छ, शान्तिबिना सुख कहाँ ॥
७०
पानीमा तैरेको डुङ्गा, हावाले डग्मगाएझैं ।
विषयेन्द्रियले बुद्धि, डग्मगाउँछ त्यसरी नै ॥
७१
विषयबाट इन्द्रिय, वशमा जो राख्दछ ।
त्यस्तो पुरुषको पार्थ ! बुद्धि स्थिर त्यो बन्दछ ॥
७२
संसारी प्राणीको रात्रि, बन्छ ब्रह्मज्ञानीको दिन ।
तत्वज्ञानीको रातमा, जाग्छन् ती संसारीजन ॥
७३
नदीको सब त्यो पानी, सागरमा पुगी मिल्दछ ।
विकारशून्य भोगादि, स्थितप्रज्ञमा बिलाउँछ ॥
७४
रागद्वेष अहंकार, बशमा जस्ले राख्दछ ।
त्यस्ता निर्विकार व्यक्ति, शान्तिपदमा पुग्दछ ॥
७५
ब्रह्मज्ञानी छ व्यक्ति जो, प्रभुमा स्थित बन्दछ ।
मोहमा नफसी उस्ले, ब्रह्म आनन्द पाउँछ ॥
७६

## तृतीय अध्याय
# कर्मयोग

**अर्जुन कृष्णसँग भन्दछन् –**

कर्मभन्दा पनि श्रेष्ठ 'ज्ञान' भन्छौ भने तिमी ।
आग्रह किन गर्दैछौ, भन्दै कर्मयोगी बन ॥
१
तिम्रो वचनले मेरो, बुद्धिविवेक बढ्दैछ ।
कल्याणकारी मेरा लागि, बताऊ जे जस्तो छ ॥
२

**श्रीकृष्ण भन्नुहुन्छ,**

ज्ञानयोगी कर्मयोगी, निष्ठा हुन् लोकमा दुवै ।
गर्छु म सविस्तार पार्थ ! व्याख्या निष्ठाका ती सवै ॥
३
कर्म नगरी कसरी, कर्मसिद्धि त्यो पाइन्छ ।
देहाभिमान नत्यागी, कहाँ सिद्धी है मिल्दछ ॥
४
कर्मबिना पनि कोही, सक्दैन रहन यहाँ ।
प्रकृति गुणानुसार, बाध्य हुन्छ कर्म त्यहाँ ॥
५
मन विषयमा छ भने, इन्द्रिय वश भएपनि ।
त्यस्ता व्यक्ति ढोंगी हुन्छन्, जस्तो कर्म गरेपनि ॥
६
मनलाई वशमा राखी, इन्द्रियमा विरक्त भै ।
जस्ले कर्महरू गर्छ, पार्थ ! श्रेष्ठ त्यो बन्छ नै ॥
७
जीवनयापनका लागि, कर्म गर्नु उचित छ ।
शास्त्रोचित कर्म जो गर्छ, व्यक्ति श्रेष्ठ त्यो बन्दछ ॥
८

कामनायुक्त कर्महरू, कर्मबन्धन बन्दछन् ।
निष्काम कर्महरू ती, कर्मबन्धन बन्दैनन् ॥
९
ब्रह्माले मानिस यज्ञ, सृष्टि गर्दै भनेका थे ।
इच्छित् भोग अनि हित, प्राप्त हुनेछ यज्ञले ॥
१०
यज्ञकर्मादिले गर्दा देव मानिसबीचमा ।
सद्भावले दुवैको नै , हुन्छ कल्याण विश्वमा ॥
११
मान्छेलाई देवता दिन्छन्, सबै इच्छित भोगहरू ।
दातालाई  नअर्पी आफैं, खान्छिन् ती चोरहरू ॥
१२
पापलाई नै खान्छ त्यो, आफ्नै लागि पकाउँछ ।
अर्पेर यज्ञलाई जो, शेष खान्छ त्यो मुक्त छ ॥
१३
शरीर बन्छ अन्नले, वर्षाले अन्न बन्दछ ।
वर्षा डाक्दछ यज्ञले, कर्मले यज्ञ बन्दछ ॥
१४
यज्ञादि कर्म ती सारा, वेदबाटै बनेको छ ।
वेद हो प्रभुको वाक्य, यज्ञमा ब्रह्म स्थित छ ॥
१५
गर्दैन यज्ञकर्म जो, पापको भागी बन्छ त्यो ।
इन्द्रिय भोगमा रम्ने, जीवन व्यर्थ बन्छ त्यो ॥
१६
आनन्द छ आफैंमा जो, आत्मामा तृप्त हुन्छ जो ।
सन्तोष स्वयं लिन्छ जो, कर्तव्य अरु हुन्न पो ॥
१७
कर्म गर्नु नगर्नु वा, परालम्बी भए पनि ।
आत्मरामी उस्का लागि, अर्थ छैन यहाँ केही ॥
१८

जो चल्छ अनाशक्त भै, गर्छ कर्तव्य कर्म जो ।
त्यागछ आशक्तिलाई जो, ईश्वर प्राप्त गर्छ त्यो ॥
१९
निर्धारित कर्म गर्नाले, जनक सिद्धिमा पुगे ।
शिक्षा दिन जगत्लाई, पार्थ ! युद्ध तिमी गरे ॥
२०
आचरण जस्तो ठूलाको, हुन्छ त्यस्तै सबैको है ।
पछ्याउँछन् मानिसले, ठूलाको आदर्शलाई नै ॥
२१
कर्तव्य, इच्छा, आकांक्षा, चाहाना मेरा कुनै पनि ।
छैनन् तापनि हे पार्थ ! कर्तव्य गर्छु सधैंभरि ॥
२२
कर्तव्य नगर्दा मैले, ठूलो हानी भैदिन्छ है ।
सबै लोकले अर्जुन ! पछ्याउंछन् पाइला मेरै ॥
२३
कर्मच्यूत हुँदा मैले, नष्ट हुन्छन् सबै नर ।
लोकशान्ति हटिजान्छ, बढ्नेछ वर्णशंकर ॥
२४
अज्ञानी व्यक्तिको जस्तै, ज्ञानीले कर्म गर्दछ ।
तर अनाशक्त भई त्यो, उसले कर्म गर्दछ ॥
२५
भ्रममा नपार्नु ज्ञानीले, बुद्धिलाई सकामीको ।
शास्त्रानुसार कर्मगरि, प्रेरक बन्नु है लोकको ॥
२६
प्रकृति गुणले सम्पन्न, भएका कर्म ती सबै ।
अहंकारी त्यो व्यक्तिले, 'कर्ता' ठान्छ स्वयं आफैं ॥
२७
परमसत्य बुझेर जो, कर्मको भेद जान्दछ ।
इन्द्रिय भोगकर्मको, आशक्ति त्यस्ले त्यागदछ ॥
२८

अज्ञानी जो आशक्त भै, भौतिक कर्ममा रम्दछ ।
विचलित नहुनु ज्ञानीले, अज्ञानी जस्मा रम्दछ ॥

२९

जस्तो कर्म तिमी गर्छौ, ममा गरी समर्पण ।
क्रोध, लोभ, शोकविना कर्म गर हे अर्जुन !

३०

उपदेश मेरो जस्ले, श्रद्धाले गर्छ पालन ।
कर्मबन्धनबाट है, मुक्त हुन्छ ऊ अर्जुन !

३१

मेरा उपदेशलाई, दोष्दै उपेक्षा है गर्छ जो ।
त्यस्ता अज्ञानी मूर्खको, व्यर्थ हुन्छ कर्मादि त्यो ॥

३२

ज्ञानीले भैं सबै आफ्नो, स्वभावअनुसार नै ।
कर्म गर्छ भने यस्मा, कसैको किन हठ है ? ॥

३३

रागद्वेष छिपेको छ, ईन्द्रियको त्यो भोगमा ।
नपर्नु वशमा तिन्को, बाधक हुन् यी मुक्तिका ॥

३४

स्वधर्म हितकारी छ, परधर्म भयावह ।
मर्नु वेश स्वधर्ममा, परधर्म अहित छ ॥

३५

अर्जुन सोध्छन् नम्र भै, मान्छे नचाहँदा पनि ।
कुकर्म किन गर्दछ, प्रेरित भै कसोगरी ॥

३६

क्रोध हो मान्छेको शत्रु, भन्नुहुन्छ श्रीकृष्णले ।
प्रेरित हुन्छ पापमा, रजोगुणी त्यो क्रोधले ॥

३७

धुवाँले आगो ढाकेझैं, ऐना ढाकेझैं धुलोले ।
मोहले ज्ञान ढाकिन्छ, गर्भ ढाकेझैं झिल्लीले ॥

३८

जीवको चेतनालाई, अतृप्त आगोले सरी ।
घेरेको हुन्छ, कौन्तेय ! वासनाले शत्रु सरी ॥
३९

इन्द्रिय, मन र बुद्धि, वासस्थान हुन् कामका ।
ढाकिएर यिनैद्वारा, भ्रमित हुन्छ मानवता ॥
४०

इन्द्रिय वशमा राखी, वासनाको दमन गर ।
ज्ञानविज्ञान नास्ने यो, कामनै हो धनञ्जय ॥
४१

इन्द्रिय मन र बुद्धि, क्रमश श्रेष्ठ छन् तिनी ।
आत्मा नै एक हो श्रेष्ठ ! सबैभन्दा पर अति ॥
४२

बुद्धिभन्दा पर आत्मा, श्रेष्ठ हो त्यो तिमी बुझ ।
बुद्धिले मन बस गर्दै, कामलाई तिमी जित ॥
४३

चतुर्थ अध्याय

# ज्ञान, कर्म र सन्यासयोग (दिव्यज्ञान)

योगको ज्ञान कृष्णले, सूर्यलाई सुनाएथे ।
सूर्य मनु इक्ष्वाकुले, क्रमैले ज्ञान त्यो सुने ॥
१

परम्परा हुँदै ज्ञान, राजर्षि आदिले बुझे ।
कालान्तरमा यी ज्ञान, प्राय लोप हुँदै गए ॥
२

पुरातन श्रेष्ठ ज्ञान, तिमीलाई म भन्दछु ।
प्रिय साथी मेरो भव्य, रहस्य यो बताउँछु ॥
३

धेरै पहिले जन्मेका, सूर्यलाई हजुरले ।
कसरी ज्ञान दिनुभो ? सोध्छन् अर्जुन नम्रले ॥
४

जन्म धेरै बितिसके, तिम्रो मेरो हे अर्जुन !
सम्झन्नौ तिमी यो कुरा, सम्झन्छु ती सबै म त ॥
५

आजन्म अविनाशी छु, स्वामी हुँ लोकको पनि ।
जन्मन्छु सबै युगमा, आफ्नै त्यो स्वरूपधरी ॥
६

जहाँ हुन्छ धर्मको नाश, अधर्म फैलिन्छ जहाँ ।
धर्म रक्षार्थ धर्तीमा, लिन्छु म औतार त्यहाँ ॥
७

उद्धार गर्न सन्तको, नास्न दुष्टको त्यहाँ ।
धर्म रक्षाका लागि नै, जन्मिन्छु म हरयुगमा ॥
८

जस्ले मेरो दिव्य जन्म, अनि कर्म जो बुझ्दछ ।
पुनर्जन्म छाडेर ऊ, मेरो धाममा पुग्दछ ॥
९

राग, भय, क्रोध जस्ले, छाडी शरण पर्दछ।
ज्ञानद्वारा पवित्र भै, प्रभु पद ऊ पाउँछ॥
१०
जो जुन भावले मेरो, भज्दै शरण पर्दछ।
दिनेछु फल म त्यस्तै, जो जस्तो कर्म गर्दछ॥
११
कर्मको फल खोज्नेले, सधैं देवादि पुज्दछ।
सकाम कर्म जो गर्छ, चाँडै फल त्यो पाउँछ॥
१२
चार जाति रचें मैले, गुणकर्मानुसार ती।
अकर्ता अविनाशी हुँ, कर्ता म नै भएपनि॥
१३
कर्मफलप्रति मेरो, चाहना न लगाव छ।
सत्य यो जसले बुझ्छ, कर्मबन्धन मुक्त छ॥
१४
मुक्तात्माहरूले पहिले जानेर कर्म जो गरे।
पूर्वजले जे गरे कर्म, गर्दै जाऊ तिमी प्रिये॥
१५
विद्वानै पनि झुक्किन्छन्, सत्यासत्य के हो भनी।
मबाट तत्व जानेर, मुक्त हुन्छौ तिमी पनि॥
१६
कर्म जटिलतालाई अति नै बुझ्न गाह्रो छ।
कर्म, विकर्म, अकर्म ? मान्छेले बुझ्नुपर्दछ॥
१७
जो देख्छ कर्ममा अकर्म, र अकर्ममा कर्म जो।
कर्ममा संलग्न भएरै, बन्नेछ बुद्धिमान त्यो॥
१८
इन्द्रिय भोगको इच्छा, जो त्यागी कर्म गर्दछ।
ज्ञानद्वारा मोह जस्ले, नास्छ ज्ञानी त्यो बन्दछ॥
१९

कर्मफल त्यागेर जो, ईश्वरमा नित्य रम्दछ ।
कर्म गर्दै रहे पनि, निष्काम कर्म त्यो बन्दछ ॥
२०

सबै भोगेच्छा त्यागेर, जो बाँच्न कर्म गर्दछ ।
जस्तै कर्म गरे पनि, पापबाट ऊ मुक्त छ ॥
२१

इर्ष्या द्वेष दण्ड हैन, जो लिन्छ सन्तोष बुझी ।
कर्मबन्धनले उसलाई, छुँदैन कहिल्यै पनि ॥
२२

आशक्तिलाई त्यागेर, प्रभुमा नित्य रम्दछ ।
कर्महरू सबै उस्का, ब्रह्ममा गई मिल्दछ ॥
२३

ब्रह्ममा मग्न भै व्यक्ति, ब्रह्मकै लागि जो गर्दछ ।
गर्नेगरिने सबै कार्य, ब्रह्ममय त्यो बन्दछ ॥
२४

योगीहरू देवतालाई यज्ञद्वारा ती पुज्दछन् ।
ब्रह्मरूपी अग्निलाई, आहुति पनि गर्दछन् ॥
२५

श्रोतादि इन्द्रियलाई, संयमले कोही नाँस्दछन् ।
शब्दादि विषय कोही, इन्द्रियाग्निमा होम्दछन् ॥
२६

प्राणादि, इन्द्रियादिका, कार्य जो छन् सबै त्यहाँ ।
ज्ञानीले होम्छन् त्यस्लाई, आत्मसंयम अग्निमा ॥
२७

तपस्या धनले कोही, कोही अष्टाङ्ग योगले ।
यज्ञ गर्छन् कोही ज्ञानी, वेद स्वाध्याय ज्ञानले ॥
२८

योगी समाधिका लागि, प्राणायाम गर्दछन् ।
अपान प्राणमा हुँदै, सासलाई ती रोक्दछन् ॥
२९

आहार संयमी योगी, प्राणमै प्राण होम्दछन् ।
यज्ञलाई बुझी कर्ता, त्यसैले पाप नास्दछन् ।
३०
यज्ञफलामृत पाई, पुग्छ योगी ब्रह्मलोकमा ।
यज्ञ नगर्नेको लागि, छैन सुख कुनै लोकमा ॥
३१
वेद सम्मत् सबै यज्ञ, हुन्छन् सम्पन्न कर्मले ।
कर्मबन्धनबाट ती, मुक्त हुन्छन् सहजले ॥
३२
उत्तम छ ज्ञानयज्ञ, द्रव्य यज्ञभन्दा पनि ।
टुङ्गिन्छ ज्ञानमै कर्म, पार्थ ! बुझ सबै तिमी ॥
३३
सत्यदर्शी गुरु ज्ञानी, सामुमा सेवाभावले ।
जिज्ञासा राख्दा मिल्दछ, ज्ञानदीक्षा विनम्रले ॥
३४
फस्दैनौ मोहमा फेरि, ज्ञान प्राप्त गरेपछि ।
आत्मा परमात्माबीच, भेट्दैनौ भिन्नता तिमी ॥
३५
पापीभन्दा महापापी, तिमी रहेछौ भने पनि ।
ज्ञानरूपी डुङ्गाद्वारा, तर्छौ भवसागर पनि ॥
३६
बलेको आगोले दाउरा, जलाएझैं हे अर्जुन !
जलाउँछ ज्ञानअग्निले, हाम्रा सबै कर्मफल ॥
३७
पवित्र अरु क्यै छैन, ज्ञानसरी संसारमा ।
कर्मयोगीले पाउँछ, ज्ञान त्यो आफूभित्रमा ॥
३८
श्रद्धालु जितेन्द्रिय जो, त्यसैले ज्ञान पाउँछ ।
जो ज्ञानी छ उसैले नै, शान्ति तत्काल पाउँछ ॥
३९

अश्रद्धालु अविवेकी, शंकालु, मूर्ख जो अति ।
दुवै लोकमा उस्लाई, हुन्न सुख कहीं पनि ॥
४०

प्रभुमा अर्पी कर्म जो, शंका त्यागदछ ज्ञानले ।
कर्म बन्धनमा फस्दैन, व्यक्ति त्यो कहिल्यै सखे ।
४१

मनमा हटाई शंका, ज्ञान अनि विवेकले ।
युद्ध गर्न उठ अर्जुन, कर्ममा समभावले ॥
४२

पाँचौं अध्याय

# कर्मसन्यासयोग

**अर्जुन कृष्णसँग भन्छन् -**

कर्म गर कहीं भन्छौ, कहिले त्याग भन्दछौ ।
सर्वश्रेष्ठ कुन हो मार्ग, कहिले आज्ञा गर्दछौ ?

१

**कृष्ण भन्दछन् –**

कर्मसन्यास कर्मयोग, दुवै ती श्रेष्ठ छन् हेर ।
दुईमा कर्मयोग नै, उत्तम हो यो अर्जुन ! बुझ ॥

२

सन्यासी हुन्छ जो व्यक्ति, इच्छा द्वेषरहित छ ।
सुखदु:खमा सम हुने, भवबन्धन मुक्त छ ॥

३

अज्ञानी ठान्दछ भिन्न, कर्म र सांख्ययोगमा ।
ज्ञानी भेट्छ दुवै फल, स्थित हुँदा ऊ कर्ममा ॥

४

ज्ञान र कर्मयोगले, एकै लक्षमा पुगिन्छ ।
साँचो द्रष्टा उही हुन्छ, दुवै जो एक देख्दछ ॥

५

कर्मयोगबिना सन्यास, प्राप्त हुँदैन अर्जुन !
प्रभुलाई प्राप्त गर्छ त्यो, जो भक्त कर्मयोगी छ ॥

६

जितेन्द्रिय संयमी व्यक्ति, जस्को चित्त विशुद्ध छ ।
समभावी कर्मयोगी त्यो, कर्मबन्धन मुक्त छ ॥

७

देख्ने, सुन्ने, खाने, हिँड्ने आदि क्रिया हुँदा पनि ।
तत्व ज्ञानीहरू ठान्छन्, अकर्ता हूँ आफू भनी ॥

८

कर्मेन्द्रिय, ज्ञानेन्द्रिय, सक्रिय रहँदा पनि ।
सम्झन्छन् ज्ञानी आफैंलाई, कर्मबाट पर भनी ॥

९

अशान्ति छाडी कर्मलाई, अर्पिन्छ जो ईश्वरमा ।
छुँदैन पापले त्यस्लाई, जस्तै पानी कमलमा ॥

१०

अनाशक्त योगीहरू, शरीर मनबुद्धिले ।
आत्मशुद्धि निमित्त ती, कर्म गर्दछन् भावले ॥

११

निष्काम कर्मयोगीले, आत्मिक शान्ति पाउँछ ।
फलेच्छा मनमा राख्दा, सकाम व्यक्ति बाँधिन्छ ॥

१२

संयमी ज्ञानी व्यक्तिले, कर्ता कारक हुँदा पनि ।
नौ ढोके देहभित्र यो, आत्मिक सुख भेट्छ अनि ॥

१३

कर्ता, कर्म र फलको, रचना गर्दैन जीवले ।
प्रकृति गुणबाट ती, पूरा हुन्छन् स्वभावले ॥

१४

कसैको पापपुण्यलाई, स्विकार्दैनन् तिमी बुझ ।
अज्ञानमा मोह जन्मिन्छ, मोहले ज्ञान ढाक्दछ ॥

१५

अज्ञान हट्दछ ज्ञानले, जस्तै अँध्यारो सूर्यले ।
ज्ञानीले परमात्मालाई, देख्दछ तत्वज्ञानले ॥

१६

मनबुद्धिनिष्ठा जस्को, परमात्मामा स्थिर छ।
ज्ञानद्वारा शुद्ध भई, त्यो मोक्षधाम पुग्दछ॥
१७

विज्ञ, ब्राह्मण, कुकुर, हात्ती गाई चाण्डालमा।
सम दृष्टिले हेर्दछ, ज्ञानीले सब जीवमा॥
१८

समभाव राख्छ जस्ले, उसले संसार जित्दछ।
निर्दोष समले युक्त, प्रभुमै स्थित बन्दछ॥
१९

प्रियअप्रिय दुवैमा जो, समभावले बस्दछ।
एकाग्र निर्मोही ज्ञानी, ब्रह्ममा स्थिर बन्दछ॥
२०

विषयभोगमा आशक्त, नभई जो स्थितप्रज्ञ छ।
त्यस्तो आत्मज्ञानी नै, परम्आनन्द भोग्दछ॥
२१

इन्द्रिय सुखभोगमा, रमाउन्नन् विद्वान ती।
अनित्य, दुःखकारक, बुझ्न हुन् कौतेन्य ! यी॥
२२

क्रोध इन्द्रियको बेग, जस्ले सहन सक्दछ।
यस्ता योगी पुरुषले, लोकआनन्द पाउँछ॥
२३

अन्तस्करणमा रम्दै जो, आत्मिक सुख भोग्दछ।
यस्ता अर्न्तमुखी योगी, परम्ब्रह्ममा पुग्दछ॥
२४

शंका पापरहित बन्दै, परहितमा जो लाग्दछ।
यस्तो सांख्ययोगीले नै, ब्रह्मनिर्वाण पाउँछ॥
२५

कामक्रोधरहित व्यक्ति, आत्मामा स्थित बन्दछ।
यस्तो ज्ञानी पुरुष नै, परम मुक्ति पाउँछ।

२६

इन्द्रिय भोगादि त्यागी, एकाग्र चित्त गर्छ जो।
प्राणअपान वायु जो, रोक्छ, मुक्त हुन्छ त्यो॥

२७

इन्द्रिय, मनबुद्धिलाई, वशमा राख्छ योगी जो।
भय, क्रोध, इच्छारहित, जीवनमुक्त हुन्छ त्यो॥

२८

जपतप सब भोक्ता, ईश्वरलाई जो मान्दछ।
सर्वहितकारी व्यक्ति नै, सुख शान्ति त्यो पाउँछ॥

२९

छैठौं अध्याय

# आत्मसंयमयोग

**श्रीकृष्ण भन्नुहुन्छ –**

कर्तव्य अग्नि त्याग्दैमा योगी, सन्यासी हुन्न त्यो ।
निष्काम कर्म गर्छ जो, सच्चा सन्यासी बन्छ त्यो ॥
१

सन्यास योग हो बुझ, प्रभुमा जो मिलाउँछ ।
योगी त्यो हो बुझ पार्थ ! जस्ले संकल्प त्याग्दछ ॥
२

योगसाधकका लागि, निष्काम कर्म जरुरी छ ।
योगसिद्धी बन्नका लागी, संकल्पत्याग मुख्य छ ॥
३

व्यक्तिले जब इन्द्रिय भोग, आशक्ति त्याग्दछ ।
संकल्परहित त्यो व्यक्ति, योगमा स्थित बन्दछ ॥
४

उद्धार गर आफैंलाई, भवसागरबाट तिमी ।
मित्रशत्रु कोही छैन, दुवै ती आफू हौ तिमी ॥
५

व्याधियुक्त मनलाई जो, जित्छ मित्र बन्दछ ।
मन नजित्नेका लागि, मन नै शत्रु बदन्छ ॥
६

सुखदुःख, गर्मीजाडो, सम ठानी जो टिक्दछ ।
यस्ता जीवात्मका लागि, दिव्य शान्ति पो मिल्दछ ॥
७

ज्ञानविज्ञानले पूर्ण, जो संयमी निर्विकार छ ।
आत्मज्ञानी त्यो योगीले, माटोसुन सम देख्दछ ॥
८

निस्वार्थी, हितैषी मित्र, इर्ष्यालु शत्रु बान्धव ।
पुण्यपापमा समभाव, जो राख्छ, श्रेष्ठ बन्दछ ॥

९

शरीर, मन, इन्द्रिय, योगीले वश गर्नुछ ।
असंग्रह भई उस्ले, आत्माचिन्तन गर्नुछ ॥

१०

मृगचर्म कपडा कुश, ओछ्याई शुद्ध भुइँमा ।
योगाभ्यास गर्नुपर्छ, एकान्त सम्म ठाउँमा ॥

११

शुद्ध आसनमा बसी, मन इन्द्रिय वश गरी ।
आत्मशुद्धिका निमित्त, योगाभ्यास गर तिमी ॥

१२

शिर गर्धन शरीर, सिधा राख्दै भै संयमी ।
नाकको टुप्पोमा आँखा, राख्दै ध्यान गर तिमी ॥

१३

शान्त, निर्भय, ब्रह्मचारी, विषयमुक्त पनि बनी ।
योगी त्यो स्थित होस् ममा, गहन् चिन्तन नै गरी ॥

१४

मनलाई वशमा राखी, मेरै चिन्तन् गर्दछ ।
यस्ता योगीले मेरो, शान्तिधाम त्यो भेट्दछ ॥

१५

अति खान्छ, जो खाँदैन, अति सुत्छ जो सुत्दैन ।
त्यस्ता व्यक्ति योगी हुन्नन्, बुझ कुरा यो अर्जुन !

१६

खाने, सुत्ने, काम आदि, नियमैले जो गर्दछ ।
यस्तो योगाभ्यासद्वारा, सिद्धि प्राप्त त्यो गर्दछ ॥

१७

बशमा राखेको चित्त, प्रभुमा जब स्थिर छ ।
यस्तो इच्छाहीन व्यक्ति, योगमा स्थित बन्दछ ।

१८

हावा नलाग्ने ठाउँको, बत्ती स्थिर भएसरि ।
मन वशमा राख्नाको, चित्त स्थिर हुन्छ अनि ॥
१९
योगाभ्यासद्वारा चित्त, संयम्मा जो राख्दछ ।
त्यस्तो शुद्ध मनभित्र, सच्चिदानन्द छाउँछ ॥
२०
सच्चिदानन्दमा उस्ले, इन्द्रिय सुख पाउँछ ।
दिव्यता प्राप्त त्यो मान्छे, ब्रह्मस्वरूप मिल्दछ ॥
२१
ईश्वर प्राप्तिमा आफ्नो, ठूलो लाभ जो मान्दछ ।
दुःखकष्ट दुवैमा ऊ, अविचलित बन्दछ ॥
२२
संसारी आशक्तरहित, मानिस योगी हुन्छ त्यो ।
दृढसंकल्प योगाभ्यास, कर्तव्य उस्को हुन्छ त्यो ॥
२३
संकल्पजन्य इच्छा ती, मान्छेले त्याग्नु पर्दछ ।
मनले इन्द्रियादिलाई, वशमा राख्नुपर्दछ ॥
२४
बिस्तारै आत्मविश्वासी, होऊ ध्यानास्थ बुद्धिले ।
प्रभुमा मन स्थिर राख्दै, चिन्तन गर भावले ॥
२५
चञ्चल अस्थिर मन, जतातत्तै त्यो पुग्दछ ।
त्यस्लाई खिँचेर तिमीले, वशमा राख्नुपर्दछ ॥
२६
शान्त निष्पाप मनले, जो ईश्वरमा स्थिर छ ।
रजोगुणी शान्त योगी, कल्मषबाट मुक्त छ ।
२७
निष्पापी संयमी योगी नित्य प्रभुमा रम्दछ ।
सुख पाई प्रेम भक्ति, परमानन्द ऊ भेट्दछ ॥
२८

योगीले सब जीवमा 'म', 'म'मा नै सब देख्दछ ।
समभावयुक्त योगी सर्वत्र प्रभु भेट्दछ ॥
२९

मलाई देख्छ सर्वत्र, सर्वत्र देख्दछ 'म' नै ।
एक अर्काका लागिमा, अदृश्य त्यो हुँदैन है ॥
३०

आत्मा परमात्मा एक, देखी मलाई जो भज्दछ ।
त्यस्तो भक्तयोगी सधैं, ममा आई त्यो मिल्दछ ॥
३१

अरुमा आफू जो देख्छ, सम हुन्छ सुखदुःखमा ।
त्यस्तो व्यक्ति नै अर्जुन ! श्रेष्ठ हुन्छ सब लोकमा ॥
३२

अर्जुन भन्छन् हे कृष्ण ! प्रभुले भनेको योग जो ।
चञ्चल मेरो मनले, बुझ्दैन स्थीर रूप त्यो ॥
३३

मन चञ्चल उत्ताउलो, अटेरी बलबान छ ।
यस्लाई वशमा राख्नु, हावा रोक्नुझैं गाह्रो छ ॥
३४

चञ्चल मनलाई पार्थ ! वश गर्नु कठिन छ ।
वैराग्य अभ्यासबाटै, त्यस्लाई सबले रोक्नुछ ॥
३५

संयमित्त मन मात्र त्यो, सफल बन्न है सक्दछ ।
जस्को मन वशमा छैन, कसरी योग नै मिल्दछ ॥
३६

असंयमित व्यक्तिलाई, योगसिद्धि मिल्छ कहाँ ?
असफल योगीको हेर, गति हुन्छ कस्तो त्यहाँ ॥
३७

ब्रह्मप्राप्तिको मार्गमा, विमुख हुन पुग्ने त्यो ।
फाटेको बादलजस्तै, नासिन जान्छ कि कसो ? ॥
३८

हे कृष्ण ! तिमीले नै यो, शंका हटाउँछौ मेरो ।
तिमीबाहेक अरु कोही, हटाउन सक्दैन त्यो ॥
३९

**श्रीकृष्ण भन्नुहुन्छ –**

सत्यकर्ममा लाग्नेको, कहिल्यै विनाश हुन्न है ।
सत्कर्मीको यहाँ पार्थ ! पराजय पनि हुन्न है ॥
४०

असफल योगीले पुण्य, लोकको भोग गर्दछ ।
सदाचारी धनवान्‌को, कोखबाट ऊ जन्मिन्छ ॥
४१

सत्कर्मी वैरागीको जन्म, ज्ञानी कुलमा हुन्छ नै
त्यस्ताको जन्म संसारमा, अति दुर्लभ हुन्छ है ॥
४२

पूर्वकृत गुणले गर्दा, प्रभुतर्फ ऊ ढल्किन्छ ।
यस्तो जिज्ञासु योगीले, कर्मफल नै त्याग्दछ ॥
४३

पहिलेको कर्मले आज, आत्मोन्नतिमा लाग्दछ ।
अर्को है जन्ममा उस्ले, सुसंस्कार भेट्‌दछ ॥
४४

उन्नतिमा सक्रिय योगी, पूर्वजन्मको संस्कारले ।
परमगतिमा ऊ पुग्दछ, मुक्त भई पापकर्मले ॥
४५

तपस्वी ज्ञानी सकामी, तीभन्दा योगी श्रेष्ठ हुन् ।
त्यसैले, अर्जुन तिमी, अरु हैन, योगी बन ॥
४६

योगीमा पनि श्रद्धाले, दिलले जो नित्य भज्दछ ।
त्यस्तो श्रद्धावान् भक्त नै, मलाई श्रेष्ठ लाग्दछ ॥
४७

सातौं अध्याय

# ज्ञानविज्ञानयोग

**श्री कृष्ण भन्नुहुन्छ :–**

अनन्य प्रेम ममा राख्ने, योगी तिमी हे अर्जुन !
सर्वगुणयुक्त मलाई, कसरी जान्दछौ ? सुन ॥
१

व्यवहारी तत्व ज्ञान त्यो, तिमीलाई कहन्छु म ।
जस्लाई जानेपछि फेरि, अन्य जान्नु नपर्नेछ ॥
२

हज्जारौंमा एक मात्र, सिद्धि प्राप्तिमा लाग्दछ ।
योगी पनि कोही मात्र, मलाई चिन्न सक्दछ ॥
३

पृथ्वी जल तेज आकाश, वायु मन, बुद्धि अनि ।
अहंकार यी हुन् आठ, मेरा शक्ति बुझ तिमी ॥
४

आठ जडशक्तिका साथै, पराशक्ति पनि बुझ ।
चेतन स्वरूप शक्ति त्यो, अर्को शक्ति मेरो बुझ ॥
५

प्राणीका उत्पत्ति स्रोत, मेरा दुई ती शक्ति हुन् ।
जगतको सृष्टि र नाश, त्यसको म हुँ कारण ॥
६

मबाहेक हे धनञ्जय ! सत्य छैन अरु कुनै ।
धागोमा मोती अल्भेझैं, टिक्छन् जीव ममा सबै ॥
७

सूर्यको प्रकाश मै हुँ, शब्द हुँ म आकाशको ।
पानीको रस, ॐ मन्त्रको, शक्ति हुँ सब जीवको ॥
८

पृथ्वीको गन्ध हुँ म नै, ताप हुँ म त अग्निको ।
जीवनको जीव हुँ म, तप हुँ म तपस्वीको ॥
९
बुद्धि म हुँ विद्वानको, तपस्वीको म हुँ तेज ।
सबै अस्तित्वको मूल, मै हुँ जान धनञ्जय ॥
१०
अकामबासना बल, म हुँ त्यो बलवानको ।
म हुँ काम त्यो कौन्तेय, शास्त्रसम्मत धर्मको ॥
११
सत्व रज तमो गुण, मेरा सबै ती उपज हुन् ।
म छु स्वतन्त्र तीबाट, मेरो नै वशमा ती छन् ॥
१२
सत्व, रज, तमो, भावले, सारा प्राणी मोहित छन् ।
गुणातीत नित्य मलाई, चिन्न ती असमर्थ छन् ॥
१३
त्रिगुणमयी मायाबाट, मुक्ति मिल्न कठिन छ ।
शरण पर्दछ मेरो जो, सजिलै पार तर्दछ ॥
१४
मायाद्वारा जो अज्ञानी छ, आसुरी भाव राख्छ जो ।
मूर्ख अधर्मी, नास्तिकले, पुज्दैन है मलाई त्यो ॥
१५
अर्थार्थी, आर्त, जिज्ञासु, ज्ञानी, चार हुन् भक्त यी ।
हे कुन्तिपुत्र अर्जुन ! भज्छन् मलाई नित्य ती ॥
१६
प्रेमभक्तिले मलाई, भज्ने ज्ञानी त्यो श्रेष्ठ छ ।
प्रिय छु उसको लागि, पार्थ ! मेरो प्रिय त्यो छ ॥
१७
उदार हुन्छ सबै भक्त, बुद्धि जसका स्थित छन् ।
मेरो सेवामा लाग्ने ती, सबै मलाई भेट्दछन् ॥
१८

धेरै जन्मपछि पनि, सबै सम्झी मलाई ती
भज्छन् ब्रह्मज्ञानीहरू, छन् महात्मा दुर्लभ ती ॥
१९
भोगवासनाले जस्को, बुद्धि नाश भएको छ ।
आफ्नै स्वभावले त्यस्ले, देवताहरू पुज्दछ ॥
२०
जो कामनाले जस्लाई, श्रद्धा भावले पुज्दछ ।
आफ्नो श्रद्धानुसार ऊ, त्यसैमा स्थित बन्दछ ॥
२१
जुन श्रद्धा र भक्तिले, जो देवलाई पूज्दछ ।
सो देवताद्वारा उस्ले, इच्छित फल पाउँछ ॥
२२
अज्ञानीले पाएको त्यो, फल अनित्य बन्दछ ।
जस्ले जस्लाई भज्दछ, उस्ले त्यसलाई पाउँछ ॥
२३
नित्य उत्तम मेरो रूप, मूर्खहरू ती चिन्दैनन् ।
सच्चिदानन्द मलाई ती, व्यक्ति विषेश ठान्दछन् ॥
२४
मायाले छेकिएको त्यो, अज्ञानी प्रभु देख्दैन ।
अजन्म नित्य स्वरूप, मेरो देख्न त्यो सक्दैन ॥
२५
भूत, वर्तमान, भविष्य, पार्थ ! सबै म जान्दछु ।
मलाई कोही चिन्दैनन् तर सबै म चिन्दछु ॥
२६
राग द्वेष र द्वन्द्वले मोहमाया जगाउँछ ।
मोहले मानिसलाई, अज्ञानी नै तुल्याउँछ ॥
२७
पाप नाश गरी जस्ले, पुण्य कार्य गरेको छ
मोहका द्वन्द्वबाट त्यो, मुक्त भै ममा आउँछ ॥
२८

रोग मृत्यु मुक्तिका लागि, ज्ञानी शरण पर्दछन्
कर्म विषयादि जान्ने ती, ब्रह्मज्ञानी ठहर्दछन् ॥
२९

आत्मास्वरूप मलाई, जस्ले सर्वाधार मान्दछ
दृढचित्तको व्यक्तिले, अन्त:मा मलाई पाउँछ ॥
३०

आठौं अध्याय

# अक्षर ब्रह्मयोग

**अर्जुन भन्छन् :-**

के हो अध्यात्म ब्रह्म र, कर्म कृष्ण बुझाउनोस् ।
लोकको देवता को हो ? विन्ती, प्रभु बताउनोस् ॥
१

को हुन् यज्ञका मालिक, के-कसरी रहन्छ यो ?
कसरी आत्मज्ञानीले, अन्तमा प्रभु चिन्छ त्यो ॥
२

अविनाशी दिव्य जीव यो, ब्रह्म आध्यात्म गुणको ।
सकाम कर्म सबै हुन् यी, क्रिया भौतिक देहको ॥
३

परिवर्तनशील संसार यो, म नै एक शाश्वत हुँ ।
जीवका आत्मास्वरूप, यज्ञको पनि स्वामी हुँ ॥
४

जस्ले मेरो स्मरण गरी, अन्तमा प्राण त्यागदछ ।
निश्चय नै उसले मेरो, स्वरूप प्राप्त गर्दछ ॥
५

शरीर त्यागदा जस्ले जे, मनमा भाव राख्दछ ।
मृत्युपछि उसले पार्थ ! त्यहीनै प्राप्त गर्दछ ॥
६

त्यसैले मलाई सम्झेर, युद्ध कर्म गर तिमी ।
मन बुद्धि मलाई अर्पी, ममा प्राप्त होऊ तिमी ॥
७

जस्ले एकाभावले नित्य, मेरो स्मरण गर्दछ ।
त्यस्तो दिव्य योगीले, पार्थ ! मलाई पाउँछ ॥
८

नित्य अनादि सर्वज्ञ, अति सुक्ष्म र दिव्य त्यो ।
सर्वाधार, सबका स्वामी, अचिन्त्य संरक्षक हो ॥
९
एकाग्र भै भक्तियोगले, जस्ले मलाई भज्दछ ।
ध्यानले मलाई पुज्छ, अन्तमा ममै पुग्दछ ॥
१०
वेदान्ति जापक सन्यासी, ब्रह्ममा सब पुग्ने ती ।
सिद्धि, मुक्ति पाउने विधि, म भन्दछु सुन तिमी ॥
११
इन्द्रिय बस गरेर जो, हृदयमा मन राख्दछ ।
प्राणवायु शिरमा राख्ने, मानिस योगी बन्दछ ॥
१२
योगाभ्यासले ॐ रूप, ब्रह्मचिन्तन गर्छ जो ।
मरेपछि सरासरै, प्रभुधाममा पुग्छ त्यो ॥
१३
जो शुद्धभावले पार्थ ! मलाई नित्य सम्झन्छ ।
त्यस्ता योगीका लागि म, सजिलै प्राप्त छु बुझ ॥
१४
सिद्धिप्राप्त योगी भक्त, माहापुरुषले यहाँ ।
पर्दैन जन्मनु मर्नु है, दुःखी यो संसारमा ॥
१५
ब्रह्म, भूलोक सबै ती छन्, दुःखादीले भरिएको ।
चलिरहन्छ यहाँ सधैं, चक्र यो जन्ममृत्युको ॥
१६
भू-ब्रह्मादि सबैलोक, छन् वशमा कालको यहाँ ।
जन्यमृत्युभन्दा पर, एक दिव्यधाम त्यहाँ ॥
१७

हजार दिव्य युगको, रात दिन बराबर ।
एकदिन हुन्छ ब्रह्माको, तत्वज्ञानी त्यो जान्दछ ॥
१८
सुक्ष्म देहबाट ब्रह्माको, जीबात्मा सब जन्मिन्छन् ।
दिन र रातको सुरुमा, जन्मी त्यसैमा मिल्दछन् ॥
१९
ब्रह्माको प्रत्येक दिनमा, जन्मिन्छन् ती जीवहरू ।
त्यसैगरी रातमा सबै, लीन हुन्छन् उनीहरू ॥
२०
नित्य अर्को दिव्य शक्ति, अव्यक्तभन्दा पर अति ।
नासिन्न त्यो पराशक्ति, संसार यो नासिए पनि ॥
२१
जो अव्यक्त अविनाशी छ, सबैको हो गन्तव्य त्यो ।
जहाँ पुगी फर्कन्न कोही, त्यो नित्य परमधाम हो ॥
२२
सर्वव्यापी छ, जो पार्थ ! जस्मा सबै टिकेको छ ।
परमात्मा चिदानन्द, भक्तिले मात्र भेटिन्छ ॥
२३
मरेपछि योगी फेरि, फर्की आउँछ, आउन्न ?
आतेजाते दुवै बाटो, भन्छु पार्थ ! तिमी सुन ॥
२४
शुक्ल पक्ष उज्यालो दिन, सूर्य उत्तरकालमा ।
देह त्याग्दछ भने व्यक्ति, पुग्छ त्यो ब्रह्मलोकमा ॥
२५
कृष्णपक्ष अँध्यारो रात, सूर्य दक्षिणकालमा ।
देह त्याग्ने कर्मयोगी, स्वर्ग पुगी झर्छ यहाँ ॥
२६

उज्यालो अँध्यारो दुई, हुन् नित्यमार्ग मृत्युको ।
शुक्लमार्ग मुक्तिको हो, फर्किने कृष्णमार्ग त्यो ॥
२७

फस्दैनन् मोहमा कहिल्यै, ज्ञानी भक्तहरू सुन
त्यसैले हे अर्जुन ! तिमी, बुद्धियोगी सदा बन ॥
२८

वेद यज्ञ तप, दानादिले, जस्तो जे फल पाइन्छ
तत्वज्ञानी सो फल पाई, परमधाममा पुग्दछ ॥
२९

# नवौं अध्याय
## राजविद्या राजगुरुयोग

**श्रीकृष्ण भन्नुहुन्छ :–**

ज्ञानविज्ञानको गोप्य, मबाट तिमी सुन्नेछौ ।
जो जानेपछि तिमी लौ, भवसागर तर्नेछौ ॥
१

विज्ञानसहितको ज्ञान, राजा हो सब ज्ञानको ।
श्रेष्ठ पवित्र फलदायी, हो नित्य संगम त्यो ॥
२

धर्ममा श्रद्धा नहुनेले, मलाई पाउँदैन है ।
मरेपछि फेरि पार्थ ! जन्ममृत्युमा घुम्छ नै ॥
३

मेरो अव्यक्त रूपले, छ ढाकिएको जगत् ।
जीव सबै ममै स्थित छन्, त्यसबाट म छु अलग ।
४

सृष्टिकर्ता भए पनि आश्रित छैनन् ममा कोही ।
पालक धारण कर्ता हूँ, तर स्थित म छैन कहीं ॥
५

आकाशमा बहने हावा, त्यसैमा रहेझैं स्थित ।
मद्वारा सिर्जित प्राणी, रहन्छन् ती ममै स्थित ॥
६

प्राणीको सृष्टि गर्छु म, पार्थ ! कल्पको आदिमा ।
प्राणी मेरै प्रकृतिमा, मिल्छन् कल्पको अन्तमा ॥
७

मेरो प्रकृतिले सिर्जित, लोक मेरै अधीन छ ।
मेरो इच्छाले सृष्टिको, जन्ममृत्य भएको छ ॥
८

मलाई बाँध्न सक्दैन कुनै पनि ती कर्मले ।
अनाशक्त तटस्थ छु, म त सबै ती कर्मले ॥
९
मेरै आज्ञाले कौन्तेय, जगत् सारा चल्दछ ।
प्रकृति कै अधीन रही, संसार चक्र घुम्दछ ॥
१०
मेरो दिव्य स्वरूपलाई, चिन्दैनन् ती मूर्खहरू ।
साधारण मान्छे सम्झेर, खिल्ली गर्छन् तिनीहरू ॥
११
आसुरी मोहिनी भाव, जसले धारण गर्दछ ।
आशा, कर्म, ज्ञान सबै, उसको निष्फल बन्दछ ॥
१२
दैवी स्वभावी व्यक्तिले, अविनाशी म ठान्दछ ।
सृष्टिकर्ता नित्य सम्झी ! प्रेमभावले भज्दछ ॥
१३
मलाई पाउन महात्मा, मेरै महिमा गाउँछन् ।
सम्झी प्रेमभावले नित्य, उपासना ती गर्दछन् ॥
१४
ज्ञानी योगीहरूमध्ये, द्वैतभाव कोही राख्दछन् ।
अद्वैत विश्वरूपमा, कोही मलाई ती पुज्दछन् ॥
१५
म नै यज्ञ अनि कर्ता, आहुति अग्नि पनि हुँ म ।
पितृ तर्पण म नै हुँ ! औषधि मन्त्र पनि हुँ म ॥
१६
लोकधाता फलदाता, सबैका आमाबाबु अनि ।
म ॐकार ऋगवेद, साम र यर्जुवेद पनि ॥
१७

सबैको लक्ष भर्ता हुँ, पालक साक्षी सबै अनि ।
संरक्षक म हितैषी, सृष्टि प्रलय कर्ता पनि ॥
१८

पृथ्वीलाई ताप बर्षा, दिने हर्ने पार्थ ! म हुँ ।
अमर मृत्यु तत्वादि, सत्असत् पनि म हुँ ॥
१९

वेदानुसार कर्म गर्ने, धर्मात्मा व्यक्ति मानिन्छ ।
यज्ञादि पूजाहरू गर्दै, स्वर्ग पुग्न त्यो खोज्दछ ॥
२०

यस्तो पुण्यात्माले आफ्नै, कर्मको फल पाउँछ ।
स्वर्ग पुगी त्यहाँ पार्थ ! दिव्य भोग त्यो भोग्दछ ॥
२१

सुकर्मले गर्दा पुण्यात्मा, सुख भोग्दछ स्वर्गमा ।
सकिएपछि पुण्य आफ्नो, झर्छ त्यो यस लोकमा ॥
२२

सकाम कर्म गर्दै जो, भोगको इच्छा राख्दछ ।
यस्तो व्यक्ति बारम्बार, स्वर्गमर्त्यमा धाउँछ ॥
२३

अनन्य भावले मेरो जो, ध्यान चिन्तन गर्दछ ।
सुरक्षा चाहना त्यसको, सबै पुरा म गर्दछु ॥
२४

श्रद्धापूर्वक व्यक्ति जो, अन्य देवादि पुज्दछ ।
नजान्दै पनि कौन्तेय ! मेरो पूजा त्यो गर्दछ ॥
२५

यज्ञका भोक्ता र स्वामी, मलाई मान्छे भुल्दछ ।
त्यसैले गर्दा बारम्बार, पुनर्जन्म ऊ पाउँछ ॥
२६

देव पितृ भूतलाई जो, पुज्छ त्यस्लाई पाउँछ ।
श्रद्धाले पुज्ने व्यक्ति त्यो, ब्रह्मधाममा पुग्दछ ॥
२७

श्रद्धाले मलाई जसले, फूलपानी चढाउँछ ।
भक्तिले अर्पेको वस्तु, खुसीले म स्विकार्दछु ॥
२८
जे गर्छौ खान्छौ होम्दछौ, दानादि तपस्यादि जति ।
सबै कर्म ती कौन्तेय ! अर्पण गर ममा तिमी ॥
२९
कर्म सन्यासीहरू ममा, सबै कर्म ती अर्पिन्छन् ।
शुभाशुभ फलबाट ती, मुक्त भै ममा मिल्दछन् ॥
३०
समभावी मेरा लागि, अप्रिय प्रिय छैन है ।
प्रेमले मलाई भज्ने, म र त्यो बुझ एक है ॥
३१
दुराचारी पनि मलाई, यदि भक्तिले पुज्दछ ।
साधु मानिन्छ त्यो व्यक्ति, ममा जो भर गर्दछ ॥
३२
भावले जो मलाई भज्छ, धर्म शान्ति त्यो पाउँछ ।
नासिन्न कहिल्यै भक्त, अर्जुन ! सत्य यो बुझ ॥
३३
वैश्य, शुद्र, पापी, पनि, जो मेरो पाउ पर्दछन् ।
सबै ती मेरा कौन्तेय ! परमधाममा पुग्दछन् ॥
३४
धर्मात्मा ब्राम्हण, पुण्यात्मा पुग्छन् मुक्तिधाममा ।
नश्वर संसार यो सम्झी, नित्य भज तिमी ममा ॥
३५
चिन्तन मनन् पुजनमा, सम्झ मलाई नै तिमी ।
एकाग्र चित्तले भज, मलाई भेट्नेछौ तिमी ॥
३६

दसौं अध्याय

# विभूतियोग

श्रीकृष्ण भन्छन् हे पार्थ ! रहस्य कुरा बताउँछु।
मित्रको हितका लागि, सुन ज्ञान म सुनाउँछु॥
१
मेरो उत्पत्ति ऐश्वर्य त्यो, सन्त देवता जान्दैनन्।
आदिकारण हुँ सबको, मेरो लीला ती बुझ्दैनन्॥
२
जस्ले मलाई अनादि, अजन्मा ईश मान्दछन्।
यस्ता ज्ञानीहरू सबै, पापबाट ती मुक्त छन्॥
३
बुद्धि ज्ञान क्षमा सम्मोह, सुखदु:खहरू सबै।
जन्ममृत्यु भयाभय, जन्मिन्छन् ती मबाट नै॥
४
तप अहिंसा सन्तोष, दान यश अपयश पनि।
सबै भावहरू जीवका, उत्पन्न हुन्छन् मबाट ती॥
५
मनु सनकादि सप्तर्षि, मेरै सब ती उपज हुन्।
जीवात्माहरू सबै यहाँ, यिनैबाट जन्मेका छन्॥
६
विभूति योगशक्तिले र तत्वले मलाई चिन्दछ।
सच्चा भक्तियोगी हो त्यो, शंका गर्नु है व्यर्थ छ॥
७
सबै लोकको आधार, सबै मेरा ती सृष्टि हुन्।
श्रद्धाभावले बुझीकन, मलाई भक्त पुज्दछन्॥
८

मेरै बारे मेरा भक्त, चिन्तन् मनन् गर्दछन् ।
मेरै सेवामा समर्पित, आनन्दले रमाउँछन् ॥
९
भक्ति प्रेमभावले जस्ले, मलाई नित्य भज्दछ ।
त्यसलाई दिन्छु बुद्धि म, उसले मलाई पाउँछ ॥
१०
कृपा गरी म भक्तको, चित्तमा बास गर्दछु ।
चित्तको अँध्यारोलाई, ज्ञानले उजिल्याउँछु ॥
११
कृष्णलाई भन्छन् पार्थ ! परब्रह्म हजुर सबै ।
अजय दिव्य, अजन्मा, परम् शाश्वत हजुर नै ॥
१२
देवर्षि ऋषि महर्षि, जुन कुरा बताउँछन्
हजुरबाट त्यही कुरा, ममा प्राप्त भएका छन् ॥
१३
जे भन्नुहुन्छ हजुर, त्यस्लाई सत्य ठान्छु म ।
अपार प्रभुको लीला, बुझ्दैनन् देव दानव ॥
१४
श्रीकृष्ण सबका स्वामी, देवादि ती महेश्वर ।
आफ्नै शक्तिद्वारा आफू, जानिनुहुन्छ ईश्वर ॥
१५
दिव्य ऐश्वर्यले उनको, संसार यो ढाकेको छ ।
सोबारे उनीबाहेक, कस्ले पो भन्न सक्दछ ॥
१६
चिन्तनद्वारा कसरी, हजुरलाई जानूँ म ? ।
कुन भाव र रूपमा, सम्झना कसो गरूँ म ? ॥
१७
हजुरको ऐश्वर्यशक्तिको, व्याख्या गर्नोस् जनार्दन !
हजुरको अमृत बोलीले, अघाएन मेरो मन ॥
१८

श्रीकृष्ण भन्छन् कौन्तेय ! अनन्त छन् ऐश्वर्य ती ।
मुख्य ऐश्वर्यका बारेमा, म सुनाउँछु सुन तिमी ॥
१९

हृदयबासी आत्मा हुँ, पार्थ ! म सब जीवको ।
आदि, मध्य, अन्त पनि, म हुँ सम्पूर्ण जीवको ॥
२०

आदित्यादिमा विष्णु हुँ, ज्योतिहरूमा सूर्य म ।
बायुहरूमा मरिची हुँ, नक्षत्रमा चन्द्र म ॥
२१

वेदहरूमा सामवेद, देवताहरूमा इन्द्र हुँ ।
इन्द्रियहरूमा मन म, प्राणीहरूमा चेत हुँ ॥
२२

रुद्रहरूमा शिव हुँ, यक्षगणमा कुवेर म ।
वसुहरूमा अग्नि हुँ, पर्वतादिमा सुमेरु म ॥
२३

पुरोहितहरूमा हे पार्थ ! मुख्य वृहस्पति हुँ म ।
सेनापतिमा कुमार, जलाशयमा समुद्र म ॥
२४

महर्षिहरूमा भृगु म, शब्दहरूमा ॐ कार हुँ ।
यज्ञहरूमा जपयज्ञ, स्थिर बस्तुमा हिमाल हुँ ॥
२५

वृक्षहरूमा पिपल हुँ, देवर्षिमा नारद म ।
गन्धर्वमा चित्ररथ हुँ, सिद्धयोगीमा कपिल म ॥
२६

समुद्रबाट निस्केको, उच्चैश्रबा घोडा म हुँ ।
हात्तीमा ऐरावत म, मान्छेहरूमा राजा हुँ ॥
२७

बज्र हुँ शस्त्रहरूमा, कामधेनुमा गाई हुँ ।
वासुकी हुँ सर्पहरूमा, प्रेमीमा कामदेव हुँ ॥
२८

नागहरूमा शेषनाग, जलचरमा वरूण म ।
पितृहरूमा आर्यमा हुँ, शासकमा यमराज म ॥
२९
दैत्यहरूमा प्रल्हाद, गणितज्ञको समय म
पशुहरूमा सिंह हुँ, पंक्षीहरूमा गरुड म ॥
३०
शस्त्रधारीमा राम म, वेगहरूमा वायु हुँ ।
बग्ने नदीमा गंगा म, माछाहरूमा गोही हुँ ॥
३१
म आदि, मध्य र अन्त हुँ, सृष्टिको बुझ अर्जुन ।
विद्यामा आत्मविद्या हुँ, तर्कशास्त्रको सार म ॥
३२
अक्षर मा 'ॐ' कार हुँ, समासमा त द्वन्द्व हुँ ।
कालको महाकाल हुँ, सृष्टिकर्तामा ब्रह्मा हुँ ॥
३३
स्त्रीहरूमा कीर्तिलक्ष्मी, वाणीमा बुद्धिधृति म ।
मृत्यु हुँ सबैमा पुग्ने, सृष्टिको कारक हुँ म ॥
३४
श्रुतिहरूमा बृहत् साम, छन्दहरूमा गायत्री म ।
महिनाहरूमा शिशिर, ऋतुहरूमा बसन्त म ॥
३५
छलीहरूमा जुवा हुँ, तपस्वीको तेज पनि ।
विजय र संहार म हुँ, बलवानको बल पनि ॥
३६
यादवमा वासुदेव म, पाण्डवमा अर्जुन हुँ ।
ऋषिहरूमा व्यास म, चिन्तकमा शुक्राचार्य हुँ ॥
३७
दमनकारीको शक्ति हुँ, नीति म विजयार्थीको ।
गोप्यतामा मौन नै म, तत्वज्ञान हुँ म ज्ञानीको ॥
३८

सबै प्रणीको हेर पार्थ ! म हुँ उत्पत्ति कारण ।
चराचर कोही पनि, बिना म यहाँ टिक्दैन ॥
३९
मेरो दिव्य ऐश्वर्यको, कुनै अन्त छैन त्यहाँ
मेरो अनन्त ऐश्वर्य, बताएँ संक्षेपले यहाँ ॥
४०
सृष्टिका ऐश्वर्य, सौन्दर्य, अनि गौरव जेजति
मेरा शक्तिका अंशहरू, सबै ती हुन् बुझ तिमी ॥
४१
सबै यी जान्नुको अर्थ, के नै छ र ? हे अर्जुन !
आफ्नो योगशक्तिले मैले, थामेको छु यो जगत ॥
४२

## एघारौं अध्याय
## विश्वरूप दर्शनयोग

अर्जुन भन्छन् हे कृष्ण ! अध्यात्म योगज्ञानले ।
मोह मेरो हटेको छ, कृपा गर्दा हजुरले ॥
१

जीवको सृष्टि विकास, प्रभुबाट सबै सुने ।
अविनाशी रूप तिम्रो, महिमा त्यो सबै बुझें ॥
२

रूप प्रभुले भनेजस्तो, देख्छु त्यो परमेश्वर ।
ऐश्वर्य स्वरूप देख्न म, चाहान्छु हे ईश्वर ॥
३

विराट स्वरूप तिम्रो, हेर्न योग्य म छु भने ।
दर्शन देऊ मलाई, नित्य त्यो स्वरूप हरे ॥
४

कृष्ण भन्छन् हे पार्थ ! मेरो विभिन्न रूप त्यो ।
हजारौं आकृति वर्ण, हेर दिव्य स्वरूप यो ॥
५

सखे ! मभित्र देख्नेछौ, कसैले नदेखेका अघि
अनेक देव, अश्विनी, रुद्र, वसु, आदित्य ती ॥
६

अर्जुन तिमी देख्नेछौ, सम्पूर्ण जगतै ममा ।
अरु जे देख्न चाहन्छौ, देख्नेछौ ती सबै ममा ॥
७

तिम्रा ती बाह्य आँखाले, देख्न मलाई सक्दैनौं ।
दिव्य दृष्टि म दिनेछु, जस्बाट तिमी देख्नेछौ ॥
८

सञ्जय भन्छन् हे राजन ! अर्जुनलाई कृपा गरी ।
विश्वरूपको दर्शन त्यो, कृष्णले दिनु भो हेरी ॥

९

अनेक मुख र आँखा, देख्दैमा रूप अद्भूत ।
गहनाले सजिएको, अस्त्रास्त्रले सुशोभित ॥

१०

चौतर्फी मुख देखिने, सुगन्धित शरीर त्यो ।
देखे अर्जुनले दिव्य, ज्योतिरूप विराट त्यो ॥

११

हजारौं सूर्यको ज्योति भन्दा धेरै प्रकाश त्यो ।
विश्वरूप त्यो देखिन्थ्यो, परमात्मा स्वरूपको ॥

१२

धेरै भागमा विभक्त, लोकदेवहरू सबै ।
अर्जुनले देखे त्यहाँ, कृष्णकै जिउमा पुरै ॥

१३

विश्वरूप त्यो देखेर, रोमान्चित उनी भए ।
सभक्तिले हात जोडी, कृष्णमा बिन्ती है गरे ॥

१४

भन्छन् अर्जुन हे प्रभु ! देख्छु हजुरमा सबै ।
भूत, सर्प, ऋषि, देव, विष्णु, ब्रह्मा, शिव सबै ॥

१५

धेरै हात मुखयुक्त, सर्वत्र कृष्ण देख्दछु ।
आदि न अन्त हजुरको विराट रूप देख्दछु ॥

१६

हेर्न कठिन रूप त्यो, सूर्यझैं अति तेजिलो ।
अनेक शंखचक्रले, ज्योति रूप हजुरको ॥

१७

ज्ञातव्य परम् अक्षर, जगताधार पनि हजुर ।
अनादि धर्मरक्षक, अविनाशी पनि हजुर ॥

१८

हजुर अनादि अनन्त, असंख्य आँखा दूर त्यो।
देख्छु डढेलो लागेको मुखाग्निले हजुरको ॥
१९
आकाश पृथ्वी सर्वत्र, व्यापक छौ महात्मन।
देखी विभत्स रूप त्यो, लोक छन् है भयभित ॥
२०
शरण पर्दै देवहरू, प्रार्थना गर्छन् भक्तिले।
सिद्ध ऋषिमुनि सारा, गर्छन् भजन प्रेमले ॥
२१
रुद्रवसु आदित्यादि, वायुअश्विनी ती सबै।
पितृ गन्धर्व यक्षले, हेर्दछन् ती चकित भै ॥
२२
असंख्य हातखुट्टा र, विभत्स दाँत पेट छन्।
विराट उग्ररूप त्यो, देखी सब त्रसित छन् ॥
२३
खुलेको मुख आँखा र, रूपरङ्गले सजिएको।
देखी विराट रूप त्यो, भयो व्याकुल मन मेरो ॥
२४
विकराल मुख आँखा, बलेको रूप देखेर।
देख्दिन है केही कतै ! बेचैनी म छु अधीर ॥
२५
भिष्म द्रोण कर्ण सबै, साथमा योद्धा कौरव।
पसेको देख्छु मुखमा, सबै हजुरको माधव ॥
२६
योद्धाहरू सबै हाम्रा, मुखभित्र म देख्दछु।
प्रभुको दाँतबीचमा, अड्केका कोही देख्दछु।
२७
बगेर नदीको पानी, मिलेझैं ती समुद्रमा।
सम्पूर्ण लोक आखिर, लीन हुँदैछन नाथमा ॥
२८



श्रीकृष्णले आफ्नो विश्वरुप अर्जुनलाई देखाउँदै ।

पुतली जसरी बेगले, होमिन्छ मर्न आगोमा ।
त्यस्तै सबै ती नासिन, पुग्छन् हजुरको मुखमा ॥
२९

प्रज्वलित त्यो मुखले, सबै निल्नुभएको छ ।
प्रभुको त्यो प्रकाशले, सबै जगत तप्त छ ॥
३०

विभत्स रूप धारी त्यो, हुनुहुन्छ हजुर को ? ।
आदिपुरुषलाई म, जान्न चाहन्छु के हो त्यो ? ॥
३१

श्रीकृष्ण भन्छन् काल हुँ, नास्नलाई आएँ यहाँ
पक्ष विपक्ष सबै योद्धा, ती मर्छन् क्रमैले यहाँ ॥
३२

पार्थ ! उठ, लेऊ जस, जिती युद्ध राज्य गर ।
शत्रु तिम्रा मरिसके, खाली तिमी माध्यम बन ॥
३३

भिष्म र द्रोण, कर्णादि, पसिसके ती मृत्युमा ।
लड नडराई पार्थ ! हे, विजयी हुनेछौ युद्धमा ॥
३४

सुनी वचन कृष्णको काँप्दै बेस्सरी डरले ।
खुसी हुँदै अर्जुनले बिन्ती गर्छन् ती नम्रले ॥
३५

हजुरको नाममात्रले, जगत सब काँप्दछ ।
नमन गर्दछन् सिद्ध, दानव सब भाग्दछन् ॥
३६

अनादि स्रष्टा प्रभुलाई, बिन्ती गर्छन् सबै जति ।
हजुर अनन्त देवेश, सबैभन्दा पर अति ॥
३७

सृष्टिका आधार देव, सर्वज्ञ पनि हजुर ।
सर्वाधार अनन्त रूप, सर्वव्यापक हजुर ॥
३८

यम, वायु, अग्नि, वरुण, चन्द्र, ब्रह्मा पनि हजुर
सबैका पिता प्रभुलाई, बिन्ती गर्छु बारम्बार ॥

३९

परम् शक्ति पराक्रमी, बिन्ती गर्छु पाउमा परी ।
सर्वव्यापी सर्वेश्वर, नमन गर्छु मनले पनि ॥

४०

साथी सम्झी बोलाएँ मैले, कृष्ण यादव नामले ।
माफ होस् प्रभु मलाई, जतिजे गरें अज्ञानले ॥

४१

संगै बस्दा, सुत्दा, खाँदा, भयो होला अपमान नै ।
म अज्ञानीलाई प्रभु, क्षमा त्यसमा गर्नुस् है ॥

४२

सबको पिता गुरु पनि, कोही छैन प्रभुसमान ।
शक्तिशाली हे कृपालु ! तिमी छौ सबका महान् ॥

४३

पाउ पर्दै बिन्ती म गर्छु, मिलोस् कृपा हे कृपालु ।
माफ गर अपराध मेरो, मित्र बनेर हे दयालु ॥

४४

मन मेरो आत्तिंदो छ, विराट रूप त्यो देखी ।
सौम्य रूप देखाउनोस्, कृष्ण मलाई कृपा गरी ॥

४५

देख्न चाहन्छु प्रभुलाई, चर्तुभुज त्यो रूपमा ।
त्यसैले हजुरलाई म, देखूँ त्यही स्वरूपमा ॥

४६

स्वयं गडा चक्रहरू लीएको, किरीटले उज्वल भै रहेको ।
उही परम सुन्दर चारवाहु, स्वरूपको दर्शन गर्न पाँउ ॥

४७

**श्रीकृष्ण अर्जुनलाई भन्नुहुन्छ :-**

आफ्नो योगशक्तिद्वारा, कृपा गरी तिमीलाई है ।
दिव्यस्वरूपको दर्शन, गराएँ तिमीलाई नै ॥
४८

दान तप यज्ञादिले, देख्न नसक्ने रूप त्यो ।
दर्शन गराएँ मैले, मेरो विराटस्वरूप यो ॥
४९

विभत्स रूप देखेर, पर्दैन तर्सिनु तिमी ।
तिम्रो इच्छा अनुरूप, देख्छौ रूप मेरो तिमी ॥
५०

यति भन्दै कृष्णले त्यहाँ, विष्णु रूप देखाउँदै ।
सान्त्वना धीरता दिए, अर्जुनलाई बुझाउँदै ॥
५१

अर्जुन हात जोडेर, बिन्ती गर्छन् विनम्रले ।
आनन्द भो मन मेरो, सौम्य तिम्रो स्वरूपले ॥
५२

पार्थ ! तिमीले देखेको, मेरो त्यो विश्वरूपको ।
देवहरू पनि त्यसको, चाह राख्छन् दर्शनको ॥
५३

चर्तुभुज स्वरूप यो, देख्दैछौ यहाँ जो तिमी ।
जपतप दानदिले, देखिन्न त्यो कहिल्यै पनि ॥
५४

जुन रूप तिम्रो सामु, देख्दैछौ अहिले तिमी ।
अनन्य भक्तिले मात्र, देखिन्छ है त्यो आकृति ॥
५५

समभाव राखी जसले, अनाशक्त कर्म गर्दछ ।
अनन्य भक्त सेवक, परमधाममा पुग्दछ ॥
५६

## बाह्रौं अध्याय

# भक्तियोग

गर्छन् बिन्ती अर्जुन, कृष्ण ! कृपा होस् ममा ।
भन्नुहोस् कुन श्रेष्ठ हो, सगुण निर्गुण भक्तमा ॥
१

मेरो श्रद्धा भक्तिले जो, भज्छ साकार रूपको ।
कृष्ण भन्छन् भक्त त्यो, परम सिद्धयोगी हो ॥
२

इन्द्रिय वशमा राखी, समभावले निरन्तर ।
सर्वव्यापी मलाई भज्ने, ममा मिल्दछ आखिर ॥
३

नित्य निराकार ब्रह्मको, सधैं ध्यान जो गर्दछ ।
कल्याण सबको गर्छ जो, त्यस्ले मलाई भेट्दछ ॥
४

अव्यक्त रूप पुज्छ जो, न लक्ष त्यस्ले पाउँछ ।
देहधारीका लागि त, मार्ग ज्यादै कठिन छ ॥
५

सबै कर्म ममा अर्पी, जो नित्य भक्तिभावले ।
पूजा मेरो गर्छ भने, उद्धार गर्छु म प्रेमले ॥
६

एकाग्र चित्तले नित्य, जसले मलाई भज्दछ ।
मृत्यु सागरबाट त्यो, उद्धार भै मुक्ति पाउँछ ॥
७

मनबुद्धिलाई ममा, यदि अर्पण गर्दछौ ।
त्यसो गर्दा तिमी ममा अवश्य मिल्न पुग्दछौ ॥
८

मन स्थिर ममा राख्न, सक्दैनौ भने लौ हेर ।
मलाई भेट्न तिमीले, भक्तिको अभ्यास गर ॥
९

भक्तियोगको अभ्यास, सक्दैनौं गर्न भने तिमी
मेरा लागि कर्म गर्दा, पूर्णता पाउँछौ तिमी ॥
१०
कृष्णभावले कर्म त्यो, सक्दैनौ गर्न भने तिमी ।
कर्मफललाई त्यागी, निष्कामी बन है तिमी ॥
११
अभ्यासभन्दा ज्ञान र, ज्ञानभन्दा ध्यान श्रेष्ठ छ ।
फलत्याग ठूलो हुन्छ, त्यागले शान्ति मिल्दछ ॥
१२
द्वेष, स्वार्थ, मोह रहित, जो हितैषी दयालु छ ।
निरहंकारी समदर्शी, मेरा लागि त्यो प्रिय छ ॥
१३
जो सक्षम धीर सन्तोषी, इन्द्रिय वश गर्दछ ।
अर्पिन्छ जो ममा बुद्धि, त्यो नै मलाई प्रिय छ ॥
१४
दुःख नदिने अरुलाई स्वयं निश्चल हुन्छ जो ।
सुखदुःखमा सम हुने, छ प्रिय अति मेरो त्यो ॥
१५
शुद्ध, कुशल, चिन्तारहित, सबै दुःखले जो मुक्त छ ।
फलइच्छा नराख्ने भक्त, मेरो लागि अति प्रिय छ ॥
१६
न हर्ष, द्वेष र शोक, न केहीको आकांक्षा छ ।
शुभाशुभदेखि पर, मेरो भक्त त्यो प्रिय छ ॥
१७
जाडो गर्मी सुखदुःख, मान र अपमानमा ।
मलाई त्यो प्रिय हुन्छ, सम हुन्छ जो सर्वदा ॥
१८
सतसङ्गी मृदुभाषी, जे मिल्छ गर्छ सन्तोष ।
भक्तिमा लाग्ने निर्मोही, मलाई त्यो अति प्रिय छ ॥
१९
श्रद्धा, प्रेम र भक्तिले, जस्ले मलाई पुज्दछ
ज्ञानी भक्त मेरा लागि, अति त्यो प्रिय बन्दछ ॥
२०

# तेह्रौं अध्याय
## क्षेत्रक्षेत्रज्ञ विभागयोग

**अर्जुन भन्छन् :-**

प्रकृति क्षेत्र क्षेत्रज्ञ, के हुन् ज्ञान र ज्ञेय ती ।
फरक के छ ? तिनमा, चाहन्छु जान्न सबै म ती ॥
१
कृष्ण भन्छन्, कौन्तेय ! शरीर हाम्रो यो क्षेत्र हो ।
जस्ले शरीर जान्दछ, क्षेत्रज्ञ कहलिन्छ त्यो ॥
२
म क्षेत्रज्ञ हुँ धनञ्जय ! ज्ञाता हुँ सब जीवको ।
शरीर यस्को ज्ञातालाई, चिन्नुजान्नु त्यो ज्ञान हो ॥
३
क्षेत्रक्षेत्रज्ञ को के हुन्, त्यस्को प्रभाव के छ है ।
संक्षेपमा तिमीलाई, म भन्छु तिमी सुन्छौ नै ॥
४
क्षेत्रक्षेत्रज्ञको चर्चा, गर्छन् ऋषि ति वेदमा ।
कारण कर्मको त्यहाँ, उल्लेख छ वेदादीमा ॥
५
मन, बुद्धि, अहंकार, शरीर इन्द्रियादि ती ।
पन्चेन्द्रिय विषयादी, पर्छन् कर्मक्षेत्रमा तिनी ॥
६
ईर्ष्या, द्वेष, सुखदुःख, प्राण शक्ति देह अनि ।
धैर्य आदि सबै ती हुन्, कर्मक्षेत्र क्रिया पनि ॥
७
सहनशील अघमण्डी, हितैषी विनम्री छ ।
नरम मिठो बोली जस्को, गुरुभक्ति अनन्य छ ॥
दुःख नदिने कसैलाई, क्षमा धीर सरल छ ।
मन इन्द्रिय वश गर्ने, ज्ञानी पुरुष बन्दछ ॥
८

इन्द्रिय भोग अहंकार, नगर्ने त्यस्तो व्यक्ति जो।
सम रहन्छ सर्वकाल त्यो नै ज्ञानी पुरुष हो॥
९
धन घर पुत्रादिको, मोहबाट छ मुक्त जो।
प्रियअप्रिय सबमा, सम हुन्छ त्यो ज्ञानी हो॥
१०
नित्य शुद्ध अनन्य भक्ति, एकान्त वास गर्छ जो।
भोगीको सङ्ग गर्दैन, त्यो नै ज्ञानी पुरुष हो॥
११
आध्यात्म तत्वज्ञानले, खोजी गर्छ सत्यादी जो।
ज्ञान हुन् ती सबै कार्य, अरु सबै अज्ञान हो॥
१२
जान्नुपर्ने जानेपछि, परमानन्द मिल्दछ।
सत्-असत्भन्दा पर, ब्रह्मबारे म भन्दछु॥
१३
हात खुट्टा आँखा जस्को, मुख सर्वत्र देखिन्छ।
त्यस्ता ईश्वर सर्वत्र, व्याप्त भइरहेको छ॥
१४
प्रभु हुन् इन्द्रियरहित, इन्द्रिय स्रोत भए पनि।
अनाशक्त परं स्वामी, निर्गुण रक्षक पनि॥
१५
चर अचर चराचर, व्यापक् सर्वत्र छन् उनी।
जानी नसक्नु सूक्ष्म ती, नजिक टाढा भए पनि॥
१६
हरजीवमा विभाजित अविभाजित छन् उनी।
सर्वपालक महेश्वर, सृष्टि संहार गर्ने पनि॥
१७
सबै प्रकाशका स्रोत, अँध्यारोभन्दा पर उनी।
अदृश्य हृदयवासी, जान्न योग्य ज्ञान पनि॥
१८

क्षेत्र ज्ञान ज्ञेय के हुन् ? भनें मैले संक्षेपमा ।
भक्त त्यो तत्व ज्ञानले, बुझेर मिल्दछ ममा ॥
१९
विकार राग द्वेषादि, जन्मिन्छन् प्रकृतिबाट ती ।
अनादि हुन् बुझ तिमी, दुवै प्रकृति पुरुष ती ॥
२०
प्रकृति हुन् कारक तत्व, सम्पूर्ण कारण कार्यको ।
जीवात्मा सुख-दुःखको, कारण हुन् यस धर्तीको ॥
२१
प्रकृतिमा रही जीवले, त्रिगुण भोग गर्दछ ।
गुणको सङ्गअनुसार, जुनी लिन ऊ पुग्दछ ॥
२२
देहमा बस्ने दिव्य त्यो, आत्मा हो परमेश्वर ।
साथी बनी लोक हाँक्ने, भर्ता भोक्ता महेश्वर ॥
२३
तत्वज्ञानले बुझ्छ जो, प्रकृति, जीव गुण त्यो ।
जस्तो कर्म गरे पनि, पुनर्जन्म लिँदैन त्यो ॥
२४
ध्यानद्वारा परमात्मा, आफूमा कोही पाउँछन् ।
ज्ञान, कर्मयोगद्वारा, कोही उनलाई भेट्दछन् ॥
२५
आध्यात्म ज्ञानी जो व्यक्ति, सुनेरै प्रभु भज्दछ ।
श्रद्धालु भक्त त्यो सधैं, मृत्युबाट ऊ मुक्त छ ॥
२६
चरअचर सबै प्राणी, जे देख्छौ तिमी भारत ।
क्षेत्र, क्षेत्रज्ञ केवल, संयोग हुन् यी सबै बुझ ॥
२७
सबै जीवमा देख्छ जो, ईश्वरको स्वरूप त्यो ।
सम सबमा देख्छ जो, सत्यलाई भेट्छ त्यो ॥
२८

सबै जीवमा प्रभु देख्ने, प्रभुमा सब देख्छ जो ।
नासिनुबाट जोगिँदै, परम गतिमा पुग्छ त्यो ॥
२९

भौतिक देहद्वारा सबै, कार्य भएको जो देख्दछ ।
आत्मालाई अकर्ता मान्ने, त्यसैले सत्य बुझ्दछ ॥
३०

जीवात्माको भिन्नतालाई, एकै आत्मा जो देख्दछ ।
जीवात्मामा प्रभु देख्छ, ब्रह्मत्व त्यो पुग्दछ ॥
३१

आत्मा नित्य अविनाशी, निर्गुणी र अनादि छ ।
देहमा रहे पनि यो, अकर्ता र निर्लिप्त छ ॥
३२

सर्बव्यापक आकाश, सूक्ष्म भै निर्लिप्त छ ।
त्यस्तै देहव्यापी आत्मा, देहगुणले भिन्न छ ॥
३३

एउटै सूर्यले सारा, धर्ती उज्वल पारेझैं ।
आत्माले सब यो, पार्थ ! देह उज्यालो पार्छ है ॥
३४

भिन्न आत्मा देहबीच, तत्वज्ञानले देख्छ जो ।
त्यसैले मोक्ष पाउँछ भवबन्दन तोड्छ जो ॥
३५

चौधौँ अध्याय

# गुणत्रय विभागयोग

**श्रीकृष्ण अर्जुनलाई भन्नुहुन्छ :-**

सुनाउँछु तिमीलाई श्रेष्ठ ज्ञान सङ्क्षेपमा ।
जो जानेपछि पाइन्छ, सिद्धि ठुलो जीवनमा ॥
१

ज्ञानमा स्थित जो व्यक्ति, दैवी स्वभाव पाउँछ ।
न जन्म उसको हुन्छ, न विचलित् त्यो बन्दछ ॥
२

चेतनारूपी गर्भलाई स्थापित गर्छु योनीमा ।
जडचेतनको मेलले, जीव जन्मिन्छ धर्तीमा ॥
३

विभिन्न योनीमा जति, हुन्छ उत्पति जीवको ।
गर्भभित्र प्रकृतिको, बीजारोपण म गर्छु त्यो ॥
४

प्रकृतिबाट उत्पन्न, सत्वादी ति त्रिगुणले ।
जीवात्म र देहलाई, बाँधी राख्दछ जोडले ॥
५

सत्वगुणले त्यो सधै, निर्मल निर्विकार छ ।
कुकर्मबाट हटाई, ज्ञानको वृद्धि गर्दछ ॥
६

इच्छा काम आशक्तिले, रजोगुण जन्माउँछ ।
जीवलाई रजोगुणले, कर्मबन्धन्मा बाँध्दछ ॥
७

अज्ञानजन्य तमोगुण, जीवको मोह मानिन्छ ।
रिस, निद्रा आलस्यले, जीवलाई बाँधेको छ ॥
८

सत्वरजोगुणी मान्छे, सत्य कर्ममा लाग्दछ ।
ज्ञान ढाक्ने तमोगुणले, बहुलठ्ठी बनाउँछ ॥
९
सत्वगुण प्रमुख हुँदा, रजोतमो हराउँछ ।
रजोगुण प्रमुख बन्दा, सत्वतमो बिलाउँछ ॥
तमोगुण प्रमुख बन्दा, सत्वरजो हराउँछ ॥।
यसरी गुणअनुसार, स्वभाव सब बन्दछ ॥॥
१०
देह इन्द्रियमा जब, ज्ञानविवेक छाउँछ ।
बुझ्नुपर्छ तब तिमीले, सत्वगुण बढेको छ ॥
११
रजोगुण बढ्दा पार्थ ! अशान्ति लोभ बढ्दछ ।
सकाम कर्म दौडधुप, लक्षण त्यहाँ देखिन्छ ॥
१२
तमोगुण जब बढ्छ, अन्धकारले छोप्दछ ।
उन्माद मोह निद्रादि, लक्षण सर्वत्र देखिन्छ ॥
१३
सत्वगुण बढेको बेला, आफ्नो देह जो त्याग्दछ ।
सत्कर्मी महापुरुष, परं धाम त्यो पुग्दछ ॥
१४
मृत्युपछि रजोगुणी, सकामी भई जन्मिन्छ ।
तमोगुणी मरेपछि, पशुजुनीमा पुग्दछ ॥
१५
सत्यकर्मको फल नै, शुद्ध सुखद् हुन्छ त्यो ।
रजोकर्म दुःखदायी, तामसी त अशुभ हो ॥
१६
ज्ञान मिल्छ सत्वगुणले, रजोले लोभ जन्मिन्छ ।
अज्ञान मोह अन्धता, तमोगुणले ल्याउँछ ॥
१७

स्वर्ग पुग्छन् सतोगुणी, रजोगुणी मर्त्यलोकमा ।
आल्छी सन्की र तामसी, पुग्छन् ती नीच योनीमा ॥
१८
प्रकृति गुणबाहेक, अरुमा अकर्ता बुझ्छ जो ।
त्रिगुण पर मलाई, जो चिन्छ छ मुक्त त्यो ॥
१९
देहजन्य त्रिगुणलाई, नाघेर पर पुग्छ जो ।
जन्ममृत्यु रोगादिले, मुक्त भै पार हुन्छ त्यो ॥
२०
अर्जुन विन्ती गर्दछन्, त्रिगुण पार गर्नेको ।
केकस्तो लक्षण हुन्छ, चिन्न कसरी सकिन्छ त्यो ॥
२१
आशक्ति, मोह, प्रकाश, त्रिगुणको कर्मफल त्यो ।
पाउँदा गुम्दा कहिल्यै, न द्वेष चाह राख्छ जो ॥
२२
गुणका प्रभावबाट, न विचलित् जो स्थिर छ ।
गुणमात्र सक्रिय ठान्दै, ईश्वरमा जो एकाग्र छ ॥
२३
सधैं आफूमा स्थित भै, सुखदुःख सुनमाटो ।
प्रियाप्रिय, निन्दास्तुतिमा, सम देख्ने त्यो ज्ञानी हो ॥
२४
उच्चनीच सबै कालमा, सम रहन्छ व्यक्ति जो ।
गुणातीत कहलिन्छ त्यो, गुणबाट छ भिन्न जो ॥
२५
भक्तियोगमा लागेर, जो नित्य मलाई भज्दछ ।
प्रकृति गुण पार गर्दै, ब्रह्मत्व प्राप्त गर्दछ ॥
२६
अविनाशी, अमर, नित्य, चिदानन्दको स्रोत म ।
निराकार, प्रर शान्ति, ब्रह्मको पनि स्रोत म ॥
२७

पन्ध्रौं अध्याय

# पुरुषोत्तम योग

**श्रीकृष्ण अर्जुनलाई भन्नुहुन्छ :-**

तलमाथि जरा हाँगा, वैदिक ऋचा पात हुन् ।
अविनाशी त्यो वृक्षलाई, जान्ने ती वेदान्त हुन् ॥
१

विस्तरित सबैतिर, रूखका ती हाँगाहरू ।
प्रकृतिका त्रिगुण द्वारा, पोसिएका तिनीहरू ॥
इन्द्रियका विषय हुन्, त्यस्का हाँगाबिगाँहरू ॥।
सकाम कर्मले युक्त, अधोमुखी जराहरू ॥॥
२

संसारी यो रूखको, स्वरूप चिन्न गाह्रो छ
आदि अन्त स्थिति यस्को, थाहा हुन्न केकस्तो छ ? ॥
मानिस सक्छ चिन्न यो, आफ्नै दृढ संकल्पले ॥।
मायारूपी जरालाई, ढालिन्छ है वैराग्यले ॥॥
३

जहाँ पुगेपछि फेरि, फर्कन्न है कोही याहाँ ।
यस्तो परम् पद खोजी, गर्नुछ मान्छेले त्यहाँ
जन्म विस्तार सबको, जहाँबाट भएको छ
त्यस्तो दिव्य पद पुग्न, प्रभु शरण पर्नुछ ॥
४

असत्य मोह त्यागेर, आशक्तिबाट पर जो छ ।
इच्छा कामना छाडेर, ईश्वरमा जो रम्दछ ॥
सुखदुःख द्वन्द्वबाट, मुक्त आफू जो बन्दछ ॥।
त्यस्तो ज्ञानी मानिसले, नित्य ब्रह्मत्व पाउँछ ॥॥
५

फेरि जन्मनु पर्दैन, ईश्वरमा जो पुग्दछ ।
प्रकाश पनि चाहिन्न, ज्योतिपुञ्ज स्वयं जो छ ॥
६

जीवमा रहने जीवात्मा, मेरै अंश हो त्यो बुझ ।
पाँचै इन्द्रिय मनलाई, यस्ले आकर्षित गर्दछ ॥
७

जस्तै गन्ध बोकी हावा, धेरै ठाउँमा पुग्दछ ।
जीवात्मा देह छोडेर, अर्को देहमा पस्दछ ॥
८

शरीरधारी जीवले, मनमा आश्रित इन्द्रिय ।
आँखा, कान, नाकद्वारा, विषयलाई भोग्दछ ॥
९

शारीरिक स्थितिलाई, अज्ञानी न त बुझ्दछन् ।
विवेक र तत्वज्ञानले, ज्ञानी सब ती जान्दछन् ॥
१०

आत्मा चिनेको हुन्न जो, मन अशुद्ध राख्दछ ।
आत्मज्ञानीले मात्र है राम्ररी आत्मा चिन्दछ ॥
११

सूर्यको तेजिलो ज्योति, निस्केको छ मबाट नै ।
चन्द्रमा आगोको तेज, निस्कन्छ है मबाट नै ॥
१२

धारण गर्छु म पृथ्वी, सम्पूर्ण आफ्नो शक्तिले ।
पोषण गर्छु म जीवको, चन्द्र बनी अमृतले ॥
१३

प्राणीको देहमा बस्ने, पाचन्अग्नि पनि म हुँ
प्राणअपान वायुद्वारा, सबै खाना पचाउँछु ॥
१४

प्राणीको मनमा बस्ने, अन्तर्यामी त्यो तत्व म ।
सम्झनु, बिर्सनु, जान्नु, त्यसको उत्पत्ति स्रोत म ॥
वेदद्वारा जानिन योग्य, ब्रह्मतत्व त्यो ज्ञान म ॥।
समस्त वेदलाई जान्ने, सर्वज्ञ हुँ पनि त म ॥।
१५

सोह्रौं अध्याय

# दैवी तथा आसुरी स्वभाव

श्रीकृष्ण भन्छन्, हे पार्थ ! आत्मशुद्धि र चिन्तन ।
संयम, दान, स्वाध्याय, दिव्य ज्ञान अनुशीलन ॥
सत्य, अहिंसा, यज्ञादि, सत्कर्म र सदाचरण ॥।
वेदाध्ययन र पूजन, जीवका हुन् यी दिव्य गुण ॥॥

१

अहिंस्रक शान्त अक्रोधी, त्यागी मिठो बोल्छ जो ।
कार्य गर्दै पनि अकर्ता, आफूलाई ठान्छ जो ॥
चित्तलाई काबुमा राख्ने, परनिन्दा गर्दैन जो ॥।
नम्र, दयालु, अलोभी, गुणी पुरुष बन्छ त्यो ॥॥

२

क्षमा, धर्म, पवित्रता, शुद्ध, ममतारहित जो ।
दिव्य गुणले सम्पन्न, देव तुल्य मानिन्छ त्यो ॥

३

अहंकार, राग, क्रोध, रुखो बोली घमण्ड त्यो ।
कठोरता अज्ञानता, हुन राक्षसी स्वभाव यो ॥

४

मोक्ष मिल्ने दैवीगुण, बाँधिन्छ त्यो आसुरीले ।
चिन्ता नगर तिमी पार्थ ! युक्त छौ दैवीगुणले ॥

५

दैवीआसुरी स्वभावका, जीव हुन्छन् संसारमा ।
आसुरी स्वभावबारे, पार्थ ! भन्छु विस्तारमा ॥

६

आसुरी स्वभाव जान्दैन, कुन राम्रो नराम्रो हो ? ।
पवित्र, शुद्ध, आचरण, सत्य उस्मा पाइँदैन जो ॥

७

अस्तित्व छैन ईश्वरको, सत्य यो नै संसार हो ।
कामवासनायुक्त देह, आसुरको यो सोचाइ हो ॥

८

झुठो ज्ञानको पछि लाग्ने, जसको बुद्धि भ्रष्ट छ ।
यस्तो आसुरी मान्छेले, सबको विनाश गर्दछ ॥

९

आसुरी स्वभावको मान्छे, झुठो सानमा बाँच्दछ ।
असत्यको आश्रय लिंदै, पापकार्ममा लाग्दछ ॥

१०

इन्द्रिय विषय भोगमा, अति चाहना राख्छ जो ।
मृत्युसम्म दुःखचिन्ताले, घेरी बस्दछ व्यक्ति त्यो ॥

११

आसामा बाँधिएर, जो कामक्रोधमा फस्दछ ।
विषय भोगकै लागि, अन्यायले त्यो कमाउँछ ॥

१२

आर्जित धनले भोलि धेरै धन बढाउँछु ।
आसुरी स्वभाव सोच्दछ, सुखी त्यसरी बन्दछु ॥

१३

मारें शत्रुलाई मैले, अरुलाई नि मार्नेछु ।
आसुरी व्यक्ति सोच्दछ, शक्तिशाली म बीर हुँ ॥

१४

धनी कुलीन पनि हुँ, दान यज्ञादि गर्दछु ।
मसमान अरु क्वै छैन, आसुरी व्यक्ति सोच्दछ ॥

१५

अज्ञानले गर्दा मान्छे, मोहजालमा फँस्दछ ।
इन्द्रियभोगमा लागेर, नरकमा त्यो पर्दछ ॥

१६

धनमानले आफूलाई, ठूलो मान्छे जो ठान्दछ ।
शास्त्र विधि शून्य यज्ञादि, नामको लागि गर्दछ ॥

१७

काम, क्रोध, अहंकार, घमण्डयुक्त मानिस ।
हृदयबासी प्रभुको, निन्दा द्वेष त्यो गर्दछ ॥
१८
अधर्मी, क्रूर, ईर्ष्यालु, पापी, कुकर्मीलाई म ।
संसारमा बारम्बार, असुर योनीमा झार्छु म ॥
१९
आसुरी जुनीको मान्छे, प्रभुलाई भेट्दैन है ।
नीच जुनीमा झर्दै त्यो, जुगौंसम्म तड्पिन्छ नै ॥
२०
काम क्रोध लोभले सधैं, नर्कतर्फ धकेल्दछ ।
आत्मविनाशी यिनलाई, त्याग्नुमा नै कल्याण छ ॥
२१
नर्कबाट आफूलाई, पार्थ ! जो मुक्त गर्दछ ।
आफ्नो कल्याण गरेर, परंगतिमा त्यो पुग्दछ ॥
२२
शास्त्रविधिलाई त्यागी, मनोमानी कर्म गर्छ जो ।
न सिद्धि सुख आनन्द, न परं गति भेट्छ त्यो ॥
२३
कर्तव्य अकर्तव्यको, यौटै प्रमाण शास्त्र हो ।
शास्त्रविधिअनुसार, कर्म गर्नु उचित हो ॥
२४

सत्रौं अध्याय

# श्रद्धात्रय विभाग योग

शास्त्रविधि बीना श्रद्धाले, देव पुज्ने मानिस त्यो ।
सत्व, रजो, तमो कुन हो ? अर्जुन सोध्छन् प्रश्न त्यो ॥
१

**श्रीकृष्ण अर्जुनलाई भन्नुहुन्छ :-**

सात्विक, राजसी, तामसी, श्रद्धा हुन्छन् तिनैथरी ।
स्वभावअनुसार ती, बताउँछु सुन तिमी ॥
२

अ-आफ्नो सत्वअनुरूप, श्रद्धा बन्छ त्ससैगरी ।
आर्जित गुणकै कारण, श्रद्धा बन्छ उसैगरी ॥
३

सात्विक पुज्छन् देवता, राक्षस पुज्छन् राजसी ।
भूत प्रेतादिहरूलाई, पुज्छन् ती तमोगुणी ॥
४

आसुरी भावको मान्छे, बलको भर मातिन्छ ।
घमण्डले शास्त्रविरुद्ध, घोर तप त्यो गर्दछ ॥
५

आत्मा अनि शरीरलाई, दुःख र कष्ट दिन्छ जो ।
त्यस्तो मूर्ख भ्रमित् प्राणी, हुन्छ आसुरी भावको ॥
६

प्रकृतिको गुणानुसार, खाना हुन्छन् तिनैथरी ।
यज्ञ, तप, दानमा पनि भेद हुन्छन् त्यसैगरी ॥
७

आयु, बुद्धि, बल, आरोग्य, जसले दिन्छ सधैंभरी ।
रुचाउँछ सतोगुणी त्यो, खाना जो छ हितकारी ॥
८

तितो पिरो, अमिलो र, तातो, नुनिलो रुखो त्यो ।
रोग, पीडा दिने त्यस्तो, प्यारो खाना राजसीको ॥
९
बासी निरस गन्हाउने, सडेको र जुठो पनि ।
प्रिय लाग्छ तामसीलाई, त्यस्तो खाना सधैंभरि ॥
१०
मनले फलेच्छा त्यागी, कर्तव्यले यज्ञ गर्छ जो ।
शास्त्रविधिले सम्पन्न यज्ञ सात्विक हुन्छ त्यो ॥
११
फलको इच्छा राखेर, गरिने यज्ञ कर्म ती ।
राजसी यज्ञ मानिन्छ, पार्थ ! बुझ कुरा तिमी ॥
१२
शास्त्रविधि अन्नदान, दक्षिणा मन्त्रविहीन जो
श्रद्धाविना गरिएको, यज्ञ तामसी हुन्छ त्यो ॥
१३
आमाबाबु गुरु ज्ञानी, देव ब्राह्मणको पुजा ।
ब्रह्मचर्य अहिंसा हुन्, दैहिक ती तपका कुरा ॥
१४
साँचो मिठो हितकारी, प्रिय नरम बोली जो ।
वेदाभ्यास हरिजप, वाणीको तप हुन्छ त्यो ॥
१५
चित्त प्रशन्न सरलता, मौन गम्भीरता अनि ।
आत्मसंयम भावशुद्धि, मानस तप हुन् तिनी ॥
१६
फलेच्छा नराख्ने योगीले, श्रद्धाबाट गरिएका ।
सात्विक तप कहलिन्छ, तप छन् तीन प्रकारमा ॥
१७
सम्मान स्वार्थका लागि, अहंले गरिने सबै ।
क्षणिक अस्थिर तप, राजसी तप हुन्छ है ॥
१८

अविवेकी भै आफूलाई, कष्ट पीडा दिने अति ।
अरुको अनिष्ठ गर्न, गरिने तप तामसी ॥
१९
कर्तव्य सम्झी दान दिनु, आशा नराखी फलको ।
सही स्थान र पात्रलाई, दिने दान सात्विक हो ॥
२०
केही पाउने आशाले, फलको इच्छा राखेर ।
राजस दान हुन्छ त्यो, जो दिइन्छ नचाहेर ॥
२१
कुवेला अशुद्ध स्थानमा, अयोग्य व्यक्तिलाई जो ।
नसोची अनादरले, दिने दान तामस हो ॥
२२
ॐ तत्सत् यी नाम तीन, प्रतीक मानिन्छ ब्रहमको
सृष्टि गर्दा यिनैबाट, ब्राम्हण वेद बनेको हो ॥
२३
ब्रह्मत्व प्राप्तिका लागि, शास्त्रसम्मत क्रिया सबै ।
यज्ञतप दानादि यी, थालिन्छ ॐकारले सधैं ॥
२४
फलको इच्छा त्यागेर, बोल्दै ॐ शब्द त्यो ।
मोक्ष प्राप्तिका लागि नै, यज्ञ दानादि गर्ने हो ॥
२५
सत्कर्म श्रेष्ठभावको, पर्याय "सत्" शब्द हो ।
सबै सत्कार्यका लागि, बोलिन्छ "सत्" शब्द त्यो ॥
२६
आस्थापूर्वक गरिने, यज्ञ, तप दानादि ती ।
दैवीप्रितिका लागि यी, सत्कर्म हुन् सबै तिनि ॥
२७
श्रद्धाबिना जति धेरै, यज्ञतप गरे पनि ।
अनित्य असत् हुन्छ त्यो, व्यर्थ हुन्छ सधैंभरी ॥
२८

अठारौं अध्याय

# मोक्षसन्यास-योग

अर्जुन भन्छन् महाबाहु, अर्न्तयामी हे माधव !
सन्यास त्याग तत्वादि, सबै जान्न चाहन्छु म ॥
१

**श्रीकृष्ण भन्नुहुन्छ, हे अर्जुन !**

काम्य कर्मको त्याग नै, भन्छन् त्यो सन्यास हो ।
कर्मको फल त्याग्नु नै, कोही भन्छन् त्याग हो ॥
२

दोषयुक्त सकाम कर्म, त्याग्नुपर्छ कोही भन्दछन् ।
यज्ञ दान तप कर्मादि, नत्याग्नु कोही भन्दछन् ॥
३

त्यागको विषयमा मेरो, भनाइ सुन अर्जुन ।
शास्त्रअनुसार त्याग, हुन्छन् तीन तिमी बुझ ॥
४

यज्ञ दान तपादि यी, नत्यागी गर्न योग्य छन् ।
तीन यी कर्महरूले, सबैलाई शुद्ध पार्दछन् ॥
५

त्यसैले यज्ञादि कर्म, कर्तव्यकर्म अरु पनि ।
अनाशक्त भई सबले, गर्नु राम्रो बुझ तिमी ॥
६

स्व: कर्तव्य कर्मको त्याग, गर्नु राम्रो हुँदैन त्यो ।
नजानी कर्मको त्याग, तामस त्याग हुन्छ त्यो ॥
७

दु:खकष्टको डरले, त्याग्छ नित्य कर्म जो ।
राजसी त्याग मानिन्छ, निष्फल हुन्छ कर्म त्यो ॥
८

इच्छा आशक्तिको त्याग, शास्त्रसम्मत कर्म जो।
कर्तव्य सम्झी गर्दछ, सात्विक त्याग बन्छ त्यो ॥
९
शंकारहित बुद्धिमानी, सात्विक त्यागी त्यो बन्दछ।
न शुभ कर्ममा आशक्त, कसैमा घृणा न गर्दछ ॥
१०
देहधारी त्यो व्यक्तिले, न कर्म त्याग्न सक्दछ।
जो कर्मलाई त्याग्दछ, सच्चा त्यागी त्यो बन्दछ ॥
११
कर्मफल नत्याग्नेले, भोग्नुपर्छ फल अति।
फल इच्छा त्यो त्याग्नेले, भोग्दैन फल क्वै पनि ॥
१२
सर्व कार्यसिद्धिको मार्ग, उल्लेख छन् ती वेदमा।
कारक तत्व पाँच छन्, सुन पार्थ ! सङ्क्षेपमा ॥
१३
शरीर, आत्मा, इन्द्रिय, परमात्मा प्रयास ती।
कारक तत्व पाँच हुन्, हाम्रा कर्मादीका यिनी ॥
१४
मन बोली शरीरले, सत्असत् कर्म जेजति।
पाँचकारक तत्वले, मानिस गर्छन् कर्म ती ॥
१५
नमानी कारक तत्व, स्वयं कर्ता जो ठान्दछ।
बुद्धिमान् त्यो मानिन्न, न यथार्थ त्यो बुझ्दछ ॥
१६
भन्दैन जो म कर्ता हुँ, अनाशक्त बुद्धि जस्को छ।
हत्याको पाप लाग्दैन, कर्ममा न त्यो बाँधिन्छ ॥
१७

ज्ञाता ज्ञान ज्ञेय हुन्, प्रेरक तत्व कर्मको ।
कर्ता कारण क्रिया हुन, तीन यी संग्रह कर्मको ॥
१८
प्रकृतिका गुणानुसार, ज्ञान कर्म कर्ता पनि ।
तीनैथरि हुन्छन् ती, सोबारे पार्थ ! सुन तिमी ॥
१९
विविध जीवमा बस्ने, एकै आत्मा छ है भनी ।
जुन ज्ञानले बुझाउँछ, सत्ज्ञान हो बुझ तिमी ॥
२०
विभिन्न देहानुसार, आत्मा हुन्छन् धेरै भनी ।
जुन ज्ञानले बुझाउँछ, रजो ज्ञान बुझ तिमी ॥
२१
अज्ञानी भै असत्लाई, सत्य कर्म हो यो भनी ।
प्रेरित गर्छ जुन ज्ञानले, बुझ तामस हो भनी ॥
२२
फल इच्छा नराखेर, राग द्वेषरहित जो ।
नियमित कर्म गर्दछ, सात्विक कर्म हुन्छ त्यो ॥
२३
भोगेच्छा मनमा राख्दै अहम्ले गरिने सबै ।
अतिकडा परिश्रम, राजसी हुन्छ बुझ सधैं ॥
२४
नकार्दै शास्त्रविधि त्यो, परपीडाका लागि जो ।
मोहले गरिने कर्म, सबै तामसी हुन्छ त्यो ॥
२५
असंङ्गी निरहंकारी, धीर उत्साही व्यक्ति जो ।
सम हुन्छ लाभहानीमा, सतोगुणी मानिन्छ त्यो ॥
२६

रागी आशक्ति फलकामी, लोभी दुष्ट अशुद्ध जो
हर्षशोकमा लिप्त छ, रजोगुणी मानिन्छ त्यो ॥
२७

हठी नास्तिक नालायक, परनिन्दक, धूर्त जो
अल्छी चिन्तित कामचोर, तमोगुणी मानिन्छ त्यो ॥
२८

प्रकृतिको गुणानुसार, बुद्धि र धैर्यको पनि ।
भेद तीन बताउँछु, धनञ्जय ! सुन तिमी ॥
२९

ठिक के हो भय के हो ? के हो त्यो मोक्षबन्धन ।
जसले भेद यो बुझ्छ, बुद्धि त्यो बुझ सात्विक ॥
३०

धर्म अधर्म कर्तव्य, अकतर्व्य कुनै पनि ।
जान्दैन जुन बुद्धिले, बुझ राजसी हो भनी ॥
३१

तमो बुद्धिले सधैं नै, अधर्म धर्म सम्झन्छ ।
तामसी बुद्धिको व्यक्ति, विपरीत कर्म गर्दछ ॥
३२

शुद्ध भावनाले जस्ले इन्द्रियको मन प्राण ।
क्रियालाई योगाभ्यासले, गर्छ सात्विक धारण ॥
३३

आशक्त भै फल इच्छाले, धर्म अर्थ र कामको ।
धारण गर्छ भने पार्थ ! राजस धारण हुन्छ त्यो ॥
३४

निन्द्रा भय चिन्ता मोह, त्यागन जो न सक्दछ ।
त्यस्तो निर्बुद्धि धारण, तामसी मान्नु पर्दछ ॥
३५

सुखदुःखबाट पार, हुन्छ जीव कसोरी है ? ।
तीन सुखका बारेमा, भन्छु सुन म पार्थ ! है ॥
३६
सुरुमा कष्ट भए पनि, पछि अमृत हुन्छ जो ।
आत्मबुद्धिको प्रेरक, सात्विक सुख हुन्छ त्यो ॥
३७
इन्द्रिय सुख सुरुमा, अमृततुल्य भए पनि ।
अन्त्यमा जो दुखद् बन्छ, त्यो सुख हो रजोगुणी ॥
३८
निन्द्रा आलस्य मोहबाट, उत्पन्न हुने सुख जो ।
आत्मा चिन्तनविहीन, 'तामस' सुख मानिन्छ त्यो ॥
३९
प्रकृतिका त्रीगुणबाट, प्रभावित छन् सबै जति ।
स्वर्ग वा मृत्युलोकका, मानिसहरू जहींतहीं ॥
४०
ब्राह्मण क्षेत्री वैश्य शुद्र, त्रिगुणका सबै धनी ।
प्रकृतिका गुणानुसार, विभाजित कर्ममा तिनी ॥
४१
साम दाम तप सौच, क्षमा सरल आत्मज्ञान ।
गुण हुन् ब्राह्मणका यी, जसले हुन्छ कर्मकाण्ड ॥
४२
तेज धैर्य बहादुर, नेतृत्व शौर्य दान जो ।
स्वाभिमानी युद्धालु यी, स्वभाविक गुण क्षेत्रीको ॥
४३
कृषि व्यापार गौपालन, स्वाभाविक कर्म वैश्यको
सेवा गर्नु समाजको, स्वभाविक कर्म शुद्रको ॥
४४

गुणानुसार कर्म गर्दा, सहज सिद्धि मिल्दछ ।
स्वाभाविक कर्म गर्नेले, सिद्धि सजिलै पाउँछ ॥
४५
जीवको उत्पति स्रोत, सर्वव्यापक ईशको ।
कर्मानुसार जो पुज्दछ, परं सिद्धि पाउँछ त्यो ॥
४६
राम्रो धर्म अरुको भन्दा, नराम्रै आफ्नो श्रेष्ठ हो ।
कर्म गर्दा गुणानुसार, भागी हुन्न त्यो पापको ॥
४७
दोषले ढाकिएको छ, कर्महरू यहाँ सबै ।
दोषपूर्ण भए पनि, स्वधर्म त्याग्नु हुन्न है ॥
४८
आशक्ति भोगेच्छा त्यागी, आत्मसंयमी जो बन्दछ ।
सन्यास कर्मद्वारा त्यस्ले, नैष्कर्म सिद्धि पाउँछ ॥
४९
सिद्धिलाई पाउनेले कसरी ब्रह्म भेट्छ त्यो ।
म बताउँछु कौन्तेय ! ध्यानले तिमी सुन यो ॥
५०
विशुद्ध बुद्धिले युक्त, धैर्यले मन जित्छ जो ।
त्यागी विषय संग्रह, अरागद्वैषी हुन्छ जो ॥
५१
एकान्त वास अल्पाहार, वाणी संयम गर्छ जो ।
नित्य ध्यानास्थ: वैराग्य, आश्रय लिई बस्छ जो ॥
५२
अहंकार काम क्रोध, मिथ्या ममता त्याग्छ जो ।
त्यस्तो शान्त धीर व्यक्ति, ब्रह्ममा स्थित हुन्छ त्यो ॥
५३

ब्रह्मस्थित सुखी व्यक्तिले, तृष्णा शोक गर्दैन है ।
समभावी परंयोगी त्यो ब्रह्मलोकमा पुग्छ नै ॥
५४

भक्तिले मात्र प्रभुको, यथार्थ रूप जानिने ।
तत्वद्वारा ब्रह्म चिन्दा, परम् धाममा पुगिने ॥
५५

मेरै आश्रयमा भक्तले, सबै कर्म त्यो गर्दछ ।
मेरै कृपाले कर्मयोगी, नित्य धाममा पुग्दछ ॥
५६

सबै कर्म ती अर्पेर, आश्रयमा रहू मेरै ।
बुद्धियोगको आडले, राख चित्त ममा सधैं ॥
५७

चित्त ममै लगाएमा, विघ्न बाधा त्यो टर्दछ ।
अहंले मलाई नपुज्दा, विनाशतर्फ लाग्दछ ॥
५८

मोहले युद्ध नगर्ने, तिम्रो सोच बेठिक हो ।
युद्धमा अगाडि बढ्नु, स्वभाविक तिम्रो गुण हो ॥
५९

मोहवश युद्ध गर्न, तिमी मानेका छैनौ है ।
स्वभावैले तिमी पार्थ ! बाध्य हुन्छौ युद्ध गर्न नै ॥
६०

आफ्नो मायाद्वारा यहाँ, सर्वज्ञ ती ईश्वरले ।
देहधारी जीवात्मलाई, घुमाउँछन् है कर्मले ॥
६१

उनै परमात्माको लौ, शरण पर हे भारत !
कृपाले आनन्द पाई, पुग्छौ धाम त्यो शाश्वत ॥
६२

गोप्यमा अति गोप्य, दिएँ ज्ञान तिमीलाई यो।
चिन्तन गरी ज्ञानको, पाउँछौ चाहना छ जो॥
६३

प्रिय मित्र तिमीलाई, गोप्य ज्ञान दिँदैछु म।
परं हितकारी ज्ञान, भन्दछु उपदेश म॥
६४

चिन्तन गर सधैं मेरो, भक्तिले नमन गर।
प्रिय मित्र वचन दिन्छु, मलाई पाउँछौ हेर॥
६५

शरणमा मेरो आऊ, सबै कुरा त्यागी तिमी।
पापबाट तिमीलाई, मुक्त गर्छु सधैंभरी॥
६६

आशक्त अभक्त अज्ञानी, ममा जो दोष देख्दछ।
त्यस्तो व्यक्तिलाई, गोप्य, ज्ञान दिनु त व्यर्थ छ॥
६७

जो भक्तले परम ज्ञान, प्राप्त मबाट गर्दछ।
निश्चय त्यस भक्तले, परम पद पाउँछ॥
६८

भक्तभन्दा प्रिय मेरो, अरु हुन्न कोही यहाँ।
मेरा लागि अति प्रिय, भक्त हुन्छ संसारमा॥
६९

हामीबीचको संवाद, जस्ले अध्ययन गर्दछ।
ज्ञानयोगद्वारा उस्ले मेरो पुजन गर्दछ॥
७०

श्रद्धाले दोषरहित, जस्ले यस्लाई सुन्दछ।
पापबाट मुक्त भई, पुण्यलोकमा पुग्दछ॥
७१

एकाग्र चित्त गरी पार्थ ! गीता ज्ञान सून्यौ अतीः ।
तिम्रो त्यो मोह अज्ञान, पार्थ ! नाश भएछ कि ?
७२

**अर्जुन बिन्ती गर्छन् ।**

तिम्रो कृपाले हे कृष्ण ! मोह नष्ट भयो मेरो ।
आज्ञाकारी छु म तिम्रो, शंका हट्यो, स्मृति मिल्यो ॥
७३

**सञ्जय भन्छन्–**

कृष्ण अर्जुन बीचको, अमृत कुरा सुनेर त्यो ।
रोमाञ्चित बन्न पुग्दैछ, शरीर मेरो सम्पूर्ण यो ॥
७४

व्यासजीको कृपाले मैले, दिव्य दृष्टिद्वारा यहाँ ।
प्रत्यक्ष गोप्य वार्ता त्यो, सुन्ने मौका पाएँ यहाँ ॥
७५

केशव अर्जुनबीचको, अमूल्य दिव्य वार्ता यो
हर्षले विभोर हुन्छु म, स्मरण गर्दै त्यो क्षणको ॥
७६

विलक्षण रूप कृष्णको, हरदम सम्फी मनले
आश्चर्य गर्दै चित्तमा, आनन्दित हुन्छु हर्षले ॥
७७

राजन् ! योगेश्वर, कृष्ण र भक्त अर्जुन छन् जहाँ ।
विजय विभूति शक्ति, आउँछ साँच्चै हेर त्यहाँ ॥

**"त्वदीयम् वस्तु गोविन्द तुभ्यमेव समर्पय"**

**॥ समाप्त ॥**

# गीताको उपदेशको आवश्यकता किन पऱ्यो ?

कुरुवंशीय राजा सन्तनुका जेठा छोरा देवव्रतले आजन्म विवाह नगर्ने अठोट लिएपछि उनका विमातृतर्फका भाइका श्रीमतीहरूका तर्फबाट धृतराष्ट्र र पाण्डु दुई भाइको जन्म भयो। धृतराष्ट्र जन्मदा नै अन्धो भएर जन्मेका हुनाले उनी राजा हुन अयोग्य सावित भए र उनका भाइ पाण्डु हस्तिनापुरका राजा बनाइए। पाण्डु राजाका दुई श्रीमतीतर्फबाट पाँच भाइ पाण्डवहरूको जन्म भएपछि पाण्डु राजा स्वर्गारोहण भए र त्यसबेला उनका छोराहरू युधिष्ठिर, भीमसेन, अर्जुन, नकुल र सहदेव नावालक नै भएकाले देशको राज्यभार उनको दाजु धृतराष्ट्रले सम्हाल्न पुगे। धृतराष्ट्र शारीरिकरूपले मात्र अन्धो नभई मानसिक र बौद्धिकरूपले पनि अन्धा अपाङ्ग थिए। पुत्रमोहले गर्दा उनले आफ्नो भतिजा पाण्डुका छोराहरूप्रति सानै अवस्थादेखि ठूलो अन्याय, अत्याचार र कपटपूर्ण व्यवहार गर्दै आए। धृतराष्ट्रका जेठा छोरा दुर्योधनलगायत अन्य सयभाइ छोराहरू जसमध्ये एकदुईजनालाई छोडेर अरु सबै बाबु जस्तै कपटी, धमण्डी, बदनियतपूर्ण र अविवेकी थिए। कौरव पक्षको सो अन्यायपूर्ण कार्यले गर्दा पाण्डव परिवारले सुरुदेखि नै धेरै कष्ट र अपमान सहनुपऱ्यो। कौरव भाइहरू दुष्ट, अधर्मी, र असत्यका प्रतीक थिए भने पाण्डव भाइहरू सत्य, धर्म र न्यायको पक्षमा थिए। महाभारत इतिहासको प्रमुख पात्रको रूपमा रहनुभएको श्रीकृष्णले जहिले पनि सत्य र धर्मकै पक्षमा आफूलाई उभ्याउनुभयो र पाण्डवहरूको रक्षा गर्दै आउनुभयो। हस्तिनापुर राज्यमा धृतराष्ट्रका सयभाइलाई कुकर्ममा लाग्न प्रेरित गर्ने उनीहरूका मामा सकुनी प्रमुख पात्र थिए। त्यहा सत्य, धर्म र न्यायमा लागेका अन्य महापुरुषहरू जस्तै : भिष्मपितामह, विदुर, द्रोणाचार्य, कृपाचार्य जस्ता व्यक्तित्वहरू पनि थिए, तर पनि राजा धृतराष्ट्रको पुत्रमोह र हठको सामु उनीहरू आफ्नो आँखा सामुन्ने भएका अन्याय र अत्याचारका कार्यहरूको विरुद्ध आवाज उठाउन नसकी नतमस्तक थिए।

पाण्डवहरूलाई उनीहरूको हिस्सा स्वरूप सानो गाउँमात्र उपलब्ध गराइएमा उनीहरू सन्तोष मान्ने छन् भनी श्रीकृष्णले धृतराष्ट्रलाई अनुरोध गर्दा पनि धृतराष्ट्रले सो दिन नमानेपछि लडाइँ नै एकमात्र बाध्यता हुन पुग्यो। कौरव पक्षले पाण्डव पक्षमाथि गरेको अन्याय अत्याचार र कुकर्मले सीमा नाघ्न थालेपछि सत्य र धर्मको रक्षा गर्न र अन्याय र पापको नाश गर्न श्रीकृष्णले पाण्डवहरूलाई लडाइँ गर्न प्रोत्साहित गर्नुभयो। कुरुक्षेत्रको मैदानमा कौरव र पाण्डवहरूको बीच लडाइँ प्रारम्भ भयो। पाण्डवहरूको पक्षमा श्रीकृष्ण हुनुहुन्थ्यो र उहाँ अर्जुनको सारथी बन्नुभएको थियो भने कौरव पक्षमा भिष्म, द्रोण, कृपाचार्य, अस्वस्थामा, कर्णजस्ता धेरै महारथीहरू थिए। लडाइँको मैदानमा बिपक्षीतर्फ आफ्ना प्रिय तथा मान्यवर पितामह भिष्म, गुरु द्रोणाचार्य, कृपाचार्य तथा आफ्ना भाइ बान्धव र नातेदारहरूलाई देखेपछि अर्जुन लडाइँ गर्न हतोत्साही भई लडाइँ नगर्ने पक्षमा पुग्छन्। अर्जुन श्रीकृष्णलाई बिन्ती गर्दै भन्दछन्- "हे प्रभु ! म विपक्षमा आफ्ना सबै मान्यवर बाजे, गुरु, पुरोहित, दाजुभाइ तथा नातेदारमात्र देख्दछु उनीहरूसँग म कसरी लडाइँ गरुँ ? मैले उनीहरूलाई कसरी मारूँ ? लडाइँमा उनीहरूलाई मार्नुपर्दा मलाई ठूलो पाप लाग्नेछ। उनीहरूलाई मारेर प्राप्त हुने राज्य सुखभोगले मलाई आनन्द दिँदैन। म बन्धुबान्धव हत्या गर्न चाहन्न" भनेर अर्जुनले गाण्डिव धनुषलाई एकातिर फालेर शोक गर्न थाले। अर्जुनलाई सम्झाई बुझाई लडाइँ गर्न अग्रसर तुल्याउनको लागि श्रीकृष्णले गीताको उपदेश दिन थाल्नुहुन्छ। अर्जुनको म, मेरो र आफन्तप्रतिको मोह र अज्ञानतालाई हटाई उनीलाई आफ्नो कर्तव्य कर्मतर्फ अग्रसर गराउनु आवश्यक थियो। त्यसैले श्रीकृष्णले शरीरको शरीरकानश्वरता र आत्माको अमरतालाई बुझाउन जरुरी ठान्नुभयो।

उहाँले भन्नुभयो- "म र मेरो केही होइन र यो शारीरिक नाता क्षणिक हो। हामी कर्ता होइनौ, सिर्फ माध्यम मात्र हौं। कर्मगर फलको आशा नगर। तिमीले जे जति कर्म गर्छौ सो ईश्वरमा अर्पण गर।

त्यसो गर्दा तिमी कर्मबन्धनबाट मुक्त हुन्छौ।" यस्ता अति गहन तथा उपयोगी उपदेश दिएर अर्जुनको मोह भंग गर्न श्रीकृष्ण सफल हुनुभयो। मोह भंग भई ज्ञान प्राप्त भएपछि अर्जुन लडाईं गर्न तयार हुनुभयो। अर्जुनलाई कुरुक्षेत्रको मैदानमा लडाईं गर्न अग्रसर गराउने हेतुले मात्र श्रीकृष्णले गीताको उपदेश दिनुभएको नभई समस्त मानव जातिलाई कर्म, ज्ञान र भक्तिको माध्यमबाट पाप र अन्यायको विरुद्ध लड्न प्रेरित गर्नुथियो। गीतामा श्रीकृष्णले मानवजीवनको महत्व र संसारी वस्तुको नश्वरतालाई दर्शाउँदै समस्त मानव जातिलाई असत्य र अन्यायको विरुद्ध लड्ने प्रेरणा दिनुभएको छ।

श्रीमद्भगवद् गीता समस्त मानव जातिलाई शान्ति र आनन्द दिने जीवन र जगतको सही स्वरूप चिनाउने, सबै प्राणीमात्रमा सद्भाव र प्रेम बढाउने र ज्ञानभक्ति र कर्मद्वारा मानवजीवन सार्थक बनाई अन्तमा मोक्ष प्राप्त गर्ने साधन हो। यो ज्ञान, भक्ति र कर्मको समन्वयात्मक आख्यान हो, जसले मनको कमजोरीलाई हटाएर कर्तव्य कर्म गर्न मानिसलाई अग्रसर गराउँछ। यो ब्रह्मविद्या र योग विद्या पनि हो। कर्म ज्ञान र भक्तिको योगद्वारा मानिसले यस संसारमा सिद्धि प्राप्त गर्ने र अन्त्यमा मोक्ष प्राप्त गर्ने कुरामा गीताले जोड दिएको छ। आज लोभ, पाप, घृणा र अहंकारले प्रत्येक समाज तथा राष्ट्रहरूमा कलह, झगडा, हत्या, हिंसाजस्ता कुकर्महरू बढिरहेको छ। समाजमा अशान्ति, असुरक्षा र अत्याचारले गर्दा समस्त मानवजाति ठूलो संकटमा परेको छ। यस्तो अवस्थामा गीताको उपदेश समस्त मानव जातिको लागि अमृतको काम गर्दछ। "म" "मेरो" को भावबाट सिर्जित मोह र अहंकारले गर्दा आज मानव समाज भ्रष्ट, अनैतिक र क्रूर बन्न पुगेको छ। विश्वभर नै मानवीय मूल्य र मान्यता हराएको बेला अमान्य क्रियाकलापहरू बढ्दै जानु स्वाभाविकै हो। यस्तो बेलामा गीताले बताएको उपदेश नै एकमात्र उपाय हो जसले मानिसलाई दानवबाट मानव बनाउन र समाजमा चिरसुख, शान्ति र समृद्धि स्थापित गर्न सहयोग पुऱ्याउन सक्नेछ।

# पहिलो अध्याय

व्यासजीको कृपाले प्राप्त दिव्यदृष्टिको माध्यमबाट सञ्जयले कुरुक्षेत्रको मैदानमा पाण्डव र कौरवबीच प्रारम्भ हुनलागेको युद्धको घटना विवरण महाराज धृतराष्ट्रलाई सविस्तार सुनाउन लागेको प्रसङ्गबाट श्रीमद्भगवद गीताको शुभारम्भ हुन्छ। श्रीमद्भगवद् गिताको पहिलो अध्याय समस्त गीताको पृष्ठभूमि अर्थात भूमिका हो। कुरुक्षेत्रको युद्धभूमिबाट मेरा र पाण्डुका छोराहरूबीच के कस्तो हुँदैछ ? भनेर धृष्टराष्ट्रले सञ्जयलाई सोधेपछि सञ्जयले आफ्नो दिव्यदृष्टिद्वारा रणभूमिमा देखेका सबै दृश्यहरू एक-एक गरी धृष्टराष्ट्रलाई सुनाउन थाल्दछन्। रणभूमिमा दुवैतर्फका सेनाहरूमा उपस्थित भएका राजा, माहाराजा र अन्य महावीरहरूबारे धृष्टराष्ट्रलाई जानकारी गराउँदै सञ्जय भन्दछन्- हे माहाराज! व्यूहरचनायुक्त भई कुरुक्षेत्रको मैदानमा पाण्डवपक्षमा उपस्थित हुनेहरूमा अर्जुन, भीम, युधिष्ठिरलगायत पाँचै भाइ पाण्डवका अतिरिक्त धृष्टद्युम्न, द्रुपद, सात्यकी, विराटजस्ता पराक्रमी राजाका साथै धृष्टकेतु, चेकितन, काशीराज, कुन्तिभोज, शैव्य, पुरुजीत, युधामन्यु, अभिमन्यू, द्रौपदीका छोराहरूजस्ता शुरबीरहरूको उपस्थित छ भने कौरवसेनातर्फ एकसय कौरव भाइका अतिरिक्त भिष्म पितामह, गुरु द्रोणाचार्य, कुलगुरु कृपाचार्य, महापराक्रमी कर्ण, विकर्ण, अश्वस्थामा, भूमिश्रवा आदि उपस्थित छन्।

त्यसैबीच उता भिष्म पितामहले लडाइँ सुरु भएको सूचना शंखानादद्वारा गरेपछि यता सेतो रथमा चढेका श्रीकृष्णले पनि आफ्नो पाञ्चजन्य शंख बजाई युद्ध सुरु भएको सूचना गर्नुभयो। त्यसपछि क्रमश: अर्जुन, युधिष्ठिर र अन्य पाण्डव भाइहरू र माहारथीहरूले पनि आ-आफ्नो शंख फुकेर त्यसलाई समर्थन जनाए। दुवैतर्फका सेनाहरू आ-आफ्ना धनुर्वाण र शस्त्रास्त्र उठाएर

युद्धका लागि तयार देखिन्छन्। त्यो देखेर अर्जुन आफ्ना सारथि श्रीकृष्णलाई भन्दछन्- प्रभु ! शत्रुपक्षबाट लड्न कोकस्ता योद्धाहरू आएका छन्, क-कसले दुर्योधनलाई साथ दिएका छन्, म को-कस्तासँग युद्ध गर्न जाँदै छु सो हेर्नको इच्छा भएकाले मेरो रथलाई दुवै सेनाका बीचमा लिएर जानुहोस्। अर्जुनको कुरा सुनेपछि श्रीकृष्णले आफ्नो रथलाई शत्रुपक्षका श्री भिष्मपितामह र द्रोणाचार्य रहेको ठाउँको सामुन्ने लगेर राखिदिनुभयो। अर्जुनले शत्रुपक्षमा भिष्म पितामह, गुरु द्रोणाचार्य, भाइबन्धु, मामा, काकाजस्ता आफ्ना अति प्रिय तथा मान्यवर व्यक्तिहरूलाई देखेर मनमा अति शोक गर्दै श्रीकृष्णलाई भन्दछन्-

**निमित्तनि च पश्चामी विपरीतानि केशव।**
**न च श्रेयोऽनुपश्चामी हत्वा स्वजनमाहवे॥ (१/३१)**

"म" "मेरो" को मोहले ग्रष्त भएका अर्जुनले युद्धभूमिमा आफ्नै हजुरबुबा, काका, गुरु, मामा तथा अन्य आफन्तहरूसँग लड्नुपर्ने अवस्था देखेर उनी हडबडाउँछन् र चिन्तित हुँदै श्रीकृष्णसँग बिन्ती गर्छन्- हे प्रभु ! म आफ्ना नातेदारसँग लडेर उनीहरूलाई युद्धमा पराजित गरेर वा मारेर मेरो मन कहिल्यै शान्त र सुखी हुनसक्दैन। युद्धमा मैले विजय पाए पनि त्यो विजयले मलाई सुखशान्ति दिँदैन। आफन्तलाई मारेर मैले सधैं पछुताउनुपर्ने हुन्छ। त्यसले मलाई भलो हुँदैन। म यो युद्धभूमिको शुभलक्षण देख्दिन। जताततै अशुभ दृष्टि तथा अशुभ कुराहरूले मेरो मनमस्तिष्कलाई खल्बल्याइरहेको छ। यतिबेला अर्जुनले आफ्नो क्षेत्रिय धर्म वा कर्तव्यलाई पनि भूल्न पुगेका छन्। त्यसैले उनी अरुलाई मारेर मेरो कल्याण हुँदैन र आफन्तलाई मारेर प्राप्त भएको राज्यभोगले पनि मलाई शान्ति दिन सक्दैन म कदापि सुखचैनबाट बाँच्न सकिन्न, त्यसैले म युद्ध गर्न चाहन्न भनेर लडाइँबाट हट्न चाहन्छन्। उनी भन्दछन्- हे प्रभु

! शत्रु पक्षमा सबै आफन्तहरूलाई देखेर मेरा सबै अङ्गप्रत्यङ्ग शिथिल भएका छन्, मेरा हातपाउ काँप्न थालेका छन्, मेरो हातबाट गान्डीव धनुष तल खस्न खोज्दैछ र शरीर सबै भयले काँपिको छ। मैले आफ्ना बन्धुबान्धव मान्यजनहरूलाई कसरी मारूँ ? म यसमा आफ्नो भविष्य अन्धकार देख्दैछु।

**अर्जुन भन्दछन्-**

**"तस्मान्नाहं वयं हन्तुं धार्तराष्ट्रान् स्वबान्धवान्,**
**स्वजनं हि कथंहत्वा सुखिनः स्याम माधव" ॥ (१,३७)**

हे माधव ! आफन्तलाई मारेर मलाई शान्ति हुँदैन। यस कार्यले बरु मलाई माहापाप लाग्नेछ। मित्रद्वेष, कुलनाशजस्तो कुकर्म मबाट हुनसक्दैन। यसबाट समाजमा कुकृत्य फैलिन्छ र स्त्रीहरू व्यभिचारी बन्न पुग्नेछन्, जस्ले गर्दा वर्णशंकर सन्तानहरू जन्मिन पुग्दछन्। वर्णशंकर सन्तानहरूबाट प्रदान गरिने पितृश्राद्ध र पितृदान पितृहरूले पाउँदैनन् र उनीहरू तर्दैनन्। हे मधुसुदन ! यस्तो कुलघात कर्म मबाट हुनसक्दैन। कुलनष्ट गरेर पाएको राज्यभोग मेरा लागि सुखद् हुन सक्दैन, त्यसले मलाई शान्ति र सुख दिनसक्दैन। तसर्थ शत्रुपक्षले बरु मलाई मारून् म मर्न तयार छु तर म उनीहरूलाई मार्न सक्दिनँ। म उनीहरूसंग युद्ध गर्दिन भनेर अर्जुन आफ्नो हातमा भएको गाण्डीव धनुषलाई भुईंमा फालेर रथको एक छेउमा थचक्क बस्न पुग्दछन्। यति बेला अर्जुनलाई मोह र अज्ञानता रूपी अन्धकारले छोपेको छ। उनी त्यसबेला सत्य र तथ्य कुरा देख्न र बुझ्न सक्ने अवस्थामा छैनन्।

"आफू मरे पनि कृष्ण ! अरुलाई म मार्दिन।
त्रिलोकै पाई के गर्नु, मारी सबै ती स्वजन ॥"

# दोस्रो अध्याय

सम्पूर्ण गीताको सार यस अध्यायमा उल्लेख भएको छ। भगवान श्रीकृष्णले यस अध्यायमा अर्जुनलाई माध्यम बनाई संख्ययोग र कर्मयोग द्वारा समस्त प्राणीहरूको मनमा रहेको मोह, अज्ञानता र भ्रमलाई हटाउन खोज्नु भएको छ। सञ्जय युद्धभूमिको सम्पूर्ण घटनाको विवरण राजा धृष्टराष्ट्रलाई बताउँदै छन्। सञ्जय सुनाउँछन्- अर्जुन शोकाकुल भई चिन्तित भएको देखेर श्रीकृष्ण भन्नुहुन्छ- हे अर्जुन ! तिमीमा यो मोह, विषाद र भ्रम कहाँबाट आयो ? यो शोक र चिन्ताबाट तिमीलाई केही फाइदा छैन, यो तिम्रा लागि सुहाँउदैन पनि। यसबाट न त स्वर्ग नै प्राप्त हुन्छ न कीर्ति नै रहन्छ। हे पार्थ ! तिमी नामर्द नबन, तिमीजस्तो वीरपुरुषका लागि यस्तो शोक गर्न सुहाउँदैन। मनको यो कमजोरीलाई त्याग, उठ र युद्ध गर। श्रीकृष्णका यी वचन सुनी अर्जुन बिन्ती गर्छन्- हे मधुसुदन ! मैले आफ्नो प्यारो हजुरबुबा भिष्म पितामह र गुरु द्रोणाचार्य जस्ता अति आदरणीय व्यक्तिहरूमाथि कसरी शस्त्रअस्त्र प्रहार गरूँ ? गुरुजन र आफन्तहरूलाई मार्नुभन्दा बरु मागेर खानु बेश हुन्छ। यस युद्धमा कसको जित र कसको हार हुन्छ अर्थात् कसको जित र कसको हार राम्रो हुने हो ? यसबारे मलाई केही थाहा छैन। यस युद्धभूमिमा मेरो सामुन्ने उपस्थित मान्यवर र आफन्तहरूलाई देखेर मेरो दिमागले काम गर्न छाडेको छ र के गर्दा राम्रो र के गर्दा नराम्रो हुन्छ, त्यो ठम्याउनसकेको छैन। त्यसैले हे प्रभु ! हजुरले नै मेरा लागि जे हितकारी हुन्छ, त्यो बाटो देखाइदिनुहोस्। म हजुरको शिष्य र साथी पनि हुँ। म हजुरको शरणमा परेको छु। कृपा गर्नुहोस् र मेरो यो शोक, चिन्ता र भ्रमलाई हटाउने उपाय बताइदिनुहोस्। शोक र भयग्रस्त अर्जुनलाई देखेर श्रीकृष्ण भन्नुहुन्छ-

**अशोच्यानन्वशोचस्त्वं प्रज्ञावादांश्च भाषसे ।**
**गतासुनगतासुंस्व नानुशोचान्ति पण्डिताः ॥ (२-११)**

हे अर्जुन ! तिमी कुरा त बुद्धिमानको जस्तो गर्दछौ तर सोच्नु नपर्ने अथवा सोच्न लायक नभएको कुरामा तिमी बढी सोच्न थालेका छौ । त्यसैगरी जुन कुरामा दुःखशोक गर्नु आवश्यक छैन त्यस्तो कुरालाई लिएर तिमी शोक गरिरहेका छौ । मर्ने र मार्ने अनि 'म र मेरो' को मोहमा परेर तिम्रो बुद्धिलाई मोहरूपी अज्ञानताले ढाकिदिएको छ । यदि तिमी ज्ञानी भएको भए यो नश्वर शरीर र आत्माबीचको भेदलाई जान्ने थियौ, मर्ने र मार्ने जस्ता कुरालाई लिएर चिन्ता गर्ने थिएनौ । यो शरीर जन्मिन्छ, बाल, यौवन र वृद्धावस्थाबाट गुज्रिन्छ र अन्त्यमा मर्दछ । जो जन्मिन्छ, त्यो अवश्य मर्दछ यसलाई कसैले पनि टार्न सक्दैन । त्यसैले मर्नेमार्ने कुरालाई लिएर चिन्ता गर्नु र शोक गर्नु उचित हुँदैन ।

**य एनं वेत्ति हन्तारं यस्चैनं मन्यते हतम् ।**
**उभौ तौ न विजानीतो नायं हन्ति न हन्यते ॥ (२-१९)**

जसले यो आत्मालाई मर्नेवाला सम्भिन्छ अथवा आत्मा मऱ्यो भन्ने सम्भिन्छ यो सबै कुरा असत्य हो । अथवा यो आत्मा न कसैलाई मार्छ न आफू कसैबाट मारिन्छ । आत्मा सदा अमर, नित्य र सनातन छ ।

**नजायते म्रियते वा कदाचिन्नायं भूत्वा भविता वा न भूयः ।**
**अजो नित्यः शाश्वतोऽयं पुराणो न हन्यते हन्यमाने शरीरे ॥(२-२०)**

आत्मा न कहिल्यै जन्मियो न यो कहिल्यै जन्मन्छ । त्यसैले यो आत्मा न कहिल्यै मरेको थियो न भोलि मर्दछ । शरीर मरेर नासिएर जान्छ तर आत्मा जस्ताको तस्तै रहन्छ । कसैले कसैलाई मार्दैन र कोही मर्दैन पनि । तिमी शरीर होइनौ, तिमी परमात्माको अंश आत्मा हौ । आत्मा सदा अजर र अमर छ । शरीर बाल, युवा र वृद्ध

हुन्छ तर आत्मा सदा एकनास रहन्छ, यो न जन्मिन्छ न त मर्छ नै। आत्माले यो शरीर छाडेर अर्को शरीरमा प्रवेश गर्छ मात्र।

जसले आत्मालाई मऱ्यो, माऱ्यो र मारियो भन्ने ठान्दछ त्यो अज्ञानी हो। आत्मा न मर्छ न मारिन्छ नै। आत्मा अजन्मा, नित्य र शाश्वत छ। आत्मा रहेको शरीर मात्र नाश हुन्छ अर्थात् शरीर नाश हुँदा पनि ऊ नाश हुँदैन। पुरानो लुगा त्यागेर नयाँ लुगा फेरेझैं आत्माले पुरानो शरीरलाई छाडेर नयाँ शरीर धारण गर्दछ। त्यसैले कसैले कसैलाई मार्ने र मर्ने भन्ने कुरा असत्य हो।

**नैनं छिन्दन्ति शस्त्राणी , नैनं दहति पावक**
**न चैनं ल्केदयन्त्यापो, न शोषयति मारुतः ॥ २-२३**

आत्मालाई न कुनै शस्त्रास्त्रले टुकयाउन सक्छ, न आगोले डढाउन सक्छ, न पानीले भिजाउन सक्छ, न त हावाले नै उडाउन सक्छ। यो नित्य, अपरिवर्तनीय, अचल र सर्वव्यापक छ। त्यसैले यस्तो विषयमा चिन्ता गर्नु व्यर्थ छ। हे अर्जुन ! जो जन्मिन्छ, त्यो मर्छ र जो जन्मिदैन त्यो मर्दैन। यही कुरालाई बुझेर तिमी यो मर्ने र मार्ने विषयमा शोक नगर। शरीरधारी यो आत्मा सदा अजर र अमर हुने हुनाले यसमा तिमीले चिन्ता गर्नु उचित छैन। तिमी क्षेत्रिय हौ र युद्ध गर्नु क्षेत्रियको कर्तव्य हो। आफ्नो कर्तव्य पूरा गर्न तिमीले हिच्किचाउनु हुँदैन। आफ्नो कर्तव्य पूरा गर्नु नै ठूलो धर्म हो।

**अकिर्तिं चापि भूतानि कथयिष्यान्ति तेऽव्ययाम्।**
**सम्भावितस्य चाकीर्तिर्मरणा दतिरिच्यते ॥ (२-३४)**

कर्तव्य पालन गर्ने मौकाबाट तिमी पछाडि नहट, यसले तिम्रा लागि स्वर्गको ढोका बरु खोलिदिनेछ। युद्ध गरेनौ भने तिमीलाई आफ्नो कर्तव्य पूरा नगरेको पाप लाग्नेछ र तिम्रो बेइज्जत तथा उपहाससमेत हुनेछ। कुनैपनि सम्मानित व्यक्तिका

लागि अपयश, बेइज्जत सहनु मृत्युभन्दा पनि गाह्रो हुन्छ। यो युद्ध गर्दा तिमीलाई दुवैतिरबाट फाइदा हुन्छ।

**हतो वा प्राप्स्यसि स्वर्गं जित्वा वा भोक्ष्यसे महीम्।**
**तस्मादुत्तिष्ठ कौन्तेय युद्धाय कृतनिश्चयः॥ (२-३७)**

युद्धमा तिमी मारियौ भने सोझै स्वर्गलोकमा पुग्छौ र अरुलाई मारेर युद्ध जित्यौ भने पनि पृथ्वीमा राज्य सुखभोग प्राप्त गर्नेछौ। लडाई गर्दा तिम्रो दुवै हातमा लड्डु छ। त्यसैले उठ तिमी युद्ध गर।

**सुख-दुःख समे कृत्या, लाभालाभौ जयाजयौ**
**ततो युद्धाय युज्यस्व नैवं पापमवाप्स्यसि॥ (२-३८)**

त्यसैले जय, पराजय, सुख-दुःखको बीचार नगरी युद्धका लागि तयार होऊ र दृढसंकल्प लिएर युद्ध गर, यसमा तिमीलाई कुनै पाप लाग्नेछैन।

श्रीकृष्ण भन्नुहुन्छ- हे पार्थ ! अब म तिमीलाई निष्काम कर्मयोगबारे बताउँछु सुन। ज्ञान प्राप्त गरेर कर्म गर्‍यौ भने तिमी कर्मबन्धनबाट मुक्त हुन्छौ। कर्मयोगको बाटो अपनाउनु नै सबैभन्दा श्रेष्ठ धर्म हो। यस मार्गबाट हिंड्ने व्यक्तिले नै आफ्नो लक्ष्य भेट्न सक्दछ। इन्द्रिय भोग र भौतिक सुखको चाहना गर्ने व्यक्ति सकाम कर्ममा जोड दिन्छ। इन्द्रिय सुख र भौतिक सुखसुविधामा आशक्त हुने व्यक्ति भगवानको भक्तिमा स्थिर तथा दृढ हुन सक्दैन। हे पार्थ ! प्रकृतिका तीन गुणबाट तिमी पर गई सबै डर चिन्ताबाट मुक्त भएर आत्मामा स्थिर होऊ। तिम्रा लागि निर्धारित कर्म गर्न मात्र तिमी अधिकारी छौ, कर्मको फलको अधिकारी तिमी छैनौं।

**कर्मण्येवाधिकारस्ते मा फलेषु कदाचन।**
**मा कर्मफलहेतुर्भुमा ते सङ्गोऽस्त्वकर्मणी॥ (२-४७)**

अर्थात् कर्मको फलमा तिम्रो अधिकार छैन, तिमी सिर्फ कर्म गर्दै जाऊ फलको आशा नगर। त्यसैगरी, तिमी कर्मको सफलता

र असफलताबारे पनि चिन्ता नगर। सफलता र असफलतामा समभाव राख्दै भक्तियोगमा लाग जसले गर्दा तिमी संसारी सुखदुःख र जन्ममृत्युको चक्करबाट मुक्त भई ईश्वरमा स्थित हुन पुग्दछौ।

**कर्मजं बुद्धियुक्ता हि फलं त्यकत्वा मनीषिण :।**
**जन्मबन्धविनिर्मुक्ता पदं गच्छन्त्यनामयम्॥ (२-५१)**

समबुद्धि भएका ज्ञानी पुरुषहरूले आफूले गरेको कर्मको फलको आशा राखेका हुँदैनन्। कर्मलाई उनीहरू आफ्नो कर्तव्यको रूपमा लिन्छन्। सो गरेपछि म त्यो फल पाउँछु भन्ने आश लिएर उनीहरूले कर्म गरका हुँदैनन्। यसरी फलको आशा नराखी कर्म गर्ने कर्मयोगीहरू यो संसारी बन्धनबाट मुक्त भएर भगवान धाममा सजिलैसँग पुग्छन् र नित्य परमानन्दमा रमाउँछन्।

अर्जुन श्रीकृष्णसँग स्थितप्रज्ञको विषयमा जान्न आफू इच्छुक भएको कुरा बिन्ती गर्छन्। श्रीकृष्ण बताउनुहुन्छ, जसले आशक्तिलाई छाडेर इन्द्रियलाई वशमा राखी वासनातृप्तिको इच्छा त्यागेर आफ्नो मनलाई आत्मामा स्थित गर्दछ, त्यस्तो व्यक्ति नै स्थितप्रज्ञ कहलाउँछ। यस्तो व्यक्तिलाई कुनै कुराले पनि बीचलित तुल्याउँदैन। जो सुखमा मात्तिँदैन र दुःखमा आत्तिँदैन र जो भय, कोध र आशक्तिबाट मुक्त हुन्छ त्यो नै स्थितप्रज्ञ व्यक्ति हो। त्यस्तो व्यक्ति जस्तोसुकै शुभअशुभ परिस्थितिमा पनि नडगमगाई सिर्फ आत्मचिन्तनमा स्थित रहन्छ। इन्द्रियहरू धेरै बलवान् छन्, तिनले ज्ञानी र विवेकी व्यक्तिको मनलाई पनि कहिलेकाहीं बीचलित पारिदिन्छ। त्यस्तो बेलामा जो धैर्यधारण गरी इन्द्रियहरूलाई पूर्णरूपमा आफ्नो नियन्त्रणमा राख्न सक्दछ त्यो व्यक्ति नै स्थितप्रज्ञ हुनसक्छ। इन्द्रियादि विषयमा चिन्तन गर्ने मान्छे त्यसैमा आशक्त हुन पुग्दछ।

**कोधाद् भवति सम्मोहः, सम्मोहात्स्मृतिविभ्रमः।**
**स्मृतिभ्रंशाद् बुद्धिनाशो, बुद्धिनाशात् प्रणश्यति॥(२-६३)**

आशक्तिबाट काम पैदा हुन्छ, कामबाट क्रोध, क्रोधबाट मोह, मोहबाट स्मरणशक्तिको ह्रास हुन्छ, स्मरणशक्तिको ह्रासबाट बुद्धिनास र बुद्धिनासबाट मानिसको पतन हुन्छ। सम्पूर्ण रूपले इन्द्रिय दमन गरी, राग र द्वेषबाट रहित व्यक्तिले नै ईश्वर कृपा प्राप्त गर्दछ। जसको बुद्धि चित्तमा स्थिर छैन, जसले ईश्वरमा आफ्नो मन लगाएको छैन, त्यसको मन, बुद्धि स्थिर हुँदैन र जसको मन बुद्धि स्थिर हुँदैन त्यसले सुखशान्ति पाउन सक्दैन। चञ्चल मनबुद्धिलाई इन्द्रियहरूले अधोगतितर्फ डोऱ्याउँछ। स्थिर मनबुद्धि हुनेले मात्र इन्द्रियलाई वशमा राख्दछ र इन्द्रिय वशमा रह्यो भने मात्र मनबुद्धि स्थिर रहन्छ। स्थिर बुद्धि भएका व्यक्तिहरूमा इन्द्रिय सुखका इच्छाहरू आउँछन् र त्यसै बिलाएर जान्छन् समुन्द्रमा पानी बिलाएर गए जस्तै गरी इन्द्रिय तृप्तिको इच्छा त्यागेको, माया, मोह, ममता र अहंकाररहित व्यक्तिले मात्र वास्तविक सुखशान्तिको अनुभव गर्न सक्दछ। त्यो नै प्रभु प्राप्तिको बाटो पनि हो र त्यस्ताले नै ब्रह्मानन्द प्राप्त गर्न सक्दछ।

**या निशा सर्वभूतानां तस्यां जागर्ति संयमी।**
**यस्यां जाग्रति भूतानि सा निशा पश्यतो मुनेः॥ (२-६९)**

भौतिक संसारमा रमाउने व्यक्तिहरूको लागि जुन समय रातसमान अन्धकारमय हुन्छ, त्यस समय आत्मदर्शी अर्थात् आत्मज्ञानी पुरुषहरूका लागि झलमल्ल सूर्य उदाएको दिन समान बन्दछ र त्यसबेला उनीहरू परमानन्द प्राप्तिका लागि क्रियाशील रहन्छन्। त्यसैगरी जुन बेला सबै संसारी प्राणीहरू क्रियाशील हुन्छन् अर्थात् संसारी सुखभोग प्राप्तिका लागि क्रियाशील हुन्छन्, त्यसबेला अर्थात् त्यस्मा आत्मज्ञानी व्यक्तिहरू निस्कृय बन्छन् र त्यो समय उनीहरूको लागि रातसमान अन्धकारमय हुन्छ। आत्मज्ञानी व्यक्तिहरू भौतिक संसारमा रमाउँदैन र संसारी सुखदुःखबाट प्रवाहित हुँदैनन् पनि।

विहाय कामान्यः सर्वान्पुमांश्चरति निःस्पृह ।
निर्ममो निरहङ्कार सः शान्तिमधिगच्छति ॥ (२-७१)

जो व्यक्ति इन्द्रिय तृप्तिका सबै कामनाहरूलाई त्यागदछ र भौतिक इच्छारहित भएर मायाममता र अहंकारबाट आफूलाई मुक्त गर्दछ, त्यस्तो व्यक्तिलाई संसारी दुःखकष्टले कहिल्यै सताउँदैन र जस्तै दुःखकष्टमा पनि उ बीचलित हुँदैन। हुनत मानिस मोहममता र भोग इच्छाबाट कहिल्यै अलग हुन सक्दैन। तर उसले संसारी वस्तुको नश्वरतालाई सम्झेर बुझेर त्यसबाट आफ्नो मनलाई हटाएर भगवानमा लगाउन सक्यो भने उसलाई संसारी राप, ताप, भय, चिन्ताले बीचलित तुल्याउँदैन र उसको मन सधैं शान्त रहन्छ। त्यस्तो कामना, अहंकार र भौतिक इच्छा त्यागन वा त्यसलाई नियन्त्रणमा राख्न सक्ने व्यक्तिले नै सच्चा र नित्य शान्ति प्राप्त गर्न सक्दछ।

**"सबैको देहमा बस्ने, अमर आत्मा यो नित्य छ।**
**शोक गर्नु यस्का लागि, तिम्रो लागि अयोग्य छ॥"**

# तेस्रो अध्याय

यस अध्यायमा भगवान श्रीकृष्णले अर्जुनलाई कर्मयोगबारे विस्तृत रूपमा व्याख्या गरी सम्झाउनुभएको छ। सबैले आ-आफ्नो कर्तव्य कर्म गर्नु पर्दछ भन्ने कुरामा जोड दिईएको छ यस अध्यायमा, आ-आफ्नो वर्णानुसार कर्म गर्नु पर्ने कुरा संझाउदै कर्म गर्नाले वा नगर्नेले के लाभ के हानी हुन्छ भन्ने कुराहरू उदाहरण सहित प्रस्तुत गरिएको छन् याँहा। अर्जुन सोध्दछन्- यदि कर्मभन्दा ज्ञान ठुलो हो भने हजुर मलाई कर्म गर्न किन जोड दिनुहुन्छ ? हजुरले कहिले ज्ञान र कहिले कर्मलाई बढी जोड दिएको हुँदा म अलमल्लमा परेको छु। त्यसैले मेरो भ्रमलाई हटाई कल्याणको बाटो देखाइदिनुहवस्। अर्जुनको कुरा सुनेर मधुसुदन भन्नुहुन्छ, हे अर्जुन ! आत्मा साक्षात्कार गर्ने व्यक्ति दुई प्रकारले सो प्राप्त गर्दछ। एकले ज्ञानको बाटोबाट र अर्कोले भक्तिको बाटोबाट। मानिसले न त कर्म नगरी मुक्ति पाउन सक्दछ न त कर्म त्यागबाट पूर्णता नै प्राप्त गर्दछ।

**न हि कश्चित्क्षणमपि जातु तिष्ठत्यकर्मकृत्**
**कार्यते ह्यवशः कर्मः सर्वः प्रकृतिजैर्गुणैः ॥ (३-५)**

यो सत्य हो कि कुनै पनि मानिस केही न केही कर्म गरेरै रहेको हुन्छ। संसारमा मानिस भएर जन्मेपछि उसले प्रकृतिको गुणअनुसार केही न केही कर्म गरि नै रहनु पर्ने हुन्छ, कर्म नगरी उ एक क्षण पनि बस्न सक्दैन। आत्मा सधैं सकृय रहन्छ। संसारमा जन्मिना साथ आत्मा शरीरको सम्पर्कमा आउँछ र शरीरजन्य गुणाबाट प्रभावित बन्न पुग्दछ र प्रकृतिको गुणानुसार काम गर्न उ बाध्य हुन्छ। जो मानिस कर्मेन्द्रियहरूलाई वशमा राखेपनि यदि उसको मनले इन्द्रिय विषयमा चिन्तन गरी रहन्छ भने त्यो ढोगीं हो त्यसले आफैंलाई ठगिराखेको हुन्छ। जो व्यक्ति आफ्नो मनलाई वशमा राखेर इन्द्रियमा आशक्त नभई कर्म गर्दछ त्यो नै श्रेष्ठ व्यक्ति हुन सक्दछ।

**नियतं कुरु कर्म त्वं, कर्म ज्यायो ह्यकर्मण :।**
**शरीरयात्रापि च ते न प्रसिद्धयेदकर्मण :॥ (३-८)**

जीवन यापनको लागि जीवले केही न केही कर्म त गर्नुपर्ने नै हुन्छ तर त्यो कर्म शास्त्रसम्मत हुनुपर्दछ। आफ्नो कर्तव्यकर्म नगरी मानिस रहन सक्दैन। कर्म नगरी बस्नुभन्दा कर्म गरी बस्नु धेरै उचित हो। किनकि कर्म नगरी जीवननिर्वाह पनि त हुन सक्दैन। जीवन निर्वाहका लागि मानिस सधैं क्रियाशील रहन्छ। केही नगरी बस्ने व्यक्तिका लागि आफ्नो जीवन पनि भार र व्यर्थ बन्दछ। यो जीवनयात्रामा उसले आफ्नो शरीरको मात्र रक्षा गरेर पुग्दैन, आफ्ना जहानपरिवार र समाजप्रति उसको दायित्व अझ बढी हुन्छ। त्यसैले मानिस आफू बाँच्न र अरुलाई बचाउनका लागि सधैं कामकर्तव्य गरिरहेको हुन्छ।

सृष्टिकर्ता ब्रह्माजीले सुरुमा देवता र मानिसलाई सृष्टि गर्दा साथमा यज्ञलाई पनि सृष्टि गरेका थिए। यज्ञले मानिसलाई इच्छित फल प्रदान गर्दछ। यो मानिसका लागि अति हितकारी छ। यज्ञ गर्दा देवताहरू पनि खुसी हुन्छन् र देवता र मानिसबीच सुमधुर सम्वन्ध स्थापित हुन्छ। देवताबाट मानिसले सबै आफ्ना आवश्यकताहरू पूरा गर्न पाउंदछन्। देवताहरूबाट प्राप्त बस्तुहरू यदि उनीहरूलाई अर्पण नगरी मानिसले आफैं मात्र भोग गर्छ भने त्यो कृतघ्न हुन्छ। आफूले भोजन गर्ने बस्तु पहिले यज्ञमा हवन गरेर देवतालाई अर्पण गरी खाएमा त्यस्तो व्यक्ति सबै पापहरूबाट मुक्त हुन्छ। भोजन बनाई ईश्वरलाई अर्पण नगरी खाने व्यक्ति पापी हुन्छ। शास्त्रअनुसार सम्पन्न गरिएका यज्ञहरूबाट वर्षा हुन्छ, वर्षाबाट अन्न उब्जाउ हुन्छ, अन्नबाट शरीर बन्छ।

**देवान्भावयतानेन ते देवा भावयन्तुवः।**
**परस्परं भावयन्तः श्रेयः परमवाप्स्यथ॥ (३-११)**

मानिसहरूले यज्ञयज्ञादिद्वारा देवताहरूलाई खुसी पारून्। आफूलाई सम्झिने व्यक्तिमाथि देवताहरूले पनि अवश्य कृपा राख्दछ र आफ्ना भक्तहरूको रक्षा र कल्याण उनीहरूले गर्दछन्। यसरी मानिसले देवतालाई पुज्ने र देवताहरूले मानिसलाई रक्षा गर्ने भएपछि दुवैथरीको हित र कल्याण हुने कुरा स्वाभाविक नै हुन्छ। जो व्यक्ति यसप्रकार परम्परादेखि चल्दै आएको यज्ञयज्ञादिद्वारा देवताको पुजन गर्दैन अर्थात् आफ्नो परम्परादेखिको कर्तव्य कर्म नगरी सिर्फ आफ्नो शरीरको मात्र ख्याल राख्दछ र देवता र समाजप्रतिको आफ्नो कर्तव्यकर्म पूरा गर्न लाग्दैन, त्यो पापी हुन्छ।

इन्द्रिय तृप्तिको लागि मात्र बाँच्ने र कर्म गर्ने व्यक्तिको जीवन व्यर्थ हुन्छ। त्यसो गर्ने व्यक्ति र पशुबीच के नै फरक हुन्छ र ? मानवजीवन अमूल्य छ, मानिसले मात्र मुक्ति प्राप्त गर्न सक्छ अरु जीवले सक्दैन। जो आफैं आनन्दित भई आत्मामा रमाउँछ र आत्मसन्तोष लिन्छ, त्यस्तो व्यक्तिले अरु कुनै कर्तव्यकर्म गर्न र अरुमाथि निर्भर हुनु आवश्यक पर्दैन।

**तस्मादसक्तः सततं कार्यं कर्म समाचर।**
**असक्तो ह्याचरन्कर्म परमाप्नोति पुरुषः॥ (३-१९)**

श्रीकृष्ण भन्नुहुन्छ- हे पार्थ ! त्यसैले तिमी आशक्तिलाई छाडेर आफ्नो कर्तव्यकर्म गर। कर्म फलको आशा नराखी जो आफ्नो कर्तव्य कर्म गर्दछ, त्यसले नै ईश्वरको परमधाम प्राप्त गर्दछ। आफ्नो कर्तव्य कर्मद्वारा नै राजा जनकले सिद्धि प्राप्त गरेका थिए। हे अर्जुन ! अरुलाई देखाउन अर्थात् शिक्षा दिनकै लागि पनि तिमीले कर्म गर्नु पर्दछ। किनकि ठूलाले जस्तो आचरण गर्दछन्, सानाले अर्थात् संसारले त्यसको अनुसरण गर्दछ। यो संसारकै नियम हो। ठूलाबडाहरू नै अरुहरूको मार्ग दर्शक बन्दछन्। सर्वव्यापक, सर्वशक्तिमान ईश्वरलाई कुनै कर्तव्य कर्म गर्नु आवश्यक छैन, तैपनि उहाँ सधैं आफ्नो कर्तव्य कर्म

गरिरहनुभएको हुन्छ। हे अर्जुन ! यदि मैले आफ्नो कर्तव्य कर्म गरिन भने मेरो अनुसरण गरेर संसारी प्राणीहरू निष्कृय र अल्छी बन्न पुग्दछन्। निष्कामी र अल्छी व्यक्तिहरू बढ्दै गएमा समाजमा अशान्ति र व्यभिचार बढ्न जान्छ जसले गर्दा समाजमा वर्णशंकर जनसंख्याको वृद्धि हुन पुग्दछ। म लोककल्याणकै लागि कर्म गरिरहेको हुन्छु, म कर्मयोगीलाई श्रेष्ठ मन्दछु। त्यसकारण हे अर्जुन ! तिमी कर्मयोगी बनेर कर्म गर। अज्ञानीले पनि ज्ञानीले जस्तै कर्म गरेको हुन्छ तर ज्ञानीले अनाशक्त भएर कर्म गरेको हुन्छ। ज्ञानीले अज्ञानीको बुद्धिलाई भ्रमित र उसले गरेको कर्ममा रोक लगाउने अर्थात् बाधा दिने काम नगरी आफूले शास्त्रसम्मत कर्म गरेर अज्ञानीहरूलाई मार्ग देखाउने काम गर्नु पर्दछ। अहंकारी व्यक्तिले प्रकृति गुणबाट स्वतः सम्पन्न भएका वा हुने कर्मलाई आफैंले गरेको अर्थात् त्यसको कर्ता आफैं हो भनी ठान्दछन्।

**प्रकृते : क्रियमाणानि गुणै कर्माणि सर्वशः।**
**अहंकारविमुढात्मा कर्ताहमिति मन्यते ॥ (३-२७)**

कर्म गर्ने गराउने सबै ईश्वर हुन्, हामी त सिर्फ माध्यम मात्र हौं भन्ने कुरा अज्ञानीले जान्दैनन्। निष्काम कर्म र सकाम कर्मबारे तथ्य कुरा बुझेको ज्ञानीले कहिल्यै आफू कर्ता हुं भनेर घमण्ड गर्दैन। उसले इन्द्रिय भोगादिको आशक्तिबाट पनि आफूलाई बचाएको हुन्छ। त्यसैले हे अर्जुन ! तिमी जेजति कर्म गर्छौ त्यो ममा समर्पण गर र काम, क्रोध, लोभ, मोह र सन्तापबाट मुक्त रहेर सो कर्मलाई सम्पन्न गर। जसले मेरो उपदेशलाई श्रद्धापूर्वक पालन गर्छ, ऊ सम्पूर्ण कर्मबन्धनबाट मुक्त हुन्छ। मेरो उपदेशलाई नमानेर ममा दोष र खोट देखाई उपेक्षा गर्ने व्यक्तिहरूको जीवन व्यर्थ हुन्छ। इन्द्रिय भोगादिमा राग र द्वेष छिपेको हुन्छ। रागद्वेषले युक्त मानिस न त यस जन्ममा सुखी र शान्त हुन सक्दछ न मृत्युपश्चात मोक्ष प्राप्त गर्न सक्दछ। हे पार्थ ! मानिसका लागि आफ्नै धर्म श्रेष्ठ तथा हितकारी हुन्छ, अर्काको धर्मले कसैको

भलो गर्दैन। श्रीकृष्णको यस्तो वचनामृत सुनी अर्जुन फेरि आफ्नो जिज्ञासा श्रीकृष्णसामु राख्दै बिन्ती गर्दछन्- हे प्रभु ! मानिस नचाहँदा नचाहँदै पनि केब्बाट प्रेरित भएर किन कुकर्म गर्न पुग्दछ ? श्रीकृष्ण भन्नुहुन्छ- हे अर्जुन !क्रोध मानिसको सबैभन्दा ठूलो शत्रु हो।

**काम एष क्रोध एष रजोगुण समुद्भव।**
**माहासनो महापाप्मा विद्धयेनमिह वैरिणम्॥ (३-३७)**

रजोगुणको सम्पर्कबाट काम वासनाको उत्पति हुन्छ र काम वासनाबाट क्रोध जन्मिन्छ। क्रोधले रजोगुणी मानिसलाई कुकर्म गर्न प्रेरित गर्दछ। धुँवाले आगो, धुलोले ऐना र झिल्लिले गर्भाशय ढाके झैं वासना र मोहले हाम्रो ज्ञान अर्थात् चेतनालाई ढाकिदिन्छ। हाम्रो मन, बुद्धि र इन्द्रिय नै वासना र मोहको वासस्थान हो। यिनैले ज्ञानलाई ढाकेर मान्छेलाई मोहित र भ्रमित पार्दछ।

**इन्द्रियाणि मनो बुद्धिरस्याधिष्ठानमुच्यते**
**एतैर्विमोहयत्येष, ज्ञानमावृत्य देहिनम्॥ (३-४०)**

इन्द्रिय मनबुद्धिभन्दा पर रहेको आत्मा नै सत्य र श्रेष्ठ हो भन्ने सम्झी मन, बुद्धि, अहंकारलाई वसमा राखी कामवासनालाई दमन गर्नुपर्दछ। यसका लागि मानिसले तुरुन्तै आफ्ना निर्धारित कर्तव्यकर्म छोड्नु पर्दैन। कर्म गर्दै बिस्तारै इन्द्रिय, मन, बुद्धिको प्रभावबाट मुक्त हुँदै जानुपर्छ। ज्ञानद्वारा बुद्धि स्थिर गरी अनाशक्त भावले कर्म गर्दै गएमा अवश्य पनि सबैको कल्याण हुन्छ।

**"जस्तो काम तिमी गर्छौ, ममा गरी समर्पण**
**क्रोध, लोभ, शोकबिना, कर्म गर हे अर्जुन !॥"**

# चौथो अध्याय

यस अध्यायमा श्रीकृष्णले कर्मज्ञान अर्थात् दिव्यज्ञानबारे अर्जुनलाई बताउनुभएको छ । श्रीकृष्ण भन्नुहुन्छ- हे पार्थ ! मैले यो अविनाशी ज्ञानयोग अर्थात् गीताको ज्ञान पहिले सूर्यलाई बताएको र सूर्यले मनुलाई र मनुले राजा इच्छ्वाकुलाई बताएको हो र यो ज्ञान पृथ्वीको सृष्टिकालदेखि नै गुरु शिष्य परम्पराबाट प्रचलनमा आएको छ । तर, यो परम्परापछि छुट्न गएको थियो । तिमी मेरो अति मनपर्ने साथी भएकाले यो परमज्ञान म तिमीलाई बताउँछु । श्रीकृष्णको यस्तो वचन सुनी अर्जुन कौतुहलपूर्ण भावले श्रीकृष्णसँग सोध्दछन्- हे मधुसुदन ! हजुरले यो दिव्य ज्ञान सूर्यलाई बताएको कुरा गर्नुभयो । यो कसरी सम्भव भयो ? हजुरको जन्म भर्खरै भएको र सूर्यको जन्म धेरै पहिले भएको थियो भने अहिले जन्मेको मानिसले धेरैअघि जन्मेको व्यक्तिलाई कसरी ज्ञान दिन सक्दछ ? अर्जुनको जिज्ञासाको उत्तरमा श्रीकृष्ण भन्नुहुन्छ- हे पार्थ ! तिम्रो र मेरो यस्तो धेरै जन्म मृत्यु बितिसके, त्यो कुरा तिमी सम्झन र बुझ्न सक्दैनौ तर म त्यो सम्झन सक्दछु ।

**अजोऽपि सन्नव्यायात्मा भूतानामीश्वरोऽपिसन् ।**
**प्रकृतिं स्वामधिष्ठाय संभवाम्यात्ममायया ॥ (४-६)**

म अजन्मा, अविनाशी र सबैका स्वामी हुँ तापनि म प्रत्येक युगमा आवश्यकतानुसार दिव्य स्वरूप धारण गरेर जन्मन्छु । जबजब धर्मको नाश हुन्छ र अधर्म फैलिन्छ तबतब म त्यहाँ धर्मको रक्षा गर्न सन्तहरूको सहयोग तथा उद्धार गर्न र दुष्ट पापीहरूको नाश गर्न अवतार लिन्छु ।

**परित्राणाय साधुनां विनाशाय च दुष्कृताम्**
**धर्म संस्थापनार्थाय, संभवामि युगे युगे ।। ४-८**

जसले मेरो दिव्य जन्म र कामलाई जानेको र बुझेको हुन्छ, त्यसले फेरि जन्मनु, मर्नुपर्दैन र उसले मेरो परमधाम प्राप्त गर्दछ। आशक्ति, भय र क्रोधलाई छाडी ममा पूर्णतया समर्पित हुने व्यक्ति मेरो प्रिय हुन्छ।

**ये यथा मां प्रपद्यन्ते तांस्तथैव भजाम्यहम्।**
**मम वर्त्मानुवर्तन्ते मनुष्याः पार्थ सर्वशः॥ ४-११**

जसले जुन भावले मलाई पुज्दछ, त्यसले त्यस्तै फल पाउँछ। जो व्यक्ति अमूक कर्मफल प्राप्त गर्ने इच्छाले जसरी मलाई पुज्दछ, उसले त्यस्तै फल भेट्दछ अर्थात् सकाम कर्म गर्नेले सोहीअनुसारको कार्यफल प्राप्त गर्दछ।

सत्व, रज, तम यी तीन गुण प्रकृतिका हुन्छन्। यी तीन गुणसँग सम्बन्धित कर्मअनुसार मैले यस संसारमा चार जातिका मानिसहरूको रचना गरेको छु। ती सबैको रचनाकार (सृष्टिकर्ता) म भएतापनि मलाई तिमी अकर्ता नै मान।

**न मां कर्माणी लिम्पन्ति, न मे कर्मफले स्पृहा,**
**इति मां यो अभिजानाति, कर्मभिर्न स बध्यते॥ ४-१४**

म कुनै कार्यप्रति आशक्त छैन र म त्यो कर्मको फलको आशा पनि राख्दिन। जसले यो कुरालाई बुझेर कर्म गर्दछ त्यो मानिस सकाम कर्मफलको बन्धनमा बाँधिदैन। पहिलेका ज्ञानी पुरुषहरूले यो कुरा बुझेर र जानेर नै कर्म गरेका हुन्थे र तिनीहरू कर्मबन्धनबाट मुक्त थिए। तिमी पनि उनीहरूकै सिको गरेर कर्म गर्दै जाऊ।

कर्म र अकर्म के हो ? भन्ने कुरामा विद्वानहरू पनि अल्मलिन्छन्। त्यसैले हे अर्जुन ! त्यस विषयमा म बताउँछु। यदि मैले भनेअनुसार गर्‍यौ भने तिमी सबै दुःख र कष्टबाट पार हुनेछौ। कर्म, अकर्म र विकर्मको भेद जान्न अति नै गाह्रो छ, तापनि यसलाई बुझ्न आवश्यक छ। जसले कर्ममा अकर्म र अकर्ममा कर्म देख्छ, त्यो नै

वुद्धिमान् ठहरिन्छ र त्यसले सबै प्रकारको कर्म गरेर पनि कर्म वन्धनबाट मुक्त भई अर्थात् जन्ममृत्युको चक्करबाट पार भई प्रभुधाम प्राप्त गर्दछ ।

**त्यक्त्वा कर्मफलासंङ्ग नित्यतृप्तो निराश्रय :।**
**कर्मण्यभि प्रवृतोऽपि नैवःकिंश्चितकरोति सः ॥ (४-२०)**

मानिसले ईश्वरप्राप्तिका लागि जिज्ञासु बनेर योग्य ब्रह्मनिष्ट गुरुको शरणमा जानु आवश्यक छ। गुरुबिना ज्ञान सम्भव छैन। इन्द्रिय भोगको इच्छा त्यागेर ज्ञानद्वारा जो कर्म गर्दछ त्यो योगी हुन्छ। यस्ता योगी पुरुषले आफ्नो मनबुद्धिलाई काबुमा राखी कर्म गरेको हुन्छ र आफूलाई सो कर्मको कर्ता मानेको हुँदैन। कसैले कर्तव्यको रूपमा मात्र कार्म गरेको हुन्छ भने त्यो व्यक्ति कर्मफलको सबै दोष र पापबाट मुक्त हुन्छ। यसैगरी जो व्यक्ति सन्तोषी, द्वेषरहित, इच्छारहित भई लाभहानी र सुखदुःखमा सम रहन्छ त्यो व्यक्ति कर्म गरेर पनि कर्म बन्धनमा बाँधिदैन। जो व्यक्ति आशक्ति त्यागेर प्रभुमा नित्य रम्दछ भने उसका सबै कर्महरू ब्रह्ममा लीन भएर जान्छन्। त्यसैगरी ब्रह्ममा मग्न भई जो व्यक्ति ब्रह्मकै लागि कर्म गर्दछ भने ती गरिएका र गरिने सबै कर्महरू ब्रह्ममय बन्न पुग्दछन्।

कुनै योगीहरू विभिन्न यज्ञादिद्वारा ईश्वर पुजन गर्दछन् भने कोही योगीहरू अग्निलाई ब्रह्म सम्झेर ब्रह्मले नै त्यसमा आहुति दिन्छन्। त्यसैगरी कोही ब्रह्मचारी पुरुषहरू श्रवण प्रकृया र इन्द्रियहरूलाई मनको नियन्त्रणरूपी अग्निमा र गृहस्थीहरू इन्द्रियका विषयलाई इन्द्रियरूपी अग्निमा होमी दिन्छन् अर्थात् इन्द्रिय भोगको चाहना राख्दैनन्। ब्रह्माचारीहरू संसारी कुराहरू सुन्नुभन्दा भगवानको नाम कीर्तनमा नै आफूलाई लगाएका हुन्छन् भने संयमी गृहस्थीहरू आफूलाई इन्द्रियादि भोगवासना तृप्तिमा मात्र नअल्मल्याई इन्द्रिय विषयादिमा अनाशक्त भई गृहस्थी धर्मको पालन गरेका हुन्छन्। यसरी विभिन्न व्यक्तिले विभिन्न प्रकारले

यज्ञादि कर्महरू सम्पन्न गर्दछन्। जस्तै कोही धन खर्च (द्रव्ययज्ञ) गरेर, कोही कठिन तपस्या (तपयज्ञ) गरेर, कोही अष्टाङ्ग योगको माध्यमबाट र कोही वेद अध्ययन गरेर (स्वाध्याय यज्ञ) आफूलाई यज्ञकर्ताका रूपमा स्थापित गरेका हुन्छन् ती सबै यज्ञकर्म र यज्ञकर्तामा गनिन्छन् र ती सबै यज्ञ कर्ताहरू आ-आफ्नो कर्मद्वारा (इन्द्रिय निग्रहद्वारा) इच्छित फल प्राप्त गरेर अन्तमा परमधाम पुग्दछन्। हे अर्जुन ! जो व्यक्ति यीमाथि उल्लेखित विभिन्न यज्ञादिमा सरिक हुँदैनन् ती यस लोक र परलोक दुवैमा सुख पाउँदैनन् र तिनको मुक्ति पनि हुँदैन। मुक्तिका लागि नै यो अमूल्य मानवजीवन प्राप्त भएको हुन्छ। माथि उल्लेखित विभिन्न प्रकारका यज्ञहरू वेद र शास्त्रसम्मत छन्, जो विभिन्न प्रकारका कर्महरूद्वारा सम्पन्न गरिन्छन्। हे अर्जुन, द्रव्ययज्ञभन्दा ज्ञानयज्ञ श्रेष्ठ छ। सबै यज्ञहरूको समाप्ति ज्ञानयज्ञमा पुगेर सकिन्छ। आत्म साक्षात्कारी, सत्यदर्शी गुरुसमक्ष तिमीले विनम्रपूर्वक जिज्ञासा राख्यौ भने त्यो ज्ञान प्राप्त गर्न सक्दछौ। जुन ज्ञान पाएपछि तिमी कहिल्यै मोहमा फँस्दैनौ। अनि तिमीलाई म परमात्माको एक अंश हुँ भन्ने अनुभव हुन थाल्दछ र तिमी आत्मा र परमात्माबीच भेद देख्दैनौ। जस्तोसुकै पापी पनि यो ज्ञान प्राप्त गरेर भवसागरबाट पार हुन सक्दछ। ज्ञानबिना मुक्ति असम्भव छ। ज्ञानबिनाको व्यक्ति पशुसमान हुन्छ। भक्तिबिना ज्ञान अधुरो हुन्छ। यस ज्ञानरूपी आगोले संसारी कर्मफलहरू सुकेको दाउरालाई आगोले डढाएजस्तैगरी सबै डढाइदिन्छ। संसारमा ज्ञानजस्तो पवित्र कुरो अरु केही छैन। जो व्यक्ति भक्ति र सेवामा सपर्पित हुन्छ र जो कर्मयोगी हुन्छ त्यसले आफूभित्र ज्ञानको प्रकाश जगमगाएको पाउँछ।

**श्रद्धावान्लभते ज्ञानं तत्परं संयतेन्द्रियः।**
**ज्ञानं लब्ध्वा परां शान्तिमचिरेणाधिगच्छति॥ (४-३९)**

जो सबै इन्द्रियलाई आफ्नो वशमा राख्न सक्छ र श्रद्धालु हुन्छ, त्यसले नै दिव्यज्ञान प्राप्त गर्न सक्दछ र ज्ञानी व्यक्तिले नै शान्ति पाउँदछ। तर जो अश्रद्धालु, अविवेकी, शास्त्रविपरीत काम गर्छ त्यो मूर्ख व्यक्तिले यस लोक र परलोक दुवैमा सुख पाउँदैन र त्यसको अवश्य अधोगति हुन्छ। मनको शंकाले गर्दा मानिस आत्मज्ञान प्राप्त गर्नबाट वञ्चित हुन पुग्दछ। जहाँ शंका हुन्छ, त्यहाँ साधना हुन सक्दैन। जिज्ञासुको शंकालाई निर्मूल गरी साधनामा लगाइदिने काम माहापुरुषको हुन्छ।

**योगसंन्यस्तकर्माणां ज्ञानसछिन्नसंशयम्।**
**आत्मवन्तं नकर्माणि निबध्नन्ति धनन्जय॥ (४-४१)**

हे धनन्जय ! जसले कर्मयोगको विधिले आफ्नो सबै कर्म, कामलाई ईश्वरमा अर्पण गरिदिन्छ र जसले ज्ञान र विवेकद्वारा सबै प्रकारका शंकाबाट आफूलाई मुक्त राख्दछ त्यस्तो आत्मसंयमी कर्मयोगीलाई कर्मबन्धनले बाँध्न सक्दैन र कुनै प्रकारको कर्म फल उसले भोग्नुपर्दैन। ऊ ती सबै अवस्थाबाट माथि उठेको हुन्छ र आत्मा परमात्माको एक अंश हुँ भन्ने मान्यताले गर्दा कुनै प्रकारको कर्मफलबाट ऊ प्रभावित हुँदैन।

**"जहाँ हुन्छ धर्मको नाश, अधर्म फैलिन्छ जहाँ।**
**धर्मरक्षाका लागिमा लिन्छु म औतार त्यहाँ॥"**

# पाँचौं अध्याय

यस अध्यायमा कर्मसन्यास योगबारे वर्णन गरिएको छ। यसअघि श्रीकृष्णले अर्जुनलाई कर्मयोग, सन्यासयोग र ज्ञानयोगबारे जोड दिँदै अज्ञानताबाट उत्पन्न मनभित्रको सन्देहलाई ज्ञानद्वारा हटाएर आफ्नो कर्म अर्थात् युद्ध गर्नलाई प्रोत्साहित गरेको हुँदा अर्जुनको मनमा द्विविधा उत्पन्न हुन पुग्दछ। त्यसैले अर्जुन बिन्ती गर्दै श्रीकृष्णसँग सोध्छन् हे प्रभु! हजुर कहिले कर्मयोग, कहिले सन्यासयोग र कहिले ज्ञानयोगलाई महत्व दिनुहुन्छ। त्यसैले कुन योग अर्थात् कुन मार्ग मेरा लागि उत्तम छ, त्यो स्पष्ट रूपले मलाई बताइदिनुहवस्। अर्जुन द्विविधामा परेको देखी श्रीकृष्ण भन्नुहुन्छ-

**सन्यास कर्मयोगश्च निः श्रेयसकरावुभौ।**
**तयोस्तु कर्मसन्यासात्कर्मयोगो विशिष्यते॥ (५-२)**

हे पार्थ! मोक्ष प्राप्त गर्नका लागि कर्मसन्यास र कर्मयोग यी दुवै उत्तिकै उत्तम छन्। तर, यी दुईमा काम सम्पन्न गर्न सरल भएकाले सन्यासयोगभन्दा कर्मयोगलाई श्रेष्ठ (ठूलो) मान्नुपर्दछ। तिम्रो लागि अहिले कर्मयोगको माध्यम नै बढी उपयुक्त छ। जो व्यक्ति कसैमा ईर्ष्या, राग, द्वेष गर्दैन र आफ्नो कर्म गरिरहन्छ भने त्यो कर्मयोगी अर्थात् कर्मसन्यास योगी हुन्छ। सुखदुःखको द्वन्द्वबाट आफूलाई पर राख्न सक्ने व्यक्तिले नै आफूलाई भवबन्धनबाट मुक्त गर्न सक्दछ र सदा सुख प्राप्त गर्न सक्दछ।

अज्ञानीहरू कर्म सन्यास र कर्मयोगलाई भिन्ना-भिन्नै मार्ग ठान्दछन् तर त्यो गलत हो। यदि कसैले यि दुईमध्ये कुनै एउटा मार्गको माध्यमबाट आफ्नो शुद्ध आचरण अर्थात् कर्म गर्छ भने उसले अवश्य पनि दुवै मार्गबाट प्राप्त हुने फल पाउँदछ। ज्ञानयोग र कर्मयोग दुवैबाट आफ्नो लक्ष हासिल गर्न सकिन्छ। जसले यी दुवै मार्गलाई एउटै हो भनेर देख्दछ, बुझ्दछ त्यो नै साँचो अर्थमा

श्रेष्ठ द्रष्टा हो र सच्चा तत्वज्ञानी हो । कर्मबिना सन्यास हुँदैन र जो कर्म गर्दछ, त्यसले नै ईश्वर प्राप्त गर्दछ।

**योगयुक्तो विशुध्दात्मा विजितात्मा जितेन्द्रियः ।**
**सर्वभूतात्मभूतात्मा कुर्वन्नपि न लिप्यते ॥ (५-७)**

जो व्यक्तिले इन्द्रियलाई वशमा राखेको छ, जो आत्मा संयमी छ, जसको चित्त शुद्ध छ र जो समभावी छ, त्यो कर्मयोगी हो र त्यस्तो कर्मयोगी नै कर्मबन्धन अर्थात् पापपुण्यको कर्म फलवाट मुक्त हुन्छ । देख्ने, सुन्ने, खाने, हिंड्ने, बोल्ने आदि क्रिया गरेर पनि जो आफूलाई 'कर्ता' मान्दैन र यो त हाम्रो ज्ञानेन्द्रिय र कर्मेन्द्रियको आफ्नो स्वाभाविक क्रिया हो भनी आफूलाई 'अकर्ता' मान्दछ त्यो नै ज्ञानी हो । यो कुरालाई ज्ञानीहरूले बुझेका हुन्छन् । यदि कसैले शान्तभावले आफ्नो सबै क्रियाकलापलाई ईश्वरमा अर्पण गर्छ भने त्यस्तो व्यक्ति कर्मबन्धनमा फँस्दैन अर्थात् कर्मको पापपुण्यबाट ऊ प्रभावित हुँदैन, जसरी कमलको पातमा रहेको पानीले पातलाई छोएको हुँदैन । अहंकाररहित योगीहरूले इन्द्रिय, मन, बुद्धिमा आशक्त नभई कर्म गरेका हुन्छन् ।

**युक्तः कर्मफलं त्यकत्वा शान्तिमाप्नोति नैष्ठिकीम् ।**
**आयुक्तः कामकारेण फले सक्तो निबध्यते ॥ (५-१२)**

कर्म फलको इच्छा नराखी सिर्फ आफ्नो कर्तव्य सम्झेर काम गर्ने कर्मयोगी हुन्छ र उनलाई सहज रूपमा भगवतधाम प्राप्त हुन्छ । तर जो कामना राखी अर्थात् फलको इच्छा राखी कर्म गर्दछ त्यो व्यक्ति सधैं आफूले गरेको कर्मको फल भोग्न बाध्य हुन्छ र उ कर्मबन्धनबाट कहिल्यै मुक्त हुन सक्दैन । फलको इच्छा नराखी कर्म गर्ने योगीले नै आत्मिक शान्ति प्राप्त गर्दछ । तर, जो फलको इच्छा राखी काम गर्छ त्यो कर्मबन्धनमा अवश्य बाँधिन्छ अर्थात् उसले कर्मको फलरूपी पापपुण्यलाई अवश्य भोग्नु पर्दछ ।

संयमी र ज्ञानी व्यक्ति जो आफूलाई कर्ता र कारक मान्दैन, त्यो यस देहमा नै आत्मिक सुख भोगेर बसेको हुन्छ। आत्माले कर्ता, कर्म र कर्मफलको रचना गर्दैन यी सबै प्रकृतिको गुणअनुसार क्रियाशील हुन्छन्। यस्तैगरी आत्मा कुनै पापपुण्यमा सहभागी हुँदैन। अज्ञानताको कारण हामी मोहमा फँसेका हुन्छौं र मोह कै कारणले ज्ञान ढाकिएको हुन्छ। सूर्यले अन्धकारलाई हटाए जस्तै ज्ञानले अज्ञानतालाई हटाइदिन्छ र तत्वज्ञानबाट ज्ञानीले परमात्मालाई भेट्दछ। जसको मन, बुद्धि र निष्ठा ईश्वरमा स्थिर हुन्छ, त्यस्तो शुद्ध ज्ञानी व्यक्तिले नै मोक्ष प्राप्त गर्दछ। जो व्यक्ति आफूमा र अन्य जीवहरूबीच भिन्नता देख्दैन र सबैलाई आफू जस्तै देख्दछ र समान व्यवहार गर्दछ, त्यस्तो विनय सम्पन्न ज्ञानी पुरुष भगवानको प्रिय हुन्छ र त्यो योगी पुरुष सर्वश्रेष्ठ मानिन्छ। अर्थात् ज्ञानी व्यक्तिले विद्वान्, ब्राम्हण, कुकुर, हात्ती, गाई, चण्डाल आदि सबै जीवलाई समान देखेको हुन्छ। सुख दुःखमा सम रहने दोषरहित र ईश्वरप्रति समर्पित रहने व्यक्ति यस दुःखपूर्ण संसारमा पनि सुखपूर्वक रहेको हुन्छ। सुखदुःख, लाभहानी जस्तोसुकै बेलामा पनि एकाग्र चित्त हुने, मोहमा नफस्ने ज्ञानी व्यक्तिले नै ब्रह्ममा स्थित हुन सक्दछ। विषय भोगमा जो आशक्त छैन र जो स्थितप्रज्ञ छ त्यस्तो आत्मज्ञानी व्यक्तिले परं आनन्द पाउँदछ।

**लभन्ते ब्रह्मनिर्वाणमृषय क्षीणकल्मषाः।**
**छिन्नद्वैधा यतात्मानः सर्वभूतहिते रताः॥ (५-२५)**

जस्को सबै पाप नास भइसकेको छ, ज्ञानद्वारा जसको मनमा कुनै शंकाआशंका छैन र जो सबै प्राणीको हित र कल्याणमा लागेको छ र जसको मन परमात्मामा लागेको छ त्यो पुरुषले ब्रह्मत्व प्राप्त गर्दछ। हे कुन्तिपुत्र अर्जुन! विद्वान्हरू इन्द्रिय सुखभोगमा रमाउँदैनन् किनकि उनीहरूलाई थाहा छ कि ती सबै सुख भोगहरू नश्वर

छन् ती सधैं टिकिरहँदैनन् । जो आउँछ त्यो जान्छ, जो मिल्छ त्यो गुम्छ । यस्तो क्षणिक सुख नै दुःखको कारण हो । त्यसैले बुद्धिमानहरू यस्तो सुखको पछि लाग्दैनन् । जसले इन्द्रियको बेगलाई रोक्न र काम, क्रोधलाई समन गर्न सक्दछ, त्यस्तो व्यक्ति योगी हुन्छ र यस्तो योगी यस दुःखरूपी संसारमा सुखी भएर बाँच्दछ । साथै आफ्नो अन्तःस्करणलाई बुझेर जो नित्य त्यसैमा रम्दछ त्यसैलाई आत्मिक सुख मिल्दछ । त्यसैले हे पार्थ ! तिमी अन्तर्मुखी बन्ने कोसिस गर । अन्तर्मुखी हुने व्यक्तिले नै अन्तरात्मामा जगमगाइरहेको ज्योतिलाई देख्न सक्दछ जसले गर्दा जीवनभर ऊ सुखशान्तिपूर्वक बाँच्न सक्दछ र मरेपछि पनि मुक्ति प्राप्त गर्दछ ।

हे भारत ! सांख्ययोगीहरू अर्थात् ज्ञानयोगीहरू परहित गर्नमा रमाउँछन्, उनीहरू कसैको कुभलो गर्दैनन् र चिताउँदैनन् पनि । उनीहरू पाप कामबाट आफू पन्छेर बस्दछन् र अरुको विषयमा चियोनिन्दा गर्दैनन् । त्यसैले त ती ज्ञानी महापुरुषहरू अन्तमा ब्रह्ममा लीन हुन पुग्दछन् । जसले इन्द्रिय सुख भोगलाई त्यागेर एकाग्र चित्त भई प्राण, अपान बायुलाई स्थिर राखेर प्राणयामद्वारा ईश्वरमा आफूलाई स्थित गर्दछ र इन्द्रिय, मन, बुद्धिलाई संयमित तुल्याई क्रोध, लोभ, मोह, इर्ष्या, भय आदिबाट मुक्त हुन्छ, त्यस्तो ज्ञानी व्यक्तिको जीवन धन्य बन्न पुग्दछ र ऊ भक्तिको अधिकारी बन्दछ ।

**भोक्तारं यज्ञतपसां सर्वलोकमहेश्वरम् ।**
**सुहृदं सर्वभूतानां ज्ञात्वा मां शान्तिमृच्छति ॥ (५-२९)**

हे अर्जुन ! जसले मलाई सबै जप, तप, यज्ञको मालिक, स्वर्गको अधिपति, सर्वहितकारी र सर्वउपकारी मान्दछ, त्यो व्यक्तिले यहाँ सुखशान्ति पाई मृत्युपश्चात मेरो परमधाममा बास गर्न पुग्दछ ।

**"जीतेन्द्रिय संयमी व्यक्ति, जस्को चित्त विशुद्ध छ ।**
**समभावी कर्मयोगी त्यो, कर्मबन्धन मुक्त छ ॥"**

# छैठौं अध्याय

यस अध्यायमा श्रीकृष्णले अर्जुनलाई आत्मसंयम योगबारे बताउनुभएको छ । फलको इच्छा नराखेर जसले आफ्नो कर्तव्य कर्म गर्दछ त्यो नै सच्चा सन्यासी वा योगी हुन्छ ।

**अनाश्रितः कर्मफलं कार्य कर्म करोति यः ।**
**स सन्यासी च योगी च न निरग्निर्न चाक्रियः ॥ ६-१**

सिर्फ गृहस्थी त्याग गरेर गेरुवस्त्र लगाउँदैमा कोही सन्यासी हुँदैन । मनमा वैराग्य ल्याई संसारी मोह वासना त्यागेर इन्द्रिय निग्रह गरी भगवानमा चित्तलाई स्थिर राख्न सक्ने व्यक्ति नै सन्यासी कहलाइन्छ । केही नगरी हात बाँधेर बस्ने मानिस कहिल्यै योगी बन्न सक्दैन । सन्यास भन्नु नै योग हो । संकल्प नत्यागी अर्थात् फलको इच्छा नत्यागी कर्मयोगी बन्न सक्दैन । संकल्प त्याग अर्थात् निष्काम कर्मविना योगासिद्धि प्राप्त हुँदैन । जबसम्म मानिस इन्द्रियादि विषयभोगमा आशक्त रहन्छ तबसम्म ऊ सन्यासी वा योगी हुनसक्दैन । योगी बन्नका लागि उसले सबै इन्द्रिय विषयादिको आशक्तिलाई त्याग्नु पर्दछ ।

**उध्दारेदात्मनात्मानं नात्मानमवसादयेत् ।**
**आत्मैव ह्यात्मनो बन्धुरात्मैव रिपुरात्मनं ॥ (६-५)**

कसैले कसैको उद्धार या पतन गराउँदैन । आफ्नो उद्धार गर्ने वा आफूलाई पतन गर्ने काम मानिस आफैंले गर्दछ । मानिस आफ्नो हितैषी मित्र आफैं हुन्छ र आफूलाई विगार्ने, नास्ने, शत्रु पनि ऊ आफैं बन्दछ । त्यसैले हे अर्जुन ! यो संसार रूपी भवसागरबाट तिमी आफैंले आफ्नो उद्धार गर । तिम्रो मन नै शत्रु र मित्र दुवै हो । यदि तिमीले आफ्नो चंचल र आशक्तियुक्त मनलाई काबुमा राखेर आफ्नो इशारामा नचाउन सक्यौ भने त्यो तिम्रो हितैषि मित्र बनेर तिमीलाई सहायता गर्दछ । यदि यो चंचल मनलाई काबुमा नलिई

बहकिन दियौ भने त्यसले तिमीलाई कहाँ पुऱ्याउँछ पत्तो हुँदैन। त्यो तिमीलाई अधोगतिमा पुऱ्याउने ठुलो शत्रु बन्न सक्दछ। त्यसैले आफ्नो शत्रु र मित्र मानिस आफैँ हो अरु कोही होइन।

**जितात्मनः प्रशान्तस्य परमात्मा समाहितः।**
**शीतोष्णसुखदुःखेषु तथा मानापमानयोः॥ (६-७)**

सुखदुःख, मानअपमान, लाभहानी यस्ता सबै परिस्थितिमा जो शान्त र धैर्यपूर्वक चल्दछ र त्यसलाई आउने जाने कुरा हो भनेर समभावले स्विकार्ने व्यक्तिलाई कुनै कुराले बीचलित तुल्याउन सक्दैन। संसारमा सुखदुःख, जाडोगर्मी, घामछाँया आउँछ जान्छ। त्यस्तो जुनसुकै अवस्थामा यदि तिमी संयम रहन सक्यौ भने तिमीले ईश्वरीय आनन्द र शान्ति भेट्नेछौ।

जो व्यक्ति ज्ञान, विज्ञानको ज्ञाता छ, जसले आत्मा-परमात्मालाई बुझेको छ, जो संयमित र विकाररहित छ, त्यस्तो ज्ञानी योगीले माटो र सुनमा कुनै भेद देख्दैन र राख्दैन पनि। उसको लागि माटो र सुन समान हुन्छ। सम बुद्धि हुने त्यो ज्ञानी योगीका लागि शत्रु, मित्र, गरिब, धनी, बन्धुबान्धव, पापी, धर्मात्माबीच कुनै भेद रहन्न, ऊ सबैलाई समान भावले हेर्दछ र व्यवहार गर्दछ। योगसाधनाको लागि मानिसले सर्वप्रथम आफ्नो शरीर, मन, इन्द्रियलाई वशमा राख्न सक्नुपर्दछ र तिनीहरूको संग्रह दोषबाट मुक्त भई आत्मचिन्तनमा लाग्नुपर्दछ। यसैगरी योगसाधनाका लागि एकान्त स्थलको शुद्ध र सम्म परेको जमिनमा मृगचर्म कपडा र कुशको आशन बिच्छ्याई त्यसमाथि बसेर शरीर, मन, र इन्द्रियलाई संयममा राखी ब्रह्मचर्यमा रहेर शान्त र निर्भय भई शरीर र ढाडलाई सिधा तुल्याई नाकको टुप्पोमा दृष्टि टिकाई म ईश्वरमा चित्तलाई स्थिर गरी ध्यानास्थ हुनुपर्दछ। हे अर्जुन ! यस्ता ध्यानास्थ योगी नै शान्ति प्राप्त गरी पछि ब्रह्ममा लीन हुन पुग्दछ। हे कुन्तिपुत्र अर्जुन ! जो धेरै खान्छ या खाँदैन, जो धेरै सुत्छ या बिल्कुलै सुत्दैन, त्यस्तो व्यक्ति कर्मयोगी हुन

सक्दैन। आहारविहारमा जो सन्तुलन राख्न सक्दैन त्यो व्यक्ति कहिल्यै सुखी र स्वस्थ हुन सक्दैन।

**युक्ताहारविहारस्य युक्तचेष्टस्य कर्मसु**
**युक्तस्वप्नाववोधस्य योगो भवति दुःखहा॥ (६-१७)**

जो व्यक्ति नियमित र सन्तुलित रूपले आहारविहार र आफ्नो कर्तव्यकर्मलाई त्यसको फल इच्छा नराखी नियमपूर्वक सम्पन्न गर्छ, त्यो कर्म उसका लागि सुखदायक बन्न पुग्दछ। हाम्रो चित्त चञ्चल छ, यो एक ठाउँमा धेरै बेर टिकेर रहन सक्दैन। यस्तो अस्थिर चित्तलाई आफ्नो कावुमा राखी त्यसलाई ईश्वर चिन्तनमा लगाउने व्यक्ति नै प्रभुमा स्थित भएको मानिन्छ। योगाभ्यासद्वारा चित्तलाई स्थिर गरेपछि मात्र त्यो शुद्ध तथा स्थिर चित्तमा सच्चिदानन्द प्राप्त हुन सक्दछ र यस्तो दिव्य आनन्द पाएपछि ऊ ईश्वरमा आफू लीन हुन पुगेको अनुभूत गर्दछ। सच्चिदानन्द प्राप्त गर्ने व्यक्तिको लागि अरु कुनै संसारी सुखको इच्छा रहन्न र अरु कुनै दुःखले उसलाई छुन सक्दैन। जसलाई यो संसारी विषयादि दुःखले विचलित तथा दुःखी बनाउँदैन त्यो नै सच्चा योगी बन्न सक्दछ। दृढसंकल्पसहित योगाभ्यास गर्नु योगीको परमकर्तव्य हो। मनका सबै इच्छा, आकांक्षा र कामनालाई त्यागेर इन्द्रियलाई वशमा राख्दै चञ्चल मनलाई ईश्वरमा स्थिर गरी उनैको चिन्तन गर्ने व्यक्ति सबै पापबाट मुक्त भई यस लोकमा सुख शान्ति पाउँछ र मृत्युपश्चात सच्चिदानन्दमा प्राप्त हुन पुग्दछ।

**योमां पश्यति सर्वत्र सर्वच मयि पश्चति**
**तस्याहं न प्रणश्यामि स च मे न प्रणश्चति॥ (६-३०)**

जो सच्चा योगी हुन्छ उसले सबै जीवमा मलाई र 'म' मा सबै जीवलाई सर्वत्र समभावले देख्दछ त्यस्तो व्यक्तिको लागि म सधैं देखिन्छु र त्यसले मलाई देख्दछ। यस्तो अवस्थामा यी दुई ( आत्मा र परमात्मा) एक अर्कोसँग अदृश्य वा भिन्न भइरहन सक्दैनन्। आत्मा

र परमात्मालाई एकै देखेर जसले मलाई भज्दछ, पुज्दछ त्यस्तो योगी अन्तमा ममा नै आई मिल्दछ।

**आत्मैपम्येन सर्वत्र, समं पश्यति यो अर्जुन**
**सुखं बा यदि बा दःखं, स योगि परमो मतः॥ ६-३२**

हे अर्जुन ! जो व्यक्ति सुखदुःखमा सम रहन्छ र अरुलाई पनि सम व्यवहार गर्दछ भने त्यो व्यक्तिलाई श्रेष्ठ योगी मान्नुपर्दछ। श्रीकृष्णका यी कुराहरू सुनी अर्जुन फेरि सोध्दछन्- हे मधुसुदन ! हजुरले मलाई जुन योगका विषयमा बताउनुभयो, त्यसलाई मेरो यो अस्थिर मनले ठम्याउन सकेन। यो मन ज्यादै अस्थिर, उत्ताउलो, अटेरी र बलवान् पनि छ, यसलाई आफ्नो वशमा राख्नु वा रोक्नु भनेको बहेको हावालाई रोक्नु समान कठिन छ। त्यसैले यो अस्थिर मनलाई कसरी स्थिर राख्ने र यसलाई आफ्नो वशमा कसरी राख्न सकिन्छ ? त्यो उपाय बताइदिनुहवस्। अर्जुनको यो वचन सुनी श्रीकृष्ण भन्नुहुन्छ- हे भारत ! तिमीले ठिक कुरा गर्‍यौ, सुन-

**असंशयं माहावाहो मनोंदुर्निग्रहं चलम्।**
**अभ्यासेन तु कौन्तेय वैराग्येण च गृह्यते॥ (६-३५)**

यो चञ्चल मनलाई स्थिर गर्नु अति कठिन छ तर यसलाई वशमा राख्न नसकिने पनि होइन। वैराग्य र अभ्यासबाट मनलाई विस्तारै आफ्नो वशमा ल्याउन सकिन्छ। अस्थिर मन भएको व्यक्ति योगी हुन सक्दैन र असंयमित हुने व्यक्तिलाई योगासिद्धि प्राप्त हुँदैन। चञ्चल मनलाई वशमा राखी एकाग्र मनले गरेको योगाभ्यासबाट नै सफलता मिल्दछ। अर्जुन फेरि प्रश्न गर्दछन्- हे प्रभु ! पूर्ण योग प्राप्त गर्न नसकेको अधुरो योगी अर्थात् असफल योगीको के गति हुन्छ ? त्यस्तो व्यक्तिले ईश्वर प्राप्त गर्न नसकी नरकमा जानुपर्ने हो कि ? यस विषयमा हजुरले मलाई बताउनुहवस्। मेरो यो मनको जिज्ञासा र प्रश्नको उत्तर हजुरबाहेक अरुले दिन सक्दैन। म भ्रममा परेको छु मेरो भ्रम हजुरबाट नै हट्न

सक्दछ। अर्जुनको यो कुरा सुनी श्रीकृष्ण फेरि भन्नुहुन्छ- हे पार्थ ! सत्कर्म र आफ्नो कर्तव्यकर्म गर्ने व्यक्तिको यस लोकमा र परलोकमा पनि कहिल्यै नाश हुँदैन र त्यस्ता व्यक्तिले कहिल्यै हार खानुपर्दैन। सत्कर्म गर्ने व्यक्ति असफल बन्न पुगे पनि उसले यस लोकमा गरेको पुण्यकर्मले उसलाई राम्रो प्रतिफल मिल्दछ। यस लोकमा उसले शान्ति र सुख भेट्दछ, अनि मृत्युपश्चात् स्वर्गमा बास हुन्छ। त्यस्तो सत्कर्मी व्यक्तिले अर्को जन्ममा सदाचारी, विद्वान् तथा धनवानको कुलमा जन्म लिन पुग्दछ। पूर्वजन्ममा गरेको पुण्य कर्मले गर्दा यस जन्ममा पनि उसको मन आत्मोन्नतितर्फ लाग्दछ।

**पार्थ ! नैवेह नामुत्र विनासस्तस्य विद्यते।**
**न हि कल्याण कृत्काश्चिददुर्गति तात गच्छति ॥ (६-४०)**

आफ्नो उद्धार तथा भगवान प्राप्तिका लागि कर्म गर्ने कर्मयोगीको कहिल्यै कुभलो हुँदैन। त्यस्तो व्यक्तिको न त यस जन्ममा अहित हुन्छ र परलोकमा नै उसको अहित हुन्छ। यसरी आत्मोन्नतिमा लाग्ने त्यो व्यक्ति आफ्नो सुसंस्कारयुक्त कर्मले गर्दा यस जन्ममा ऊ सत्कर्मतर्फ अभिप्रेरित हुन्छ र पापादि कर्मबाट मुक्त भई मृत्युपश्चात परमगतिमा प्राप्त हुन्छ।

**योगिनामपि सर्वेषां मद्गतेनान्तरात्मना**
**श्रद्धावान भजते यो मां, स मे युक्ततमो मतः ॥ (६-४७)**

कर्मयोगीमा पनि जसले मलाई सधैं चिन्तन गरेर ममा श्रद्धापूर्वक आफ्नो चित्तलाई समर्पित गर्दछ त्यो कर्मयोगी मेरो अतिप्रिय हुन्छ र त्यो नै उत्तम/श्रेष्ठ कर्मयोगी हो। त्यसैले हे अर्जुन ! तिमी कर्मयोगी बन। कर्मयोगी बन्दा नै तिम्रो जीवन सार्थक बन्दछ।

**"व्याधियुक्त मनलाई, जो जित्छ, मित्र बन्दछ।**
**मन नजित्नेका लागि मन नै शत्रु बन्दछ॥"**

# सातौं अध्याय

यस अध्यायमा श्रीकृष्णले अर्जुनलाई ज्ञानविज्ञान योग अर्थात् परमज्ञानको विषयमा बताउनु भएको छ। श्रीमद्‌भगवद् गीता ज्ञान भक्ति र कर्म को त्रिवेणी हो । यहाँ श्रीकृष्णले अर्जुनलाई ज्ञान र भक्ति सहितको कर्तव्य कर्म गर्न अग्रसर गराउनु भएको छ। यसमा विशेष रूपले परमात्माको पहिचान कसरी गर्न सकिन्छ भनेर व्याख्या गरिएको छ। श्रीकृष्ण अर्जुनलाई भन्नुहुन्छ- हे पार्थ ! तिम्रो ममा अनन्य श्रद्धा र भक्ति भएको कारणले म तिमीलाई दिव्यज्ञान दिन चाहन्छु। सर्वगुण सम्पन्न सर्वव्यापी मलाई कसरी जान्न सकिन्छ ? त्यसबारे म बताउँछु सुन। म तिमीलाई यस्तो तत्वज्ञान र व्यावहारिक ज्ञान बताउँछु जसलाई जानेपछि तिमीले अरु केही जान्नुपर्ने आवश्यकता रहँदैन। किनकि सम्पूर्ण कारक तत्वको कारण स्वरूप भएका सर्वेश्वर परमात्मालाई बुझेपछि अरु के पो बुझ्नुपर्छ र। संसारमा मेरा हजारौं भक्तहरूमध्ये केहीले मात्र सिद्धि प्राप्त गरेका हुन्छन्। यसरी सिद्धि प्राप्त गर्ने योगीहरूमा पनि एउटैले मात्र मलाई निश्चित रूपले चिन्न सकेको हुन्छ अर्थात् त्यो एउटाले नै सच्चा तत्वज्ञान प्राप्त गरेको हुन्छ।

**भूमि रापोऽनलो वायुः खं मनोबुद्धिरेव च।**<br>
**अहंकार इतीयं मे भिन्न प्रकृतिरष्टधा ॥ (७-४)**<br>
**अपरेयमितस्त्वन्यां प्रकृतिं विद्धि मे पराम्।**<br>
**जीवभूतां माहावाहो ययेदं धार्यते जगत् ॥ (७-५)**

हे अर्जुन ! पृथ्वी, जल, वायु, तेज, आकाश यी पाँच भौतिक तत्व र मन, बुद्धि, अहंकार गरी जम्मा आठ प्रकृतिहरू मेरै शक्तिका स्वरूप हुन्। यी आठ जड प्रकृति (शक्ति) मेरा अपरा शक्तिहरू हुन् र यस्तैगरी चेतन (आत्मा) स्वरूप मेरो अर्को परा प्रकृति (शक्ति) पनि छ। यी दुई परा र अपरा प्रकृति (शक्ति) नै सम्पूर्ण जगतको

सृष्टि तथा विनाशको मूल स्रोत हुन् र त्यसको कारक तत्व म नै हुँ। मबाहेक यस जगतमा सत्य र नित्य वस्तु अरु कुनै छैन। मोतीको दानाहरू धागोमा उनिएर एक सुन्दर मोतीको माला बनेजस्तै संसारका सबै जड तथा चेतन वस्तुहरू ममा नै आश्रित एवं गाँसिएर एक सुन्दर संसार बनेको छ। मेरो पराअपरा शक्तिले गर्दा म सर्वव्यापी हुन पुगेको छु। हे अर्जुन ! यस सृष्टिका सबै वस्तुहरू ममा नै समाहित छन् र म सबै वस्तुमा रहेको सारतत्व हुँ।

**रसोऽहमप्सु कौतेय प्रभास्मि शशिसूर्ययोः।**
**प्रणवः सर्ववेदेषु, शव्द खे पौरुषं नृषु॥** (७-८)
**पुण्यो गन्धः पृथ्वीब्वां च तेजस्वास्मि विभावसौ।**
**जीवनं सर्वभुतेषु, तपश्चास्मि तपास्विषु॥** (७-९)

जस्तै, सूर्यमा रहेको मूलतत्व 'प्रकाश' 'म' हुँ भने आकाशको मूल तत्वको रूपमा रहेको 'शव्द' पनि म नै हुँ। म रस हुँ पानीको भने शक्ति हुँ सम्पूर्ण जीवात्माको। यसैगरी हे पार्थ ! पृथ्वीको मूल तत्वको रूपमा रहेको 'गन्ध' म हुँ भने अग्निको मूलतत्व 'ताप' पनि म नै हुँ। मानिसको जीवनको मूलतत्व जीव 'आत्मा' म हुँ भने तपस्वीको मूल सार 'तप' पनि म नै हुँ। यस जगतका सबै प्रणीहरूको उत्पत्ति तत्व 'वीज' म हुँ भने बुद्धिमानहरूको 'बुद्धि' पनि म नै हुँ। यस्तै प्रकारले कामवासनारहित बलवानको 'बल' म हुँ भने मानिसहरूको शास्त्रसम्मत धर्म रूपमा रहेको 'काम' पनि म नै हुँ। हे धनन्जय ! तिमीले यो पनि बुझ कि संसारमा देखिएका सात्विक, राजसी र तामसी भाव तथा अवस्था मेरै प्रकृति 'शक्ति' का उपज हुन्। ती सबै मेरा अधीनमा छन् तर म तिनको अधीनमा छैन। म ती सबैबाट स्वतन्त्र र पर छु। यस संसारमा सबै प्राणीहरू सत्व, रज, तम यी तीन गुणले व्याप्त छन् र त्यसका मायाबाट प्रभावित छन्। मायाले गर्दा नै मानिसहरू तीनै गुणबाट पर म गुणतित, सनातन, अविनाशी परमात्मालाई चिन्न सक्दैनन्। मबाट रचित यी त्रिगुणात्मक मायाको प्रभावले गर्दा

उनीहरू यस भव बन्धनबाट पार हुनसकेका छैनन्। त्रिगुणात्मक मायाबाट पार पाउन जो मेरो शरणमा आउँछ, उसैले यो भव बन्धनबाट मुक्ति पाउँछ। मायाद्वारा ज्ञान ढाकिएका अज्ञानीहरू जसको मन, बुद्धि, आसुरी प्रकृतिको हुन्छ, त्यस्तो मूर्ख, अधर्मी र नास्तिक व्यक्ति मेरो शरणमा आउँदैन र मलाई सम्झिदैन पनि।

**चतुर्विधा भजन्ते मां जनाः सुकृतिनोऽर्जुन।**
**आर्तो जिज्ञासुरर्थार्थी ज्ञानी च भरतर्षभ॥ (७-१६)**

हे अर्जुन! मेरा भक्तहरू जो आर्त, अर्थार्थी, जिज्ञासु र ज्ञानी गरी चार प्रकारका हुन्छन् ती मेरा शरणमा आउँछन् र मलाई सधैं भज्दछन्। त्यसमा आर्त, जिज्ञासु र अर्थार्थी यी तीन प्रकारका भक्तहरू सकाम भक्त हुन्। यसरी मेरो शरणमा पर्ने र मलाई भज्ने भक्तहरूमा पनि जो ज्ञानी छ, त्यो भक्त श्रेष्ठ हो। त्यस्तो ज्ञानी भक्त मेरो लागि अति प्रिय हुन्छ र म उसका लागि पनि प्रिय हुन्छु। धेरै जन्मको लगातार प्रयासबाट ज्ञानी भक्त मेरो शरणमा आएको हुन्छ। ती सबै भक्तहरू मेरा लागि राम्रा र प्रिय छन् तापनि जसले आफ्नो मन, बुद्धिलाई ब्रह्ममा स्थित गराएको छ, जो मेरो सेवामा लागिरहन्छ त्यो मेरो लागि अतिः प्रिय छ र त्यसले नै ब्रह्म स्वरूप मलाई भेट्दछ।

हे पार्थ! ज्ञानी माहात्माहरू धेरै-धेरै जन्मपछि पनि मलाई सम्पूर्ण लोकको स्वामी सम्झेर भज्ने गर्दछन् यस्ता ब्रह्मज्ञानीहरू यस लोकमा दुर्लभ छन्। संसारमा मानिसहरू विभिन्न स्वभावका हुन्छन्। इन्द्रिय भोग, वासना र मोहले गर्दा कतिको बुद्धि विनास भएको हुन्छ भने कति राम्रै प्रकृतिका पनि हुन्छन्। आ-आफ्नो गुण, भाव र प्रकृतिअनुसार उनीहरूले आफ्नो इच्छित फल प्राप्त गर्नका लागि बेग्लाबेग्लै देवताहरूको आराधना तथा अर्चना गरेका हुन्छन्।

**योयो यांयां तनुं भक्तः श्रद्धयार्चितुमिच्छति**
**तस्य तस्याचलां श्रद्धां तामेव विदधाम्यहम्॥(७-२१)**

हे कौन्तेय ! संसारी मोह र मायामा अशक्त भएको व्यक्तिले आफ्नो इच्छापूर्तिको लागि विभिन्न देवताहरूको पूजा आराधना गर्दछन्। जसले जुन भावना र कामनाबाट जुन देवताको स्वरूपको पूजा र उपासना गरेको हुन्छ, उसको श्रद्धाभावलाई म त्यही स्वरूपको देवतामा स्थित गराइदिन्छु र तिनै देवताद्वारा म तिनको श्रद्धा र भक्तिअनुसारको इच्छित फल उपलब्ध गराइदिन्छु। मेरै इच्छानुसार ती देवताहरूले आफ्ना उपासकहरूलाई इच्छाफल प्रदान गर्दछन्। यसरी देवताहरूद्वारा प्राप्त फल अर्थात् भौतिक सुख र अन्य उपलब्धि र स्वर्गको भोग आदि सबै क्षणिक मात्र हुन्छन्। आफ्नो पूजा अर्चनाबाट प्राप्त गरेको फलको भोग सकिएपछि ऊ फेरि चौरासीको चक्करमा फर्नुपर्दछ। तर जसले मेरो शरणागत भई कामनारहित मलाई पुज्दछ, त्यसले मुक्ति प्राप्त गर्दछ अर्थात् अन्तमाः त्यो ममा नै प्राप्त हुन्छ र ऊ सदाका लागि चौरासीको चक्करबाट मुक्त हुन्छ। अज्ञानी, अल्पबुद्धि भएको व्यक्तिहरूले मेरो नित्य अविनाशी सर्वव्यापक सच्चिदानन्द स्वरूपलाई नचिनेर मलाई व्यक्ति विषेशको रूपमा देखेको र बुझेको हुन्छ। मायाले बुद्धिरूपी आँखालाई ढाकेको हुँदा ती अज्ञानी व्यक्तिहरू मेरो अजन्मा, नित्य, परमात्मा स्वरूपलाई देख्न सक्दैनन्। हे अर्जुन ! म भूत, वर्तमान, भविष्य (हिजो, आज र भोलिको) तीन कालको कुरा जान्दछु। सबैले मलाई चिन्न सक्दैनन् तर म सबैलाई चिन्दछु।

**इच्छाद्वेषसमुत्थेन द्वन्द्वमोहेन भारत ।।**
**सर्वभूतानि संमोहं सर्गेयान्ति परंतप ॥ (७-२७)**

राग, द्वेष र सुखदुःखादिको द्वन्द्वले गर्दा मोहमा परेका मानिस अज्ञानी बन्न पुगी भ्रममा परेर जीवनभर भौंतारी रहन्छन्। जो मेरो भक्त हुन्छ उसले प्रकृतिका यी सबै नियमहरूलाई पार गरेको हुन्छ। जो पापहरूबाट मुक्त भई पुण्यकार्यतिर लाग्दछ त्यस्तो व्यक्तिले माथि उल्लेख भएका सुखदुःखादी द्वद्वबाट सृजित मोहलाई पार गरेर मेरो भक्तिमा लागि मेरो धाम प्राप्त गर्दछ।

जरामरणमोक्षाय मामाश्रित्य यतन्ति ये ।
ते ब्रह्म तद्विदुः कृत्स्नमध्यात्मं कर्म चाखिलम् ॥ (७-२९)

जन्ममृत्युको चक्करबाट मुक्त हुनका लागि जो मेरो शरण पर्दछ त्यसले अवश्य पनि ब्रह्मज्ञान प्राप्त गर्दछ। त्यस्तो ब्रह्मज्ञानी व्यक्तिले आत्मस्वरूप मलाई सबैको मालिक अर्थात् सर्वाधार मानेर आत्मचिन्तनद्वारा ममा ध्यानाष्ठ हुन पुग्दछ र अन्तमा मुक्ति प्राप्त गर्दछ।

"राग, द्वेष र द्वन्द्वले, मोह माया है जमिन्छ।
मोहले मानिसलाई, अज्ञानी नै तुल्याउँछ॥"

# आठौं अध्याय

यस अध्यायमा अक्षर ब्रह्मयोगको विषयमा वर्णन गरिएको छ । यस अध्यायमा अर्जुनको जीज्ञांसाको उत्तर दिदै इश्वरको सगुण, निर्गुण र ॐकार स्वरूप अक्षर ब्रम्हको विषयका साथै सृष्ठिको उत्पत्ति र विनासको विषयमा चर्चा गर्नु भएको छ । विशेष गरी यस अध्यायमा श्रीकृष्णले अर्जुनलाई 'ब्रह्म' कसलाई भनिन्छ र भगवत प्राप्ति कसरी गर्न सकिन्छ भन्ने कुरा बताउनुभएको छ । ब्रह्म, आत्म, कर्म, भौतिक जगत, देवता आदिका विषयमा अर्जुनको मनमा रहेको अस्पष्टता र द्विविधालाई स्पष्ट पार्दै श्रीकृष्ण भन्नुहुन्छ-

**अक्षरं ब्रह्म परमं स्वभावोऽध्यात्ममुच्यते ।**
**भूतभावोदभवकरो विसर्ग कर्मसंज्ञित ॥ (८-३)**

हे पार्थ ! कहिल्यै ननासिने दिव्यतत्व जीवलाई 'ब्रह्म' भनिन्छ जसको सनातन स्वरूप आध्यात्म हो । यस भौतिक शरीर सञ्चालनका लागि गरिएका सबै क्रियाकलापलाई 'कर्म' भनिन्छ र त्यो कर्म सकाम, निष्काम दुवै हुन सक्दछ । ब्रह्म अविनाशी र नित्य छ । यो संसार परिवर्तनीय छ, यसमा रहेका यावत् सृष्टिहरू नाशवान् छन् । कहिल्यै नाश नहुने नित्य स्वरूप सिर्फ 'म' नै छु । म प्रत्येक जीवमा आत्मास्वरूप भएर रहेको हुन्छु । सबै देवताका रचयिता तथा मालिक अधिदैव र सम्पूर्ण यज्ञका मालिक अधियज्ञ पनि म नै हुँ । जीवात्माले आफ्नो शरीर छोड्दा मेरो स्मरण गर्दछ भने त्यो व्यक्ति ममा नै लीन हुन पुग्दछ ।

**यं यं वापि स्मरण्भावं त्यजत्यन्ते कलेवरम्**
**तं तमेवैति कौन्तेय सदा तद्भावभावित ॥ (८-६)**

हे पार्थ ! अन्तिम समय अर्थात् मर्ने बेलामा मान्छेले जस्तो भाव मनमा राख्दछ, जस्लाई स्मरण गर्दछ, मृत्युपश्चात उ त्यही

भावअनुसारको जुनी प्राप्त गर्दछ। जसले मर्ने बेलामा एकाग्र भावले मेरो चिन्तन गर्दछ भने उसले अवश्य मलाई पाउँदछ। त्यसकारण हे अर्जुन ! तिमी हरदम मेरो स्मरण गर। अहिले तिम्रो मुख्य कर्तव्य लडाइँ गर्नु हो। त्यसैले युद्ध गर्न अघि सर। तिमीले गरेका ती सबै कर्मलाई ममा अर्पण गऱ्यौ र आफ्नो मनबुद्धिलाई ममा केन्द्रित गऱ्यौ भने तिमीले अवश्य मलाई पाउनेछौ। हे पार्थ ! जसले एकाभावले मेरो स्मरण गर्छ र मलाई नित्य, अविनाशी, अनादि सबैका आधार स्वामी र पालनहार मान्दै भक्तिपूर्वक मेरो स्मरण गर्छ त्यो योगी अन्तमा ममा मिल्न पुग्दछ। त्यस्तो भक्तको लागि म सजिलैसँग प्राप्य हुन्छु।

**अनन्यचेताः सततं यो मां स्मरति नित्यशः**
**तस्याहं सुलभःपार्थ नित्ययुक्तस्य योगीन ॥ (८-१४)**

वेद अध्ययन गर्ने ॐकारको जप गर्ने र सन्यासीहरू ब्रह्मलोकमा बास गर्न पुग्दछन्। हे अर्जुन ! यस्तो सिद्धि प्राप्त गर्ने विधि म तिमीलाई सुनाउँछु, सुन। जो व्यक्ति इन्द्रियहरूलाई आफ्नो वशमा राखेर एकाग्र चित्तले प्राण वायुलाई शिरमा स्थित गर्दछ त्यो व्यक्ति योगी कहलाउँछ र आफ्नो योगाभ्यासद्वारा ॐकारको चिन्तन गर्ने त्यो योगीले अवश्य मेरो परमधाम प्राप्त गर्दछ। श्रीकृष्ण भन्नुहुन्छ- हे अर्जुन ! मलाई खुसी तुल्याउन कुनै ठुलो जप, तप, यज्ञ आदि गर्नुपर्दैन सिर्फ अनन्य भावले मलाई सम्झे पुग्दछ। मलाई प्रेमभावले स्मरण गर्न जहिले र जस्तोसुकै ठाउँमा पनि हुन्छ र त्यहाँ म पुगेको हुन्छु। मलाई एकपटक प्राप्त गरेपछि उसले यस संसारमा फेरि जन्मनु, मर्नु पर्दैन र जन्म, मृत्युको चक्करबाट ऊ सदाका लागि मुक्त हुन्छ। ब्रह्मलोक, चन्द्रलोक, इन्द्रलोक, भूर्लोक आदि सबै ठाउँहरू दुःखले भरिएका छन्। त्यहाँ प्रत्येक जीवको जन्म, मृत्यु क्रमअनुसार आउने जाने प्रक्रिया चलिरहन्छ। स्वर्ग पुगेपछि पनि आफ्नो पुण्यकर्मको फल

समाप्त भएपछि जीवले फेरि चौरासी जुनीको चक्करमा जानुपर्छ। तर जो मेरो उच्चतम धाम (ब्रह्मधाम) पुगेको हुन्छ त्यसले चौरासीको चक्कर लगाउनुपर्दैन र उसले कहिल्यै जन्मनु मर्नुपर्दैन।

हे अर्जुन ! एक हजार दिव्ययुगको दिन रात बराबर ब्रह्मको एक दिन हुन्छ र त्यत्तिनै समयावधि उनको एक रात हुन्छ र एक महायुगमा सत्य, त्रेता, द्वापर र कली कालहरू व्यतित हुन्छन्। ब्रह्माजीको दिनको शुभारम्भ हुँदा अव्यक्त (प्रकृति) बाट सृष्टि -जीव जन्मने प्रकृया ) प्रारम्भ हुन्छ र ब्रह्मको रात हुन थालेपछि ती सबै सृष्टि ( जीव जन्मने प्रकृया ) अव्यक्त (प्रकृति) मा नै मिल्न पुग्दछन्। ब्रह्मको प्रत्येक दिनमा जीवहरूको सृष्टि हुन्छ र रातमा ती सबै जीवहरू त्यसैमा लीन हुन पुग्दछन् अर्थात् दिनमा प्रकट र रातमा विलय हुन्छ। त्यस्तै अव्यक्त भन्दा पर अर्को दिव्य शक्ति छ, जसलाई हामी पराशक्ति भन्दछौं, जुन शक्ति ब्रह्माण्ड संसारको सबै सृष्टिको नाश हुँदा पनि त्यो नाश हुँदैन। त्यो अविनाशी तत्व नै सबैको अन्तिम गन्तव्य स्थान हो। जहाँ पुगेपछि फेरि कोही जन्ममृत्युको चक्करमा फँस्नुपर्दैन त्यस्तो परमेश्वर, जो सर्वव्यापी सबैका आधारसमेत हुन्, लाई प्रेमाभक्तिविना प्राप्त गर्न सकिँदैन।

**पूरूषःस परः पार्थ, भकत्यालभ्यस्त्वनन्यया**
**यस्यान्तः स्थानि भुतानि, येन सर्व मिदंततम् ॥ ८-२२**

एकपटक मृत्यु भएर यस संसारलाई छाडेर गएको व्यक्ति/जीव फेरि यस संसारमा फर्केर आउँछ कि आउँदैन र कुन बाटोबाट गएको मान्छे फर्किन्छ र कुन बाटोबाट गएको मान्छे फर्किंदैन। त्यस विषयमा प्रकाश पार्दै श्रीकृष्ण अर्जुनलाई भन्नुहुन्छ- हे पार्थ ! जुन व्यक्ति सूर्य उत्तरायणको बेला शुक्लपक्षको उज्यालो समयमा देह त्याग गर्दछ त्यसले फेरि जन्मनु, मर्नु पर्दैन र ऊ सोझै ब्रह्मलोकमा पुग्दछ। जो व्यक्ति सूर्य दक्षिणायन कृष्णपक्षको रातको समयमा प्राण त्याग गर्दछ त्यो व्यक्ति आफ्नो पुण्य कर्मले गर्दा स्वर्ग पुगे पनि भोग सकिएपछि फेरि यस लोकमा फर्किएर आउँछ।

**शुक्लकृष्णे गति ह्येते जगतः शाश्वते मते ।**
**एकया यात्यनावृतिमन्ययावर्तते पुनः ॥ (८-२६)**

संसारमा आउने जाने दुई प्रकारका बाटाहरू छन्, एक शुकलपक्ष/देवयान अर्को कृष्णपक्ष/पितृयान जो अनादि कालदेखि चल्दै आएका छन् ।

अर्थात् मृत्युपश्चात मानिसको लागि आफ्नो गन्तव्यतर्फ लाग्ने दुईवटा बाटाहरू छन्- एउटा प्रकाशमय र अर्को अन्धकारमय । प्रकाशमय बाटोबाट जान पाउने व्यक्तिले फेरि जन्ममृत्युको फेरो लगाउनु पर्दैन । ऊ सदाका लागि मुक्त भई सच्चिदानन्दमा लीन हुन्छ । अँध्यारो बाटोबाट जाने व्यक्ति जन्मने र मर्ने प्रक्रियाका लागि बारम्बार पृथ्वीमा आउने र जाने गर्दछ । भगवानमा शरणागत नहुने सकामी व्यक्ति यसरी बारम्बार जन्मने र मर्ने चक्करमा लागिरहन्छ । तिनमा शुक्लपक्षको मार्ग भक्तिको हो भने कृष्णपक्षको मार्ग जन्ममृत्युको चक्कर चल्ने मार्ग हो । यो तथ्य कुरा बुझ्ने व्यक्तिहरू संसारी मोहबाट आफूलाई अलग तुल्याउँछन् । जसले यो तत्व ज्ञानलाई बुझेको हुन्छ त्यो योगी पुरुषले जप, यज्ञ, दान, तप आदि केही गर्नुपर्दैन । त्यसको फल त्यसले स्वतः प्राप्त गर्दछ र अन्तमा ऊ मेरो परमधाममा पुग्दछ त्यसैले हे अर्जुन ! तिमी बुद्धि र ज्ञानले युक्त कर्मयोगी बन ।

**"स्वर्ग भूलोक सबै ती छन्, दुखादिले भरिएका ।**
**चलिरहन्छ यहाँ सधैं, चक्र यी जन्ममृत्युका ॥"**

# नवौं अध्याय

श्रीमद्भागवद् गीताको यो नवौं अध्यायलाई ज्ञानविज्ञान तथा समस्त वेद र दर्शन शास्त्रहरूको सार भन्ने गरिन्छ। यस अध्यायमा श्री कृष्णले अर्जुनलाई ईश्वरमा मन कसरी स्थीर गर्ने भन्ने विषयको गोप्य ज्ञान बताउनु भएको हुनाले यस अध्यायको नाम राजगुहययोग पनि रहन गएको छ। यस अध्यायमा विशेष गरेर ईश्वरको महिमाको वर्णन गर्नुका अतिरिक्त विशुद्ध भक्ति योगबारे विस्तार गरिएको छ। यसमा भगवान् श्रीकृष्णले अर्जुनलाई परम गोपनीय अर्थात् आत्मज्ञानको विषयमा बताउनुभएको छ। आत्मज्ञानलाई सबै विद्या तथा ज्ञानको राजा मानिन्छ जो प्राप्त गरेपछि अरु केही प्राप्त गर्नु आवश्यक हुँदैन। ज्ञानबिनाको विज्ञान लङ्गडो हुन्छ भने विज्ञानविनाको ज्ञान अधुरो बन्छ। विज्ञानसहितको ज्ञान र ज्ञानसहितको विज्ञान सबैभन्दा श्रेष्ठ मानिन्छ र त्यस्तो श्रेष्ठ तथा दिव्य ज्ञान सधैं नित्य, शाश्वत, उत्तम र फलदायी हुन्छ।

**राजविद्या राजगुह्यं पवित्रमिदमुत्तमम्।**
**प्रत्यक्षावगमं धर्म्यं सुसुखं कर्तुमव्ययम्॥** (९-२)

विद्यासहितको ज्ञानलाई सबै विद्याहरूमा सर्वश्रेष्ठ विद्या अति गोप्य र दिव्य ज्ञान, अति पवित्र र गहन विद्या मानिन्छ। मेरो भक्त धर्ममा श्रद्धा राख्दछ। श्रद्धाहीन व्यक्तिमा भक्ति हुँदैन। जसले दिव्य ज्ञानलाई जानेको हुँदैन र धर्ममा आस्था र श्रद्धा राख्दैन त्यस्तो व्यक्तिले मोक्ष प्राप्त गर्न सक्दैन र ऊ जन्ममृत्युको चक्कर काटिरहन्छ। श्रीकृष्ण भन्नुहुन्छ, हे पार्थ ! यो संसार मेरो अव्यक्त रूपले ढाकिएको हुनाले यहाँ म सर्वव्यापक रूपमा विद्यमान छु। संसारका हरवस्तुमा मेरो बास छ तापनि म ती सबैबाट अलग छु। अर्थात् यो ब्रह्माण्डको सम्पूर्ण कुरा ईश्वरमा आश्रित छ तर ईश्वर ती सबैबाट अलग हुनुहुन्छ। यो संसारमा

मानिस, पशुपक्षी, किरा, बोटबिरुवा आदि सबै जीवहरू मेरै सृष्टि हुन् र तिनको पालनकर्ता पनि म नै हुं।

**यथाकाशस्थितो नित्यं वायु: सर्वत्रगो महान्।**
**तथा सर्वाणि भुतानि मत्स्थानित्यूपधारय॥ (९-६)**

आकाशमा फैलिएका हावाहरू आकाशमै स्थित रहने र हावाले आकाशलाई प्रभावित गर्न नसके जस्तै मबाट सृजित सबै जीवप्राणीहरू ममै स्थित छन्। उनीहरू मबाट अलग रहन सक्दैनन्। उनीहरू ममा स्थित भएपनि म उनीहरूबाट प्रभावित भने हुन्न। मेरो इच्छा तथा निर्देशनबिना यहाँ एउटा पात पनि हल्लिन सक्दैन। अर्थात् यहाँ जस्तो भइरहेको छ वा हुन्छ त्यो ईश्वरकै इच्छा र खटनअनुसार हुने गर्दछ। सृष्टिका सबै जीवप्रणीहरू कल्पको अन्तमा ममा नै मिल्दछन् र अर्को कल्प सुरु हुँदा उनीहरू मबाट फेरि सृष्टि हुन्छन्। अर्थात् यो सम्पूर्ण जगत परमेश्वरकै अधीनमा छ र उहाँको इच्छाअनुसारको त्यसको सृष्टि र विनाश पनि हुन्छ। ईश्वर आफू स्वयंले गरेको कर्मले उहाँलाई बाँध्न सक्दैन, उहाँ भौतिक क्रियाकलापबाट अलग र तटस्थ हुनुहुन्छ। श्रीकृष्ण अर्जुनलाई भन्नुहुन्छ, मेरै आज्ञा र शक्तिको आधारमा यो जगतको सम्पूर्ण जीव तथा वस्तुले आ-आफ्नो काम गरेका हुन्छन्। यसरी अनन्त कालसम्म यो सृष्टि र विनाश अर्थात् जन्ममृत्युको क्रम चलिनै रहन्छ।

**अवजानन्ति मां मुढा, मानुषी तनुमाश्रितम्**
**परं भावमजानन्तो मम भूतमहेश्वरम्॥ (९-११)**

अज्ञानी मूर्खहरू मेरो यो दिव्य स्वरूप र शक्तिलाई नचिनेर मलाई एक साधारण मानिस सम्झी व्यवहार गर्ने गर्दछन्। त्यो उनीहरूको दोष होइन अज्ञानताले गर्दा नै उनीहरू त्यस्तो गर्दछन्। अज्ञानी र मोहग्रस्त मानिसहरू आसुरी प्रकृतिका हुन्छन् र यस्ता व्यक्तिले ज्ञान, कर्म र मोक्षको आशा नराखे हुन्छ। तर त्यसको

ठिक उल्टो आत्मज्ञानी मानिस दैवी स्वभाव र प्रकृतिको हुन्छ, उसले मलाई शाश्वत अविनासी समस्त सृष्टिको कारक तत्व मान्दछ र प्रेमाभावले मेरो नित्य स्मरण गर्दछ। मलाई प्राप्त गर्न जो मेरो भजन किर्तन र उपासना गर्दछ, त्यो व्यक्ति ज्ञानी माहात्मा हो। यस्ता ज्ञानीहरूमा पनि कोही मलाई द्वैत, कोही अद्वैत र कोही विश्वरूपको भावले पुज्दछन्।

**अहं क्तुरहं यज्ञः स्वधाहमहमौषधम्।**
**मन्त्रो ऽहमहमेवाज्यमहमग्निरहं हुतम्॥ (९-१६)**

हे कौन्तेय ! म सर्वाधार र सर्वव्यापक हुँ र म कर्म, कर्ता र कारण पनि हुँ। यज्ञ, यज्ञकर्ता, यज्ञमा दिइने आहुति, यज्ञमा उच्चारण गरिने मन्त्र अग्नि र हवनकर्ता आदि सबै म हुँ। यो सम्पूर्ण जगतलाई धारण गर्ने, सबै कर्मको फलदाता, प्राणीमात्रको आमा, बाबु, बाजे आदि सबै मलाई बुझ। सारा सृष्टि र प्रलयको कारक र सम्पूर्ण ब्रह्माण्डमा विज रूपले रहेको पनि म नै हुँ। हे अर्जुन, पृथ्वीलाई ताप दिने, पानी दिने र त्यसलाई रोक्ने सबै काम मबाट नै हुने गर्दछ। यस्तो मेरो नित्य र अविनाशी तथा सर्वव्यापी रूपलाई चिनेर जसले वेद शास्त्रसम्मत यज्ञ, जप, तप, पुजा आदि कर्म गर्दछ, तिनले अवश्य आफ्नो कर्मअनुसार राम्रो फल प्राप्त गर्दछ।

**ते तं भुकत्वा स्वर्गलोकं विशालां।**
**क्षिणे पुणये मर्त्यलोकं विशन्ति॥**
**एवं त्रयी धर्म मनुप्रपन्ना॥॥**
**गतागतं कामकामा लभन्ते॥॥॥ (९-२१)**

पुण्य कर्मले गर्दा ती मृत्युपश्चात स्वर्गलोकमा पुगी देवतासरह स्वर्गको भोग गर्न पाउँदछन् र आफ्नो पुण्य कर्म सकिएपछि फेरि मृत्यु लोकमा झर्दछन्। सकाम कर्म अर्थात् फलको आशा राखेर पुण्य कर्म गर्नेहरू बराबर स्वर्ग पुग्ने र फेरि पृथ्वीमा झर्ने गर्दछन्।

**अहं हि सर्व यज्ञानां भोक्ता च प्रभूरेवच**
**न तु मामभिजानन्ति तत्वेनातश्च्यवन्तिते ॥(९-२४)**

सबै यज्ञका स्वामी मलाई नचिनेकै कारण उनीहरू जन्ममृत्युको चक्करमा घुमिरहन्छन्। तर जो ज्ञानी व्यक्ति मलाई चिनेर श्रद्धा, भक्ति र प्रेमले मेरो आराधना र पुजन गर्दछ र फलको इच्छा राख्दैन त्यस्तो व्यक्ति जन्ममृत्युको फन्दामा नपरी मेरो धाममा पुग्दछ। जहाँ पुगेपछि उसको मुक्ति भएको मानिन्छ। मलाई श्रद्धा र भक्तिले सम्झने व्यक्तिको लागि म सधैं उसको संरक्षक बनेको हुन्छु र सधैं उसको रक्षा गरेको हुन्छु। सबै देवताको देवता महादेव म नै हुँ, यस्तो नबुझेर भक्तहरू विभिन्न देवदेवताको पूजा आराधना गर्दछन्। त्यसरी गरिएको सबै पूजा आराधना मलाई नै गरेसरह हो। जसले जस्तो देवता, भूतप्रेत आदिलाई पुजेको हुन्छ, उसले त्यस्तै जुनी प्राप्त गर्दछ अर्थात् सोहीअनुसारको फल उसले पाउँदछ। जस्तै मेरो पूजा आराधना गर्ने व्यक्ति मैरै परमधाम प्राप्त गर्दछ। मानिसले श्रद्धा र भक्तिपूर्वक अर्पण गरेको अन्न, जल, फल, फूल, पानी जस्तो पनि म ग्रहण गर्दछु।

**यत्करोषि यदश्नासि यज्जुहोषि ददासि यत्**
**यत्तपश्यसि कौन्तेय तत्कुरुष्व मदार्पणम् ॥ (९-२७)**

हे अर्जुन ! तिमी जे खान्छौ, जे गर्छौ, त्यो सबै प्रेम र श्रद्धापूर्वक मलाई अर्पण गर। मलाई आफ्नो कर्म अर्पण गर्ने सन्यासीहरू आफूले गरेका ती राम्रानराम्रा सबै कर्मफलबाट मुक्त भई भगवत्धाममा पुग्छन्। म सबै प्राणीमा समभाव राख्दछु। न मेरो कोही मित्र छन् न कोही शत्रु तर पनि कोही मेरो भक्त छ भने म सधैं उसको साथमा रहन्छु। उसलाई आफ्नो कृपादृष्टिले सधैं सम्हाल्दछु। म न कोहीसँग द्वेष गर्छु न कसैलाई पक्षपात नै गर्दछु। जसले मेरो भक्ति र प्रेमले सेवा र पुजन गर्छ त्यो मेरो प्रिय भक्त हो। त्यो र ममा कुनै फरक रहँदैन।

**क्षिप्रं भवति धर्मात्मा शश्वच्छान्तिं निगच्छति ।**
**कौन्तेय प्रति जानीहि न मे भक्तः प्रणश्यति ॥(९-३१)**

जस्तै ठूलो दुराचारी पापाचारी व्यक्ति पनि यदि भक्ति र प्रेमपूर्वक मेरो सेवा सम्झना गर्छ भने त्यो पापी पुण्यात्मा बन्न पुग्दछ र उसले जीवनमा शान्ति पाई मृत्यु पछि सिधै ब्रह्मलोक प्राप्त गर्दछ । मेरो भक्तको कहिल्यै नास हुँदैन । उसलाई म जस्तोसुकै आपत्विपतदेखि बचाउँछु । मेरो भक्तको कुनै जात भात हुँदैन । भक्तिमा कुनै लिङ्ग, जात जाति र वर्णको भेदभाव हुँदैन । यो अनित्य क्षणभंगुर र दुःखले भरिएको संसारबाट पार हुने एकमात्र उपाय ईश्वर शरणगति हो ।

**मन्मना भव मद्भक्तो मद्याजी मां नमस्कुरु ।**
**मामेवैष्यसि युक्त्वैवमात्मानं मत्परायणः ॥ (९-३४)**

हे पार्थ ! एकाग्र चित्तले तिमी आफ्नो मनबुद्धिलाई मेरो चिन्तन र स्मरणमा लगाउ । मेरो स्मरण मात्र गर्दा पनि तिमी ममा प्राप्त हुन पुग्दछौ । मेरो शरणमा आउने जो कोहीले पनि मेरो धाम प्राप्त गर्न सक्दछ ।

> **"सकाम कर्म गर्दैजो, भोगको इच्छा राख्दछ ।**
> **यस्तो व्यक्ति बारम्बार, स्वर्ग मर्त्यमा धाउँछ ॥"**

# दसौं अध्याय

दसौं अध्यायमा भगवान् श्रीकृष्णले आफ्नो ऐश्वर्य अर्थात् विभूतिका विषयमा सविस्तार वर्णन गर्नुभएको छ। शक्ति, यश, धन, ज्ञान, सौन्दर्य र त्याग यी ६ ऐश्वर्यहरू हुन् जो अरुमा सबै पाउन सकिंदैन। सिर्फ परमात्मा श्रीकृष्ण मात्र सर्व ऐश्वर्ययुक्त हुनुहुन्छ। कसैलाई पनि नबताइएको भगवानको ऐश्वर्य तथा विभूति सम्बन्धी अति गोप्य ज्ञान श्रीकृष्णले अर्जुनलाई बताउनुभएको छ। श्रीकृष्ण अर्जुनलाई भन्नुहुन्छ- हे अर्जुन ! मैले तिम्रो हित र कल्याणका लागि आजसम्म कसैलाई नबताएको अति गोप्य ज्ञानका कुरा तिमीलाई बताउँछु। किनकि तिमी मेरो अति प्रिय मित्र हौ। जो विश्वास र श्रद्धापूर्वक मेरो शरणागत हुन्छ त्यसैलाई म कृपा गर्दछु। मेरो विभूति र लीलाका विषयमा देवता र ठुल्ठुला सन्तमहात्मा पनि जान्दैनन् किनकि ती सबैको सृष्टि गर्ने म हुँ। भगवान अचिन्त्य हुनुहुन्छ। उहाँको कृपाबिना उहाँको विषयमा जान्न र बुझ्न सकिंदैन। श्रीकृष्ण भन्नुहुन्छ- हे पार्थ ! जसले मलाई अनादी, अनन्त र अजन्मा सबैका मालिक परमात्मा भनेर बुझ्दछ र मान्दछ त्यस्तो व्यक्ति माथि म कृपा गर्दछु। ज्ञानी व्यक्तिले मात्र मलाई त्यसरी चिन्दछ त्यस्तो व्यक्ति सबै पापबाट मुक्त भई मेरो परमधाममा बास गर्दछ। जो व्यक्ति यस संसारी मायामोहबाट अनाशक्त रही मेरो चिन्तन गर्दछ त्यो ज्ञानी व्यक्ति सबै पापबाट मुक्त भई मेरो परमधाममा पुग्दछ। भक्ति र ज्ञानबिना भगवान प्राप्त हुन सक्दैन।

**बुद्धिर्ज्ञानमसम्मोह क्षमा सत्यं दमःशमः।**
**सुखं दुखं भवोऽभावो भयं चाभयमेवच ॥**
**अहिंसा समता तुष्ठिस्तपो दानं यशोऽयशः।**
**भवन्ति भावा भूतानां मत्त एव पृथग्विधा :॥ (१०-४,५)**

मानिसलाई ज्ञान बुद्धि, जन्म, मृत्यु, भय, अभय, सन्तोष, समता, सुखदुःख, अहिंसा, सत्यता, यश अपयश, तप दान, इन्द्रियनिग्रह, अनाशक्त आदि सबै गुण तथा भावहरू मबाट नै प्राप्त हुन्छन्। यस्तै मनु, सनकादि, सप्तर्षि आदि सबै मबाट उत्पन्न भएका हुन् र तिनैबाट सम्पूर्ण जीवहरू पैदा भएका छन्। श्रीकृष्ण भन्नुहुन्छ- हे धनन्जय ! जसले मेरो ऐश्वर्य अर्थात् विभूतिप्रति विश्वास र श्रद्धा राख्दछ र त्यसलाई जान्न र बुझ्न खोज्दछ त्यो मेरो सच्चा भक्त हो र त्यो नै भक्त योगी हो। म तीनै लोकको आधार हुँ र मैले ती सबैको सृष्टि गरेको हुँ भन्ने सम्झने र बुझ्ने व्यक्तिले नै मलाई श्रद्धा र भक्ति गर्दछ र मेरो विषयमा चिन्तन मनन गर्दै त्यसैमा रमाउँछ। त्यस्तो भक्तलाई म सद्बुद्धि प्रदान गर्दछु। जसको माध्यमबाट ऊ यो संसारी प्रपञ्चबाट माथि उठेर मेरो भक्तिमा लागि अन्तमा मलाई प्राप्त गर्दछ। मेरो श्रद्धा र भक्ति गर्ने भक्तको हृदयमा बास गरी म उसलाई ज्ञान र विवेक प्रदान गर्दछु।

**तेषां सततयुक्तानां भजतां प्रितिपूर्वकम्**
**ददामि बुद्धियोगं तं येन मामुपयान्ति ते ॥ (१०-१०)**

भगवानका यी कुरा सुनेपछि अर्जुनको मनमा श्रीकृष्णप्रति अझ बढी विश्वास, श्रद्धा र भक्ति जागृत हुन्छ र उनी विनम्र बन्दै श्रीकृष्णसमक्ष बोल्छन्- हे प्रभु ! हजुर परमात्मा, परमधाम, परमसत्य, शाश्वत र अजन्मा हुनुहुन्छ भन्ने कुरा ठुला महात्मा ऋषिमुनिहरूले पनि बताउँदै आएका छन् र अहिले स्वयं हजुरका मुखारबिन्दबाट पनि ती कुरा सुन्न पाएँ। मलाई ठुलो विश्वास र श्रद्धा लागेको छ यस कुरामा। त्यसको लागि म हजुरप्रति कृतार्थ र आभार भएको छु।

**कथं विद्यामहं योगीस्त्वां सदा परिचिन्तयन्।**
**केषुकेषु च भावेषु चिन्त्योऽसि भगवन्मया ॥ (१०-१७)**

हे भगवान् ! मैले कुन कस्तो चिन्तनमनन गरेर हजुरलाई जान्न सक्छु के कस्तो भावबाट चिन्तन गर्दा हजुर प्राप्त हुनु

हुन्छ र कस्तो भावबाट हजुरलाई भज्न सकिन्छ ? । हजुरको यस महानतम् विभूतिलाई देवता, दानव आदि कसैले पनि बुझ्न सकेका छैनन् । हजुर सबैका स्वामी हुनुहुन्छ र हजुरकै शक्ति र ऐश्वर्यले यो संसार ढाकिएको छ । हजुरको शक्ति र ऐश्वर्यबारे हजुरबाहेक अरु कसैले बुझ्न र बुझाउन सक्दैन । हजुरका ती विविध ऐश्वर्यका विषयमा मलाई अझै धेरै कुरा सुन्न र जान्नको इच्छा छ कृपा गरेर मलाई सो बताउनुहोस् । श्रीकृष्ण आफ्नो अनन्त विभूतिहरूमध्ये केही मुख्य विभूतिका विषयमा अर्जुनलाई सुनाउँदै भन्नुहुन्छ-

**अहमात्मा गुडाकेश सर्वभूताशयस्थितः**
**अहमादिश्च मध्यं च भूतानामन्त एवं च ॥ (१०-२०)**

हे पार्थ ! म सम्पूर्ण जीवहरूको आत्मा हुँ र सबै जीवको आदि, मध्ये र अन्त पनि म हुँ । म आदित्यहरूमा विष्णु, ज्योतिहरूमा सूर्य, वायुहरूमा मरीचि, नक्षत्रहरूमा चन्द्रमा हुँ,

**वेदानं सामबेदोऽस्मि देवनामस्मि वासवः ।**
**इन्द्रियाणां मनश्यास्मि भूतानामास्मि चेतना ॥ (१०-२२)**

यसैगरी हे पार्थ! म वेदहरूमा सामवेद, देवताहरूमा इन्द्र, इन्द्रियहरूमा मन, सबै प्राणीहरूको जीवन शक्ति चेतना, रुद्रहरूमा शिव, यज्ञहरूमा कुबेर, वसुहरूमा अग्नि, पर्वतहरूमा सुमेरु, पुरोहितहरूमा बृहस्पति, सेनापतिहरूमा कार्तिकेय, जलाशयहरूमा समुद्र हुँ ।

**महर्षिणां भृगुरहं गिरामस्म्येकमक्षरम् ।**
**यज्ञानं जयपज्ञोऽस्मि स्थावराणां हिमालयः ॥ (१०–२५)**

हे कौन्तेय, म महर्षिहरूमा भृगु, ध्वनिहरूमा ॐकार, यज्ञहरूमा जप यज्ञ, अचल वस्तुहरूमा हिमालय, वृक्षहरूमा पिपल, देवर्षिहरूमा नारद, गन्धर्वहरूमा चित्ररथ, सिद्धपुरुषहरूमा कपिल, घोडाहरूमा उच्चश्रैवा, हात्तीहरूमा ऐरावत, मानिसहरूमा राजा, हतियारहरूमा

वज्र, गाईहरूमा सुरभी, सर्पहरूमा वासुकी, नागहरूमा अनन्त, जलचरहरूमा वरुण, पितृहरूमा आर्यमा, दैत्यहरूमा प्रल्हाद, पशुहरूमा सिंह, चराहरूमा गरुड, शस्त्रधारीहरूमा श्रीराम, माछाहरूमा गोही, नदीहरूमा गंगा हुँ। हे अर्जुन ! सबै विद्याहरूमा आत्मविद्या र सबै तर्कशास्त्रहरूको सारभूत तत्व म नै हुँ। कहिल्यै ननासिने समय र सम्पूर्ण सृष्टिकर्ताका अतिरिक्त मृत्यु, कीर्ति, लक्ष्मी, वाणी, स्मृति, बुद्धि, धृतिक्षमा पनि म नै हुँ। म सामवेदमा बृहत्साम, कविताहरूमा गायत्री, महिनाहरूमा मंसिर, ऋतुहरूमा वसन्त, तेजस्वीको तेज, ज्ञानीहरूको ज्ञान हुँ। हे पार्थ ! व्यास, शुक्राचार्य, अर्जुन, वासुदेव पनि म नै हुँ। म अपराधीलाई दिइने दण्ड, सदाचार, मौन र बुद्धिका अतिरिक्त सबै जीवहरूको जन्मदाता बीज रूप पनि हुँ। मेरो यी विभूति र शक्तिको कुनै आदि र अन्त छैन।

**यच्चापि सर्वभूतानां वीजं तदहमर्जुन।**
**न तदस्ति विना यत्स्यान्मया भूतं चराचरम्॥ (१०-३९)**

यो ब्रह्माण्डको सबै सृष्टि सौन्दर्य र ऐश्वर्यहरू मबाट नै सृजित भएका छन् र ती मेरा सृष्टिका एक अंश मात्र हुन्। मबिना यहाँ कुनै कुराको अस्तित्व छैन र मेरै योग शक्तिले यो सम्पूर्ण ब्रह्माण्ड थामेको छ। ब्रह्मादेखि लिएर पशुपक्षी, किरा, फट्याङ्ग्रा सबैको सृष्टि, पालन, संहार कर्ता र सबै जीवहरूको आत्मस्वरूप परमात्मा पनि भगवान नै हुनुहुन्छ र उहाँकै शक्तिले यो ब्रह्माण्डको सबै क्र्याकलाप चलेको छ। श्रीकृष्ण भन्नुहुन्छ- हे अर्जुन ! मेरो सम्पूर्ण योग शास्त्रको एक अंशमात्र धारणा गरेर म तिम्रो सामु खडा छु।

**"हृदयवासी आत्मा हुँ, पार्थ ! म सब जीवको।**
**आदिमध्यअन्त पनि, म हुँ सम्पूर्ण लोकको॥"**

# एघारौं अध्याय

भगवद्‌गीताको एघार अध्यायमा भगवान् श्रीकृष्णले अर्जुनलाई आफ्नो ऐश्वर्य रूपको दर्शन गराउनुभएको छ। यसभन्दा अघिको अध्यायमा उहाँले आफ्नो विभिन्न ऐश्वर्य अर्थात् विभूतिको विषयमा वर्णन गर्नुभएको थियो। कसैलाई पनि नबताइएको भगवान्‌को विभूतिका विषयमा अर्जुनलाई बताउनु भएपछि अर्जुनको मनमा श्रीकृष्णप्रति अझ बढी विश्वास, श्रद्धा र भक्ति जागृत हुन्छ।

**अर्जुन बिन्ती गर्दछन् -**

**मदनुग्रहाय परमं गुहयमध्यात्मसंज्ञितम्।**
**यत्वयोक्तं वचस्तेन मोहोऽयं विगतो मम॥ (११-१)**

हे कृष्ण ! मलाई कृपा गरेर हजुरले जुन गोप्य कुरा तथा उपदेश मलाई सुनाउनु भयो त्यसबाट मेरो अज्ञानता हटेको छ। श्रीकृष्ण यस ब्रह्माण्डका सृष्टिकर्ता र उहाँकै शक्तिबाट यो सम्पूर्ण जगतको क्र्याकलाप चलेको कुरा थाहा पाएका अर्जुन विनम्र हुँदै भगबानको त्यो विभूति स्वरूपको दर्शन आफ्नै आँखाले हेर्न पाऊँ भनी श्रीकृष्णलाई बिन्ती गर्दछन्। अर्जुनको जिज्ञासा पूरा गर्न श्रीकृष्णले उहाँलाई आफ्नो विराट विश्वरूप देखाउने निधो गरी भन्नुहुन्छ- हे पार्थ ! तिमी यसअघि कसैले नदेखेको मेरो विराट स्वरूप अब देख्नेछौ जसमा तिमीले यो ब्रह्माण्डको सम्पूर्ण कुरा मभित्र अटेको देख्न पाउनेछौ।

**न तु मां शक्यसे द्रष्टुमनेनैव स्वचक्षुषा**
**दिव्यं ददामि ते चक्षुः पश्य मे योगिमैश्वरम्॥ ११-८**

तर मेरो त्यो दिव्य स्वरूप हेर्न वा देख्न तिम्रो त्यो बाह्य आँखाले नसक्ने हुँदा म सर्वप्रथम तिमीलाई दिव्य आँखा प्रदान गर्दछु, जसले गर्दा तिमी मेरो विश्वरूपलाई देख्न सक्दछौ भनी

श्रीकृष्णले अर्जुनलाई दिव्य दृष्टि दिनुभयो र आफ्नो विराट स्वरूपको दर्शन गराउनुभयो । असंख्य आँखा, असंख्य मुख, असंख्य पेट भएको उक्त विराट स्वरूप विविध गरगहना र शस्त्रअस्त्रले सुसज्जित थियो । चारैतर्फ मुख भएको र शरीर भरी सुगन्धित चन्दन लेपन गरिएको उक्त दिव्य विराट स्वरूप हजारौं सूर्यको किरणभन्दा पनि जाज्वल्यमान प्रकाशपुञ्ज जस्तो देखिन्थ्यो । अनेकौं भागमा विभाजित उक्त विराट शरीरभित्र सबै देवता र जगतै समाहित भएको देखिन्थ्यो । यस्तो विभत्स विश्वस्वरूपलाई देखेर रोमान्चित हुँदै अर्जुन दुई हात जोडेर कृष्णलाई बिन्ती गर्दछन्-

**अनेकबाहुदरबकत्रनेत्रं, पश्चामी त्वां सर्वतोऽनन्त रूपम् ।**
**नान्तं नमध्यं न पुनस्तवादिं, पश्चामि विश्वेश्वर विश्वरूप ॥(११-१६)**

भगवान् ! म हजुरको विराट शरीरभित्र सम्पूर्ण देवता, ब्रह्मा, विष्णु, महेश्वर, पशुपक्षी, नाग आदि समेटिएको देख्देछु । हजुरको त्यो विराट स्वरूपको सुरु र अन्त कतै देखिंदैन । उक्त विराट स्वरूपबाट निस्किएको जाज्वल्यमान् तेजले गर्दा मेरो आँखा तिमिराएको हुँदा म त्यो रूपलाई स्पष्ट रूपमा देख्न सक्दिन तापनि गदा, चक्र, मुकुट र अनेकौं अंग र आभूषणले सुसज्जित स्वरूपलाई देख्दैछु । अर्जुन फेरि विनम्र बन्दै बिन्ती गर्छन्- हे प्रभू ! हजुर सम्पूर्ण जगतलाई धारण गर्ने अनादि, धर्मरक्षक, शाश्वत र अविनाशी हुनुहुन्छ ।

**अनादि मध्यान्तमनन्तवीर्य ।**
**मनन्तवाहुं शशी सूर्य नेत्रम ॥**
**पश्यामि त्वां दिप्तहुताशवक्त्रं ॥।**
**स्वतेजसा विश्वमिदं तपन्तम् ॥॥ (११-१९)**

हजुरको आदि, मध्य र अन्त केही छैन । असंख्य हात, पाउ र आँखाले युक्त हजुरको मुखबाट निस्किरहेको ज्वालाग्निबाट पृथ्वी सबै डँढेलो लागेको देख्दैछु । सर्वव्यापक हजुरको यो अलौकिक

विभत्स रूप देखेर तीनवटै लोक भयभित हुँदै देवता, दानव, सन्तमुनि आदि सबैजना हजुरको शरणागत भएका छन्। पितृ, गन्धर्व, यश, रुद्र, वशु, आदित्य, वायु, अश्विनी आदि सबै सिद्धहस्त पुरुषहरू हजुरलाई देखेर आश्चर्य चकित छन्।

**रूपं महत्ते वहुवत्र नेत्रं।**
**माहावाहो वहुवाहुरूपादम्॥**
**वहुदरं वहुदंष्ट्राकरालम्॥**
**दृष्ट्वा लोकाः प्रव्यथितास्तथाहम्॥॥ (११-२३)**

असंख्य आँखा हात, खुट्टा, दाँत, पेट आदि भएका हजुरको त्यो भयंकर उग्र रूप देखेर समस्त प्राणीहरू भयभित देखिन्छन्। हजुरको अनेक रूप रङ्गले सजिएको दनदनी बलेको मुखाकृति देखेर मेरो मन पनि व्याकुल तथा भयभीत भएको छ। म हजुरको त्यो विशाल स्वरूपले यो ब्रह्माण्डलाई ढाकेको देख्दैछु। हजुरको त्यो विशाल र दनदनी बलेको मुखभित्र नदीहरू सागरमा मिल्न आतुर भएर दौडेजस्तै कौरव शैन्यका भिष्म, द्रोण, कर्णसहित सम्पूर्ण महारथीहरू धमाधम हजुरको मुखभित्र पस्दै गरेको म देख्दैछु र कोही कोही हजुरको त्यो विशाल दाँतको कापमा अल्भिरहेको र ती सबैलाई हजुरले निलिरहनु भएको पनि देख्दैछु।

**यथा प्रदिप्तं ज्वलनं पतङ्गा, विशन्ति नासाय समृद्धवेगाः**
**तथैव नाशाय विशन्ति लोका, स्तवापि वक्त्राणी समृद्धवेगा : ॥(११-२९)**

यसरी पुतलीहरू बत्तीमा आकर्षित भएर त्यसमा होमिन्छन् त्यसैगरी सम्पूर्ण व्यक्तिहरू हजुरको मुखभित्र नासिन पस्दै गरेको देखदैछु। हजुरको त्यो विराट शरीरबाट निस्किएको तेजको ज्वालाले यो समस्त जगत नै तप्त भएजस्तो लाग्दछ। यस्तो अनौठो स्वरूप धारण गर्नुहुने हजुर को हुनुहुन्छ ? मलाई जान्न इच्छा छ। प्रभु ! बताउनुहोस्। अर्जुनको कुरा सुनी श्रीकृष्ण भन्नुहुन्छ- हे पार्थ ! म

काल हुँ। यस युद्धमैदानमा रहेका समस्त प्राणीहरूलाई निल्न म प्रकट भएको छु। मैले तिम्रा शत्रु पक्षका सबैलाई नासिसकेको हुनाले तिमी उठ युद्धगर र युद्ध जिती विजयीको जश लेऊ। श्रीकृष्णका यी वचन सुनेर अर्जुन भय र खुसीले थरथर काँप्दै दुई हात जोडी फेरि कृष्णसँग बिन्ती गर्छन् हे परमात्मा ! यस ब्रह्माण्डमा समस्त प्राणीहरू हजुरको शरणमा छन् र अत्याचारी दानवहरू भने हजुरको सामु टिक्न नसकेर डरले भाग्दैछन्।

**त्वमादिदेव पुरुषः पुराण।**
**स्त्वमस्य विश्वस्य परं निधानम्॥**
**वेतासि वेद्यं च परं च धाम॥।**
**त्वया ततं विश्वमनन्त रूप॥॥ (११-३८)**

हजुर अविनाशी, अजय, अनन्त र आदि स्रष्टा हुनुहुन्छ। हजुरभन्दा माथि र ठूलो यस जगतमा अरु कोही छैन। समस्त सृष्टिका आधार, सबले जान्न र बुझ्न लायक, सर्वव्यापक सबैका पिता अति शक्तिशाली तथा पुरुषार्थी हजुरलाई म बारम्बार नमन गर्दछु। मैले हजुरलाई यसअघि आफ्नो साथी सम्झेर केके भन्न हुने/नहुने कुरा भनें हुँला अथवा अपमान गरें हुँला त्यसको लागि अज्ञानी सम्झी मलाई क्षमा गर्नुहवस्। तीनै लोकका मालिक, सबैका पुजनीय गुरु हजुरको म चरण पर्दछु ममाथि कृपा गर्नुहवस्। हजुरको त्यो बिराट स्वरूप देखेर मेरो मन डरले काँपिको छ म त्यो स्वरूपलाई हेर्न सक्दिन त्यसैले हे कृपासागर हजुरले मलाई त्यही पहिलेको रूप अर्थात् चर्तुभुज नारायणको रूपमा दर्शन दिनुहवस्।

**अदृष्टपूर्व हृषितोऽस्मि दृष्ट्वा, भयेन च प्रव्याथितं मनों मे।**
**तदेव मे दर्शय देवरूपं, प्रसीद देवेश जगन्निवास॥ (११-४५)**

श्रीकृष्ण भन्नुहुन्छ- हे अर्जुन ! मैले तिमीलाई आफ्नो योगशक्तिले मेरो विश्वरूपको दर्शन गराएँ। त्यस्तो स्वरूप आजभन्दा अघि कसैले देख्न पाएको थिएन। जस्तै ठूलो जपतप, व्रत, ध्यान आदिबाट प्राप्त

हुन नसक्ने यो दुर्लभ मेरो दिव्य विश्वरूपको तिमीलाई दर्शन दिएको छु। तिमी यो रूप देखेर नडराउ र नआत्तिऊ। यदि तिमी चाहन्छौ भने म यो विश्वविराट रूप त्यागेर फेरि आफ्नो पहिलेको रूपमा आउँछु लौ हेर भनेर श्रीकृष्ण चतुर्भुज विष्णुको रूपमा प्रकट हुनुभयो। त्यो देखेर अर्जुन थरथर काँपेको स्वरमा फेरि बिन्ती गर्दछन्- हे प्रभू ! हजुरको यो सौम्य मानव स्वरूप देखेर अब मेरो मन शान्त भएको छ। श्रीकृष्ण फेरि भन्नुहुन्छ- हे पार्थ ! अहिले तिमीले मेरो जुन चतुर्भज स्वरूप देखेका छौ त्यो रूपलाई ठूलाठूला देवता, ऋषिमुनि तथा सन्तहरूले पनि देख्न दुर्लभ छ र त्यसको दर्शन गर्न सबै लालायित छन्। मेरो अनन्य भक्तिले मात्र प्राप्त गर्न सकिने त्यो स्वरूपको दर्शन आज तिमीले गर्न पायौ।

**नाहंवेदैर्न तपसा न दानेन न चेज्यया**
**शक्य एवं विधो द्रष्टुं, दृष्टवानसी मां यथा ॥ (११–५३)**

हे अर्जुन ! तिमीले अहिले देखेको मेरो चतुर्भुज स्वरूपलाई वेद, यज्ञ दान, जप, तप आदि कुनै माध्यमबाट पनि देख्न सकिन्न। यस्तो दुर्लभ स्वरूपको दर्शनले तिम्रो जन्म सफल भएको छ। जसले गर्दा अब तिमी सहज रूपमा मेरो परंधाममा पुग्न सक्तछौ। जो व्यक्ति मेरो लागि नै सम्पूर्ण कर्तव्य कर्म गर्दछ अर्थात् सबै कार्य मलाई नै सम्झेर गर्दछ र ममा नै अर्पण गर्दछ, त्यस्तो व्यक्तिको संरक्षण र कल्याणको लागि म सदा तत्पर रहन्छु। जो आशक्तिरहित छ, जो कोहीसँग वैरभाव राख्दैन, जो ममा नै शरणागत हुन्छ त्यस्तो व्यक्ति ममा नै आएर मिल्दछ। यसरी यस अध्यायमा श्रीकृष्णले आफ्नो प्रिय भक्त र साथी अर्जुनलाई आफ्नो दिव्य विश्वरूपको दर्शन दिनुभएको र त्यस स्वरूपको महत्व अर्जुनलाई बताउनुभएको छ।

**"स्वयं गदाचक्रहरू लिएको, किरीटले उज्ज्वल भैरहेको।**
**उही परं सुन्दर चारबाहु, स्वरूपको दर्शन गर्न पाऊँ॥"**

# बाह्रौं अध्याय

यस अध्यायमा श्रीकृष्णले अर्जुनलाई भक्तियोगको विषयमा बताउनुभएको छ। यहाँ भक्त र भक्तिको विषयमा व्यापक रूपले चर्चा गरिएको छ। यहाँ भगवान्‌को साकार तथा निराकार रूप र त्यसमा कुन रूपको उपासना श्रेष्ठ हो र कुंन मार्ग हाम्रो लागि सरल र सुलभ हो भन्ने विषयमा स्पष्ट पारिएको छ। प्राणीमात्रको लागि अति दुर्लभ भगवानको विश्वरूपको दर्शन पाएर अत्यन्त कृतज्ञ तथा हर्षविभोर भएका अर्जुनले भगवानको साकार तथा निराकार रूपका बारेमा र ती दुई रूप पुज्ने भक्तहरूमध्ये कुन रूप पुज्ने भक्त श्रेष्ठतर हो भन्नेबारे जान्न र बुझ्न आफू आतुर भएको कुरा श्रीकृष्णसामु प्रकट गर्दछन्। अर्जुनको जिज्ञासाको उत्तर दिँदै श्रीकृष्ण भन्नुहुन्छ-

**मय्यावेश्य मनो ये मां नित्ययुक्ता उपासते।**
**श्रद्धया परयोपेतास्ते मे युक्ततमा मताः॥ (१२-२)**

हे अर्जुन ! जो मेरो सगुन सकार रूपलाई श्रद्धा र भक्तिपूर्वक पुज्दछ त्यो भक्त सिद्धयोगी हो। सगुन साकार भगवानको अर्चना र उपासना नै भक्तिको लागि सर्वोत्तम मार्ग हो। भगवान श्रीकृष्ण भन्नुहुन्छ- हे पार्थ ! जो व्यक्तिहरू सबै कर्महरूलाई ममा समर्पित गरेर अनन्य भावले मेरो उपासना गर्छ उसलाई यो भवसागरबाट पार तार्ने काम म गर्दछु। जो प्राणी आफ्नो इन्द्रियलाई वशमा राखी समभावले अविनाशी, नित्य सर्वव्यापी मेरो साकार रूपलाई भज्दछ, त्यसको सदा ध्यान गर्दछ र सबै प्राणीहरूको सेवा र कल्याणमा आफूलाई लगाउँछ त्यो भक्तले नै मेरो परमधाम प्राप्त गर्दछ। मेरो निराकार रूपलाई भज्ने र पुज्ने व्यक्ति वा भक्तलाई भने आफ्नो लक्ष प्राप्त गर्न अति कठिन हुन्छ। त्यस्तै मेरो निराकार

अर्थात् अव्यक्त रूपको अनुयायी अर्थात् निराकार मार्ग अपनाउने भक्तहरूलाई पनि अति दुःखकष्ट हुन्छ। यी दुवै भक्तियोग र ज्ञानयोगको मार्गबाट चल्दा भगवत प्राप्ति त हुन सक्दछ तर भक्ति मार्गभन्दा ज्ञानमार्ग अति कठिन तथा कष्टकर छ। हामी देहधारीहरूको लागि भक्ति मार्ग नै सरल र सुलभ हुन्छ। ईश्वरको निराकार स्वरूपलाई जान्न र बुझ्न त्यसका अनुयायीहरूले विभिन्न प्रकारका वेद, उपनिषद, धार्मिक ग्रन्थ आदिको अध्ययन, मनन र चिन्तनद्वारा त्यसलाई जान्नु बुझ्नु पर्ने हुन्छ। यो काम गर्न साधारण मानिसलाई कठिन पर्दछ। त्यसैले साधारण प्राणीहरूका लागि भगवानको साकार रूपको उपासक बन्नु वा त्यसलाई पुज्नु नै ईश्वर प्राप्तिको लागि सरल मार्ग हो।

**श्रेयो हि ज्ञानमभ्या सज्ज्ञानादध्यानं विशिष्यते।**
**ध्यानात्कर्मफल त्यागस्त्यागच्छन्तिरनन्तरम्॥ (१२-१२)**

हे अर्जुन ! जो मानिस भक्तिभावले आफ्नो सबै कर्महरू ममा अर्पण गरी श्रद्धापूर्वक मेरो सेवामा लाग्दछ भने ऊ अवश्य पनि यस भवसागरबाट पार भई मेरो भगवतधाममा पुग्न सक्दछ। त्यस्तो व्यक्ति माथि मेरो सदा कृपा रहनेछ। अर्जुन, तिमीले आफ्नो मन बुद्धिलाई ममा लगायौ भने तिमी अवश्य ममा मिल्न पुग्नेछौ। ममा मन लगाउन तिमीले भक्तियोगको अभ्यास गर्नुपर्दछ। यदि त्यो गर्न सकेनौ भने तिमीले गर्ने जेजति कर्महरू छन् ती मलाई सुम्पिदेऊ अर्थात् मेरो नाममा ती कर्महरू गर्ने गर र त्यो कर्मको फलको आशा पनि नगर। हुन त भक्तियोगभन्दा ज्ञानयोग श्रेष्ठ हो तर ज्ञानयोगभन्दा पनि ध्यानयोग र त्योभन्दा पनि निष्काम कर्मयोग अर्थात् फल इच्छाको त्याग श्रेष्ठतर हो। कर्मफलको आशा नराख्नेलाई नै मनमा आनन्द र शान्ति प्राप्त हुन सक्दछ। श्रीकृष्ण भन्नुहुन्छ- हे कौन्तेय ! मलाई त्यो व्यक्ति प्रिय छ जो द्वेष, स्वार्थ र मोहरहित छ, जो दयालु निरहंकारी र

समदर्शी छ। यस्तै सकृय धैर्यवान, सन्तोषी, इन्द्रियदमन गर्नसक्ने, आफ्नो मनबुद्धिलाई ममा अर्पण गर्ने र अरुलाई दुःख कष्ट नदिने व्यक्ति मलाई मन पर्छ।

**यो न हृष्यति न द्वेष्ठि न शोचति न काङक्षति**
**शुभाशुभ परित्यागि भक्तिमान्यः स मे प्रियः॥ (१२-१७)**

कुशल पवित्र, चरित्रवान्, चिन्तारहित र सुखदुःखमा समरहने, निर्भय, हर्ष, द्वेष, इर्ष्या, शोक आदि रहित महत्वाकांक्षी नभएको, लाभहानीको परवाह नराख्ने, मित्रशत्रु, लाभहानी, मान अपमान, जाडोगर्मी, सुखदुःख आदि सबै बेलामा समभाव राख्ने व्यक्ति मलाई अति प्रिय लाग्दछ। जो मीतभाषी छ, कुसंगतदेखि टाढा रहन्छ, सन्तोषी छ, मोहमा फस्दैन त्यस्तो व्यक्ति पनि मलाई मन पर्छ।

**तुल्यनिन्दास्तुतिर्मौनी संष्तुष्टो येव केनचित्।**
**अनीकेतः स्थीरमतिर्भक्तीमान्मे प्रियो नरः॥ (१२–१९)**

जो व्यक्ति आफ्नो स्तुति र निन्दा दुवैलाई समान सम्झन्छ, जो चिन्तनशील छ, जो सुखदुःख राम्रो-नराम्रो, मिठो-नमिठोको परवाह नराखी सन्तोषले त्यसको सेवन गर्छ अथवा त्यसमा नै रमाउँछ र जो संसारी पाप, मोह र आशक्तिबाट टाढा आफूलाई राख्छ। यसका अतिरिक्त हे अर्जुन! जसले श्रद्धा, भक्ति र प्रेमपूर्वक मेरो पूजा, अर्चना र उपासना गर्दछ त्यस्तो ज्ञानी भक्तप्रति म सधैं कृपा बर्साउँछु, उसको साथमा हुन्छु र अन्तमा मोक्ष प्राप्त गरी मेरो भगवतधाममा उसको बास हुन्छ।

**"द्वेष, स्वार्थ, मोह रहित जो हितैषि दयालु छ।**
**निरहंकारी समदर्शी, मेरा लागि त्यो प्रिय छ॥"**

# तेह्रौं अध्याय

यस अध्यायमा भगवान् श्रीकृष्णले अर्जुनलाई क्षेत्र र क्षेत्रज्ञका विषयमा विस्तृत रूपले जानकारी गराउनुभएको छ। त्यसैले यस अध्यायको नाम क्षेत्र क्षत्र वा विभाग योग राखिएको छ। अर्जुनको मनमा यसभन्दा अघिका अध्यायहरूमा उल्लेख भएका प्रकृति र पुरुष, ज्ञान र ज्ञेय, क्षेत्र र क्षेत्रज्ञ, का विषयमा केही जिज्ञासा र अस्पष्टता भएकाले त्यसबारे स्पष्ट पारिदिनुहुन श्रीकृष्णसँग बिन्ती गर्दछन्। यसअघि पनि अर्जुनको मनमा रहेको शंका र अज्ञानतालाई हटाउन श्रीकृष्ण सधैं अग्रसर हुनुभएको देखिन्छ।

**इदं शरीरं कौन्तेय क्षेत्रमित्यभिधियते।**
**एतद्यो वेत्ति तं प्राहुः क्षेत्रज्ञ इति तद्विदः॥ (१३-१)**

क्षेत्र र क्षेत्रज्ञको विषयलाई लिएर स्पष्ट पार्दै श्रीकृष्ण भन्नुहुन्छ- यो हाम्रो शरीर 'क्षेत्र' हो र जसले यो शरीरको विषयमा ज्ञान राख्दछ त्यो 'क्षेत्रज्ञ' हो। यो शरीर नै हाम्रो कर्म क्षेत्र हो। जीवात्मा शरीरभन्दा भिन्न भएतापनि त्यसमा अवस्थित 'क्षेत्रज्ञ' (परमात्मा) एक छन्। परमात्मा सबै कर्म क्षेत्र (शरीर) को ज्ञाता र मालिक पनि हुन्। त्यसैले सब जीवात्माको ज्ञाता परमात्मा नै 'क्षेत्रज्ञ' हुन्। जीव र शरीर (क्षेत्र र क्षेत्रज्ञ) को भिन्नतालाई बुझ्ने र जान्ने व्यक्ति ज्ञानी हो। शरीर, आत्मा र परमात्माको विषयमा जानकारी गर्नु नै ज्ञान प्राप्त गर्नु हो। हामी देहधारीले प्रकृति, पुरुष र ईश्वरका विषयमा जानकारी राख्नु आवश्यक छ। कर्मक्षेत्रको रूपमा रहेको यो भौतिक जगत प्रकृति हो। प्रकृतिलाई भोग गर्ने जीवात्मा हो र यी दुई प्रकृति र जीवात्मालाई सञ्चालन गर्ने प्रमुख सञ्चालक परमात्मा ब्रह्मा हुन्। पञ्च महाभूत, दस इन्द्रिय, इन्द्रिय विषयादि र मन, अहंकार यी सबैको संयुक्त रूपलाई कार्मक्षेत्र भनिन्छ अर्थात् मन, बुद्धि र अहंकारको अभिव्यक्तिलाई कर्मक्षेत्रको संज्ञा दिन सकिन्छ। यो शरीर सम्पूर्ण

तत्वहरूको अभिव्यक्ति हो जो सदा परिवर्तनशील छ। जसले यो शरीर 'म' होइन भन्ने बुझेको, जानेको छ, त्यस्तो व्यक्ति शरीरसँग सम्बन्धित अनुकूल तथा प्रतिकूल अवस्थाबाट प्रभावित हुँदैन। शरीरजन्य इर्ष्या, द्वेष, सुखदुःख, धैर्य, प्राणशक्ति आदि सबै हाम्रा कर्मक्षेत्र र क्रिया हुन। विनम्र अभिमानरहित अहिंसक, सहनशील, सरल, सुयोग्य गुरुको चेला, पवित्र, धीर, आत्मसंयमी, ईश्वरभक्त, एकान्त वासको चाहाना गर्ने, आत्मसाक्षात्कारको महत्व जान्ने, परंशक्तिको खोजी गर्ने यस्तो व्यक्ति ज्ञानी हो।

**आध्यात्मज्ञाननित्यत्वं तत्वज्ञानार्थदर्शनम्।**
**एतज्ज्ञानमिति प्रोक्तमज्ञानं यदतोऽन्यथा॥ (१३-११)**

श्रीकृष्णले आत्मविश्लेषण र सत्यको खोजीकार्यमा बढी जोड दिँदै अगाडि भन्नुहुन्छ- श्रद्धा, विश्वास र विनम्रताबिना ज्ञान प्राप्त गर्न सकिँदैन। भौतिक जीवनभन्दा आध्यात्मिक जीवन बाँच्नु श्रेयस्कर छ। यो शरीरलाई आत्मा र 'म' सम्झिनु भ्रम हो।

मानिसले जान्नुपर्ने गुह्य कुरा सम्झाउँदै श्रीकृष्ण भन्नुहुन्छ- हे अर्जुन, म तिमीलाई यस्तो गुह्य कुरा बताउँछु जुन जानेपछि तिमीले अरु जान्नुपर्ने कुरा केही हुँदैन। परमात्मा अर्थात् क्षेत्रज्ञ यो भौतिक संसारको कार्य कारणभन्दा धेरै पर छन्। उनी सत्असत्भन्दा भिन्न छन् र देख्न सुन्न नसकिने इन्द्रियको अनुभूतिभन्दा पनि पर छन्। सहस्र हात, खुट्टा, शिर, पाउ, मुख, कान, भएका यस्ता परब्रह्म 'क्षेत्रज्ञ' यस जगतमा सर्वव्यापक रूपले रहेका छन्।

**सर्वेन्द्रियगुणाभासं सर्वेन्द्रियविवर्जितम्।**
**असक्तं सर्वभृच्चैव निर्गुणं गुणभोक्तृ च॥ (१३-१४)**

उनी इन्द्रियका मूल स्रोत भएतापनि इन्द्रियरहित, अनाशक्त, गुणका खानी हुन्। गुणको खानी भएर पनि उनी गुणरहित र सबैका पालनहार हुन्। परमात्मा हाम्रो नजिक भएर पनि हामीभन्दा

टाढा र जानी नसक्नु छन् र उनी हरेक प्राणीमा विभाजित भएर रहेका छन् तापनि अविभाजित छन् । हाम्रो आफ्नै हृदयभित्र बसेतापनि उनी हामीबाट अदृश्य छन् । सुक्ष्मातिसुक्ष्म रूप भएकाले भौतिक इन्द्रियहरूले उनीलाई देख्न, जान्न, बुझ्न सकिँदैन । उनी सबैभन्दा टाढा रहेर पनि हामीसँग अत्यन्त नजिक छन् । उनै परमात्माले यस ब्रह्माण्डको सृष्टि, स्थिति र संहार पनि गर्दछन् । सबै प्रकाशहरूका मूल स्रोत परमात्मा अन्धकारभन्दा पर अप्रकट र अदृश्य छन् । ज्ञान, ज्ञानको विषय र ज्ञानको लक्ष्य पनि ईश्वर नै हुन् ।

श्रीकृष्णले अर्जुनलाई क्षेत्र (शरीर), ज्ञान र ज्ञेयका विषयमा स्पष्ट पार्दै भन्नुहुन्छ- प्रकृतिबाट नै रागद्वेष आदि विकारहरू जन्मिन्छन् । प्रकृति र पुरुषको सुरु र अन्त दुवै हुँदैन ।

**कार्यकारणकर्तृत्वे हेतुः प्रकृति रुच्यते ।**
**पुरुषः सुखदुःखानां भोक्तृत्वें हेतुरुच्यते ॥ (१३-२०)**

सम्पूर्ण कार्य र कारणको कारक तत्त्व प्रकृति हुन् भने सुखदुःखको कारण जीवात्मा हुन् अर्थात् कर्तृत्वको कारण प्रकृति हो भने भोक्तृत्वको कारण जीव हो ।

**पुरुषः प्रकृतिस्थो हि भुङ्क्ते प्रकृतिजान्गुणान् ।**
**कारणं गुणसङ्गोऽस्य सदसद्योनिजन्मसु ॥ (१३-२१)**

आफ्नो पूर्वजन्मको कर्म र इच्छाअनुसार जीवात्मालाई यस जन्ममा प्रकृतिले सोहीअनुरूपको परिस्थितिको सृजना गरिदिएको हुन्छ । प्रकृतिकै विषयअनुसार जीवले शरीर धारण गर्दछ र शरीरभित्र रहेको जीवात्माले सोहीअनुरूप कर्म गर्दछ र प्रकृतिकै तीन गुणहरू (सत्व, रज, तम) को उपभोग र उपयोग गर्दै आफ्नो जीवन यात्रा सम्पन्न गर्दछ ।

परमात्मा आत्मा रूपले सम्पूर्ण जीवको शरीरभित्र रहेर त्यसलाई हेरिरहेको हुन्छ । संसारप्रतिको मोह र आशक्तिले गर्दा नै मानिसले

विभिन्न शरीर धारण गरिरहन्छ अर्थात् ऊ जन्म र मृत्युको अनन्त चक्करमा घुमिरहन्छ। जसले जीव, प्रकृति र त्यसको गुणलाई बुझेको जानेको हुन्छ त्यस्तो व्यक्तिले पुर्नजन्मको चक्कर काटिरहनुपर्दैन। ध्यान, ज्ञान र भक्ति यी तीन मुख्य माध्यम हुन् ईश्वर प्राप्तिको लागि। आध्यात्मिक ज्ञान नभए पनि यदि कोही व्यक्ति अरुले सुनाएको पुराण, प्रवचन, कथा आदि सुनेर ईश्वरको पूजा अर्चना र आराधना गर्दछ भने त्यस्तो व्यक्तिले पनि मुक्ति प्राप्त गर्न सक्दछ।

**यावत्संजायते किंचित्सत्व स्थावरजङ्गमम्।**
**क्षेत्रक्षेत्रज्ञसंयोगात्तद्विद्धि भरतर्षभ॥ (१३-२६)**

यस संसारमा देखिने चराचर सम्पूर्ण जीवहरू सिर्फ क्षेत्र र क्षेत्रज्ञ (भौतिक प्रकृति र पराप्रकृति) को संयोग मात्र हो। जसले सबै जीवमा परमात्माको स्वरूप देख्दछ अर्थात् आत्मा र परमात्मा एउटै देख्दछ र अमर देख्दछ त्यसले नै वास्तविकतालाई देखेको हुन्छ। सबै जीवात्मामा परमात्मा देख्ने व्यक्ति ज्ञानी हुन्छ र उसको मन सधैं परमात्मातिर लागिरहेको हुन्छ त्यस्ता व्यक्तिबाट कुकर्म हुन सक्दैन त्यसैले ऊ भगवानको प्रिय बन्दछ र उसले मृत्यु पश्चात परंधाम प्राप्त गर्दछ।

**प्रकृत्यैव च कर्माणी, कियामाणानि सर्वशः।**
**यःपश्चति तथात्मानमकर्तारं स पश्चतिः॥ (१३-२९)**

श्रीकृष्ण भन्नुहुन्छ- हे अर्जुन ! जो व्यक्तिले प्रकृतिलाई कर्ता र आत्मालाई अकर्ता मान्दछ र बुझ्दछ त्यो ज्ञानी व्यक्तिले सबै जीवात्मालाई सम देख्दछ र सबैमा समभाव राख्दछ। आत्मा सधैं शाश्वत, नित्य, अविनाशी र भौतिक गुणहरूभन्दा पर छ। जस्तै वायु, आकाशमा सर्वव्यापक भएर पनि त्यसमा लिप्त छैन त्यस्तै शरीरभित्र रहेर पनि यो आत्मा न केही गर्दछ न कुनै कुरामा आशक्त छ। भौतिक शरीरबाट भएका र गरिएका क्रियाहरूबाट ऊ प्रभावित हुँदैन।

**यथाप्रकाशयत्येक कृत्स्नं लोकमिमं रविः।**
**क्षेत्र क्षेत्री तथा कृत्स्न प्रकाशयतिं भारत॥ (१३-३३)**

एउटै सूर्यले सम्पूर्ण जगतलाई प्रकाशित गरेझैं एउटै आत्माले चेतनाद्वारा सम्पूर्ण शरीरलाई प्रकाशित र क्रियाशील गरिरहेको हुन्छ। चेतना नै आत्माको शरीरमा उपस्थित रहेको प्रमाण हो। जसले तत्व ज्ञानद्वारा शरीर र आत्माको भिन्नतालाई बुझेको छ र जसले यो भवसागर पार गर्ने सही बाटो पैलाउन सकेको छ त्यो व्यक्तिले नै मोक्ष प्राप्त गर्न सक्दछ।

**"सहनशील अघमण्डी जो, हितैषी र विनम्र छ।**
**नरम मिठो बोली जस्को, गुरुभक्ति अनन्य छ॥**
**दु:ख नदिने कसैलाई, क्षमा धीर सरल छ॥।**
**मन इन्द्रिय वश गर्ने, ज्ञानी पुरुष बन्दछ॥॥"**

# चौधौं अध्याय

गीताको चौधौं अध्यायमा श्रीकृष्णले अर्जुनलाई प्रकृतिका तीन गुणहरूका विषयमा जानकारी दिनुभएको छ। सत्व, रजो, तमो यि तीन गुणहरूको विभाग सहितको व्याख्या गरिएको हुनाले यस अध्यायको नाम पनि गुणत्रय विभाग योग राखिएको छ। यसभन्दा अघिको तेह्रौं अध्यायमा उहाँले ज्ञानको विषयमा प्रकाश पार्दै ज्ञानबाट भक्ति प्राप्त हुने र भक्तिबाट मुक्ति मिल्छ भन्ने कुरा दर्साउँदै ज्ञान प्राप्त गर्नमा जोड दिनुभएको थियो। प्रकृतिको गुणहरूको सम्पर्कले गर्दा जीवात्मा यस संसारी मायामोहको जालमा फँसेको हुन्छ र जन्म मृत्युको चक्करमा परी ८४ लाख जुनी भोग्न बाध्य हुन्छ। प्रकृतिका तीन गुणहरूको विषयमा प्रकाश पार्दै श्रीकृष्णले ती गुणहरू केकस्ता छन् र तिनले मानिसलाई के कस्तो अवस्थामा पुऱ्याउँछ भन्ने कुराको जानकारी यस अध्यायमा गराउनुभएको छ। प्रकृतिको गुणहरूको विषयको ज्ञानलाई माथि उल्लेख गरिएका सबै प्रकारका ज्ञानभन्दा श्रेष्ठ मानिएको छ। यही ज्ञानको माध्यमबाट जीवात्मा यस भवसागरबाट पार भई ब्रह्मधाममा पुग्न र सदाको लागि मुक्ति पाउन सक्दछ। जसले संसारी मायामोहबाट मुक्त भई दिव्य ज्ञान प्राप्त गर्दछ उसले संसारी दुःखकष्टबाट छुटकारा पाई ईश्वरको सामीप्य प्राप्त गर्दछ। ईश्वरको सामीप्यमा पुगेको व्यक्ति यस भौतिक जगतका सबै प्रकारका प्रभावबाट मुक्त भई दैवी आनन्दमा रमाउँदछ।

**मम योनिर्महद्ब्रह्म तास्मिनगर्भं दधाम्यहम्।**
**संभवः सर्वभुतानां ततो भवति भारत ॥ (१४-३)**

हे अर्जुन ! मेरो ब्रह्मस्वरूप प्रकृति सबै जीवहरूको गर्भाशय हो। जसमा म गर्भलाई स्थापित गरिदिन्छु जुन चेतनशील जीवको अंश हो। उक्त जड र चेतनको संयोगबाट नयाँ जीव उत्पति हुन्छ। यस जगतमा क्षेत्र र क्षेत्रज्ञ अर्थात् शरीर र आत्माको संयोगबाट

सबै कुरा चलेको छ। परा र अपरा अर्थात् भौतिक तथा दैविक वा जड तथा चेतनाको मिलनबाट सम्पूर्ण जीवात्माको उत्पति हुन्छ। परब्रह्म परमेश्वरले भौतिक प्रकृतिको गर्भमा बिजारोपण गरिदिनुहुन्छ जसबाट जीवात्माको जन्म हुन पुग्दछ। जीवात्माको आफ्नो पूर्वजन्मको कर्मअनुसार उसको स्वभाव निर्माण हुन्छ।

**सत्वंरजस्तमं इति गुणा प्रकृतिसंभवा।**
**निबन्धन्ति महाबाहो देहे देहिनमव्ययम्॥ (१४-५)**

सत्व, रज, तमो यी तीन गुण प्रकृतिबाटै उत्पन्न भएका हुन्। जसले जीवात्मालाई शरीरसँग जोडेको हुन्छ। प्रकृतिकै गुणअनुरूप जीवात्माले कर्म गर्दछ र सो कर्म नै उसको सुखदुखको कारण बन्न पुग्दछ। सत्व गुणी व्यक्तिबाट हत्तपति पाप कर्म हुँदैन। ऊ पवित्र र आध्यात्मिक हुन्छ र आफ्नो सत्कर्मको कारणले सुखी र खुसी रहन्छ। तर पनि ऊ पूर्वजन्मको कर्मअनुसार गुण र सोअनुसारको शरीर र स्वभाव लिएर तदनुरूप कर्म गर्दछ र आफ्नो कर्मअनुसार जन्ममृत्युको चक्करमा परिरहन्छ र त्यसैमा रमाइरहेको हुन्छ। संसारी माया र मोहको कारण र त्यसको कारणबाट मानिसको मनमा इच्छा र तृष्णा पैदा हुन्छ र ती इच्छा र तृष्णाकै कारण ऊ संसारी बन्धनमा बाँधिन पुग्दछ। रजोगुणी मानिसले आफ्नो इन्द्रिय तृप्ति गर्नको लागि विभिन्न कर्महरू गर्दछ र भौतिक उन्नतिलाई आफ्नो विकास र उन्नति सम्भन्छ। अज्ञानताबाट तमोगुण पैदा हुन्छ जसलाई संसारी मोह भनिन्छ। तमोगुणी मानिस अल्छी, तामसी, निन्द्रालु र निष्कृय हुन्छ। तमोगुणीमा ज्ञानको अभाव हुन्छ। ऊ ठिक बेठिक, सत्असत्लाई छुट्याउन सक्दैन। सतोगुणी मानिस सन्तोषी र आध्यात्मिक सुखमा रमाउँछ भने रजोगुणी भौतिक सुख र उन्नतिको लागि सकाम कर्म गर्नमा नै व्यस्त रहन्छ। उता तमोगुणी मानिस अज्ञानता र विवेकहीनताले गर्दा निष्कृय, अल्छी र अर्कालाई दुःखकष्ट दिने खालको हुन्छ।

**सत्वं सुखे सञ्जयति रजः कर्मणी भारत ।**
**ज्ञानमावृत्य तु तमः प्रमादे सञ्जयत्युत ॥ (१४-९)**

सत्वगुणले मानिसलाई सुख प्रदान गर्दछ भने रजोगुणले उसलाई कर्ममा क्रियाशील तुल्याउँछ र तमोगुणले ज्ञानलाई ढाकिदिन्छ र नचाहिँदो कार्य गर्न अग्रसर तुल्याउँछ । मानिसको जीवनमा माथि उल्लेख गरिएका तीन गुणहरू जस्तै सत्व, रज र तमहरूले एकापसमा स्पर्धा गरिरहेको हुन्छ । जब मानिसमा सत्व गुण बढी हुन्छ त्यसबेला उसमा रजो र तमो गुण निष्कृय बन्न पुगेको हुन्छ । जब मानिसमा रजोगुण बढी हुन्छ तब उसमा सत्वो र तमोगुण दबिएर रहन्छ र तमोगुण बढी भएको अवस्थामा सत्व र रजोगुण निष्कृय बन्न पुग्दछ । यदि मानिसले आफूलाई यी तीन गुणहरूमध्ये कुन गुणले बढी प्रभावित पारेको छ त्यो बुझ्न चाहेमा सो पत्ता लगाउन सकिन्छ । जब मानिसको शरीर र इन्द्रियमा ज्ञान र विवेकले काम गर्न थाल्दछ तब हामीले बुझ्नु पर्दछ कि उसमा सत्व गुणको विकास हुन थालेको छ । किनकि ज्ञान र विवेकद्वारा नै सत्‌असत्, राम्रो र नराम्रोलाई छुट्याउन र ठम्याउन सकिन्छ । रजोगुण बढेको बेला मानिसमा मायामोह आशक्ति र सकाम कर्म र फल इच्छाका प्रकृतिहरू तीव्र रूपले बढेको हुन्छ र उसले यस शरीर, भौतिक जगत र नातासम्बन्धीहरूलाई मेरो, आफ्नो र नित्य सम्झेको हुन्छ । यस्तो रजोगुणी सधैं आफ्नो भौतिक अर्थात् देहजन्य इच्छा आकांक्षा पूरा गर्नकै लागि हरदम क्रियाशील अर्थात् कर्म गरिरहेको हुन्छ र सो उसले गर्नुपर्ने नै हुन्छ । तर तमोगुणीहरू भने कुनै निश्चित उद्देश्य प्राप्तिको लागि कर्म नगरी जुनबेला मनमा जे आयो त्यही गर्ने हुन्छन् । अज्ञान, क्रोध, लालच र मोहजस्ता गुणहरू तमोगुणी मानिसमा धेरै मात्रामा रहेको हुन्छ । सतोगुणी मानिसले रजोगुण र तमोगुणभन्दा माथि उठेर शुद्ध पवित्र र लोककल्याणको हिसाबले कार्य गरेको हुन्छ जसले गर्दा ऊ यस लोकमा सम्मानित र सार्थक जीवन बाँच्छ र मरेपछि ब्रह्मलोक प्राप्त गर्दछ । रजोगुणी मानिसले सुख, शान्ति र आनन्दको इच्छा राख्नु व्यर्थ हो ।

उसले यस जन्ममा चिन्ता, भय र दौडधुपमा आफ्नो जीवन बिताएको हुन्छ र मरेपछि अर्को जन्ममा पनि ऊ सकामकर्मी भएरै जन्मन पुग्दछ। त्यसैगरी तमोगुणी मानिस यस जन्ममा लोभी, क्रोधी, पापी र अन्यायी भएर बाँचेको हुन्छ र मरेपछि ऊ फेरि पशुपक्षी जस्ता नीच जुनीमा जन्मलिन पुग्दछ।

**सत्वात्संजायते ज्ञानं रजसो लोभ एव च।**
**प्रभादमोहौ तमसो भवतो ऽज्ञानमेवच॥ (१४-१७)**

सत्वगुणले ज्ञान उत्पन्न गर्दछ भने रजोगुणले लोभ, इच्छा र आकांक्षाहरू पैदा गर्दछ। त्यसैगरी, तमोगुणले मोह उत्पन्न गरिदिन्छ र मोहले अज्ञानता निम्त्याउँछ र अज्ञानीबाट सधैं आफ्नो र अर्काको अहित हुने कार्य हुन्छ।

सत्य कर्मको फल सधैं सुखदायी हुन्छ भने राजसी कर्मको फल दुखदायी र तामसी कर्मको फल अशुभ र अनिष्टकारी हुन्छ। सतगुणबाट ज्ञान र विवेक प्राप्त हुन्छ भने रजोगुणबाट लोभ, मोह र तमोगुणबाट क्रोध, इर्ष्या र अज्ञानता प्राप्त हुन्छ। पशुपंक्षीको जुनीमा जन्मेको जीवले मानिस जुनी प्राप्त गर्न उसले जन्म मृत्युको लामो चक्कर पार गर्नु पर्दछ। पशुपक्षि जुनीबाट मानिस जुनीमा आउन उसले धेरै जन्मसम्म आफूमा सत्‌गुणको विकास गर्नुपर्छ र सो भएपछि मात्र जीवमा ज्ञान, विवेक र सही कुरा पहिल्याउन सक्ने क्षमताको विकास हुन्छ। आजका मानिसहरूमा अज्ञानताले गर्दा तथ्य र सत्य कुराको पहिचान गर्ने क्षमताको कमी देखिन्छ त्यसैले गर्दा समाजमा अनेकौं हत्या, हिंसा, लुटपाट र अन्याय, अत्याचार बढेको छ। यस संसारमा जेजति कर्म गरिन्छ अर्थात् ती कर्म गर्ने कर्ताहरू छन् ती सबै प्रकृतिका यी तीन (३) गुणहरूबाट संचालित छन्। भगवान यी तीन (३) गुणबाट पर रहेका अकर्ता हुन् भनी जस्ले जान्दछ त्यस्लेनै भगवतधाम प्राप्त गर्दछ अर्थात् मुक्ति प्राप्त गर्दछ। देहजन्य यी तीन (३) गुणबाट जसले आफूलाई मुक्त राख्न सक्दछ त्यो नै संसारी

जन्ममृत्यु रोग आदि तापबाट मुक्त भई अमर बन्दछ।

प्रकृतिका तीन गुणलाई नाँघ्न सक्ने व्यक्तिको लक्षण र सो प्राप्तिको उपायबारे स्पष्ट पार्दै श्रीकृष्ण भन्नुहुन्छ- हे साथी ! जो आशक्ति र मोहरहित छ, जो कोहीप्रति न द्वेष न घृणा राख्दछ, जो सुखदुःख, लाभहानी, निन्दास्तुति, धननिर्धन, प्रतिकूलअनुकूल आदि सबै अवस्थामा सम रहन्छ, जो समदर्शी र धैर्य छ जो शत्रु मित्रलाई समान व्यवहार गर्दछ, भौतिक क्रियाकलापबाट र प्रकृतिका तीन गुणको प्रतिक्रियाबाट आफू प्रभावित हुँदैन त्यस्तो व्यक्तिलाई प्रकृतिको तीन गुणदेखि पर रहेको भन्नुपर्दछ र त्यस्तो व्यक्ति नै गुणतीत कहलाइन्छ।

**मानापमानयोस्तुल्यस्तुल्यो मित्रारिपक्षयोः।**
**सर्वारम्यपरित्यागि, गुणातीतः स उच्चते॥ (१४-२५)**

भगवानको शरणागत हुने व्यक्तिले नै प्रकृतिका ती ३ गुणहरूबाट आफूलाई प्रभावित तुल्याउँदैन अर्थात् अप्रभावित राख्न सक्दछ। त्यस्तो व्यक्ति आफू जे गर्छ त्यो आफ्नो लागि होइन अरुको लागि गरेको हुन्छ र उसबाट जे जस्तो कर्म हुन्छ त्यो ईश्वरबाट गराइएको ठान्दछ। भक्तियोगद्वारा जो ईश्वरलाई भज्दछ त्यो नै प्रकृतिका तीन गुणभन्दा पर आफूलाई राखी ब्रह्मलोक पुग्न सफल बन्दछ। श्रीकृष्ण भन्नुहुन्छ- हे पार्थ ! म अविनाशी, अमर, नित्य र परमआनन्दको आधार हुँ। निराकार अखण्ड ब्रह्मको स्रोत पनि म नै हुँ। जीवात्मा ब्रह्मको एक अंश भएर पनि भौतिक संसारको मोह र आशक्तिले गर्दा ऊ ब्रह्मत्व प्राप्ति मार्गबाट टाढा रहेको छ। यदि जीवात्मा प्रकृतिको तीन गुणको प्रभावबाट अलग रहन्छ भने उसले ब्रह्मत्व प्राप्त गर्न सक्दछ। यसरी यस चौधौं अध्यायमा श्रीकृष्णले अर्जुनलाई प्रकृतिका तीन गुणमाथि विजय पाउने व्यक्तिको लक्षण र स्वभावबारे व्याख्या गरी अकर्ताको भावअनुसार कर्म गर्न अर्जुनलाई प्रेरित गर्नु भएको छ।

**"ज्ञान मिल्छ सतोगुणले, रजोले लोभ जन्मिन्छ।**
**अज्ञान मोह पागलता, तमोगुणले ल्याउँछ॥"**

# पन्ध्रौं अध्याय

यस अध्यायमा माथि उल्लेख भएका बेद र बेदज्ञका विषयलाई स्पष्ट पार्दै पुरुषोत्तम तत्व नै सबैभन्दा उत्तम र उत्कृष्ट तत्व हो, जुन तत्वलाई बुझ्रेपछि र जानेपछि संसारका अरु कुनै तत्वको विषयमा जान्नु आवश्यक नपर्ने कुरामाथि प्रकाश पारिएको छ। सबै भन्दा उत्तम पूरुष पुरुषोत्तमको विषय र त्यस्लाई प्राप्त गर्ने उपायका विषयमा व्याख्या गरिएको हुनाले यस अध्यायको नाम पुरुषोत्तम योग रहन गएको हो। श्रीकृष्णले अर्जुनलाई बेद र बेदज्ञका विषयमा बुझ्राउन यस भौतिक संसारलाई एउटा पिपलको रूखसँग तुलना गर्दै भन्नुहुन्छ- हे पार्थ ! यो संसाररूपी पिपलको रूखको जराहरू र यसको फेद माथितिर र पात हाँगाबिगाहरू तलतिर छन्। वास्तविक पिपलको रूखका जराहरू तल र हाँगाबिंगाहरू माथि हुन्छन्, त्यो नै वास्तविक आध्यात्मिक जगत हो तर भौतिक जगतरूपी रूख ठिक त्यसको उल्टो त्यसका जराहरू माथि र हाँगाबिंगाहरू तलतर्फ गडिएर फैलिएर रहेका छन्। यी हाँगाबिंगामा उम्रिएका पातहरू वैदिक ऋचाहरूले सुसज्जित छन्। यो भौतिक जगत आध्यात्मिक जगतको प्रतिबिम्ब हो जो उल्टो भएर उभिएको छ। प्रतिबिम्ब नश्वर, अनित्य हुन्छ भने मूलस्वरूप अर्थात् आध्यात्मिक जगत शाश्वत र नित्य छ। जसले यो भौतिक जगतको नश्वरता र आध्यात्मिक जगतको शाश्वततालाई बुझ्रेको र जानेको छ त्यो नै बेदज्ञ कहलाइन्छ। जो वास्तविक जगतलाई नबुझ्री संसारी वृक्ष (उल्टो) को हाँगाबिंगाप्रति आकर्षित हुन्छ अर्थात् वेदका कर्मकाण्डतर्फ मात्र आकर्षित हुन्छ, त्यस्तो व्यक्तिले वेदको मर्मलाई बुझ्रेको हुँदैन। वेदको खास उद्देश्य वास्तविक आध्यात्म जगतलाई चिन्नु र चिनाउनु नै हो।

जराहरू माथि र पात हाँगाबिंगाहरू तल फैलिएको यो उल्टो पिपलको रूखको वर्णन गर्दै यहाँ सांकेतिक रूपले यो भन्न खोजिएको

छ कि ब्रह्मलोक जहाँ सृष्टिको मूल कर्ता बस्नु हुन्छ र त्यहीबाट सृष्टिको विस्तार हुन्छ। तलतर्फ फैलिएको त्यो रूखको हाँगाबिँगाहरूले यो भौतिक संसार अर्थात् मनुष्य लोकलाई संकेत गरेको छ, जसलाई वेदका ऋचाहरूरूपी पातहरूले ढाकेको छ। यिनै वेदका ऋचाहरूद्वारा निर्देशित कर्मकाण्डमा मानिसहरू अल्झिएका छन् र त्यसैमा अल्झिएर मानिसहरू चौरासीको चक्कर लगाइरहन्छन्। भौतिक संसाररूपी यो रूख ईश्वरको मायाको विस्तार हो भन्ने तथ्यलाई जान्ने र बुझ्ने व्यक्ति नै वेदज्ञ कहलाइन्छ।

भौतिक जगतरूपी यस पिपलको रूखको पोषण तगा सम्बर्द्धन प्रकृतिका तीन गुण (सत्व, रज, तम) हरूबाट भइरहेको छ। प्रकृतिका यिनै गुणहरूको प्रभावअनुसार जीवहरूमा विभिन्न प्रकारका विषय भोगजन्य इच्छा र क्रियाहरू उत्पन्न हुन्छन् र त्यसलाई इन्द्रियहरूले ग्रहण गर्दछन्। इन्द्रियका विषयहरू यस रूखका हाँगाबिँगाझैं जताततै अर्थात् स्वर्गलोक, मर्त्यलोकमा फैलिएर रहेको छ। यस कर्मक्षेत्रमा रहेर मानिसले सकाम कर्मद्वारा धर्मअधर्म, सत्यअसत्यको अनेक क्रियाकलाप (कर्महरू) सम्पन्न गर्दछन् र सोही कर्मको फलअनुसार उनीहरू स्वर्गलोक र मर्त्यलोकको भोग गर्दछन्। यिनमा संसाररूपी यो माया रूखको जराहरू, हाँगाबिँगाहरू मानवलोक अर्थात् यो भौतिक संसारमा यसरी फैलिएको छ कि त्यसको आदि, अन्त र स्थिति पैल्याउन पनि गाह्रो पर्दछ। यसरी गाँजिएर र फैलिएर रहेका यसका जरा र हाँगाबिँगालाई पन्छाउन र सही रूप पहिल्याउनको लागि वैराग्यरूपी ज्यादै बलियो हतियार नै प्रयोग गर्नुपर्ने हुन्छ। यस रूखको मूल जरो पत्ता लगाउन उसले सृष्टिकर्ता ब्रह्मासम्म पुग्नुपर्ने हुन्छ र अझ त्योभन्दा पर ब्रह्माको पनि मूलस्रोत परब्रह्मसम्म पुग्नु आवश्यक पर्दछ।

ज्ञानबिना वैराग्य प्राप्त हुँदैन। ज्ञान र वैराग्यबाट यो सम्पूर्ण सृष्टिका आधार श्री परमब्रह्म परमेश्वरलाई चिन्न सकिन्छ। परमधाम र परमब्रह्म परमेश्वरलाई बुझ्न र त्यहाँ पुग्नका

लागि मानिसले उनै परमेश्वरको शरणमा पर्नुपर्दछ र त्यहाँ पुग्नका लागि आवश्यक योग्यता हासिल गर्नुपर्दछ। यस्तो परमेश्वरलाई बुझ्न र जान्न त्यो व्यक्ति नै योग्य हुन्छ, जो आफूलाई झुठो मान, मर्यादा र मोहबाट अलग राख्न सक्दछ, जो अहंकार र आशक्तिरहित छ, जो संसारी वासना र इच्छाबाट आफूलाई मुक्त गर्दछ, जो संसारी सुखदुःख र द्वन्द्वबाट आफूलाई पर राख्दछ, र जो परमेश्वरमा सदा शरणगत हुन्छ। माथि उल्लेखित योग्यता हासिल गरेको व्यक्ति नै परमधाम पुग्न योग्य बन्दछ। यसरी ईश्वरधाम पुगेको व्यक्तिले जन्ममृत्युको चक्करबाट सदा मुक्ति पाउँछ।

यो भौतिक अन्धकारमय जगतमा रहुन्जेल जीव बाँधिएर रहेको हुन्छ उसले केही कुरा जान्न देख्न सक्दैन। जब माथि उल्लेखित योग्यताद्वारा दिव्य प्रकाशमय ब्रह्मधाम पुग्दछ त्यसपछि मात्र उसले सच्चिदानन्द स्वरूप धारण गर्न र सोहीअनुरूपको जीवन बाँच्न पाउँछ। त्यो परमब्रह्मधाम यति प्रकाशमय छ कि त्यसलाई सूर्य, चन्द्र, अग्नि आदि कसैको प्रकाश वा तेजको आवश्यकता पर्दैन। त्यो स्वयं प्रकाशपुञ्ज छ।

जीवको स्वरूपबारे श्रीकृष्ण अर्जुनलाई सम्झाउँदै भन्नुहुन्छ- हे पार्थ ! सबै जीवमा रहने जीवात्मा मेरै सनातन अंश हो। आफ्नै मनको कारणले गर्दा यस भौतिक जगतमा जीवले बन्धनमय जीवन बाँचेको हुन्छ।

**ममैवांशो जीवलोके जीवभूतः सनातन।**
**मनषष्ठानीन्द्रियाणि प्रकृतिस्थानिं कर्षति॥** (१५-७)

प्रत्येक शरीरमा रहेको जीवात्मा मेरो नै अंश हुन जसले हाम्रो इन्द्रिय तथा मनलाई आकर्षित र क्रियाशील तुल्याइरहेको हुन्छ। प्रकृतिका तीन गुण (सत्व, रज, तम) अनुसार जीवहरू प्रभावित भएर तदनुरूप स्वभाव ग्रहण गर्दछन् र तदनुरूप कर्म वा आचरण गरेका

हुन्छन्। परब्रह्म परमात्माको अंशी भएको त्यस जीवले आफ्नो सत्कर्मकै आधारमा यस भौतिक जगतको बन्धनबाट मुक्त भई ब्रह्मधाममा पुगेर अंशीको रूप अर्थात् परब्रह्मकै रूप धारण गर्न पुग्दछ। हावाले गन्धलाई आफ्नो साथमा लिएर हिँडेझैं हाम्रो शरीरभित्र रहेको जीवात्माले यो शरीरलाई त्यागेर आफ्नो मन र इन्द्रियसहित अर्को शरीरमा प्रवेश गर्दछ र तिनै मनइन्द्रियद्वारा उसले विषयलाई भोग्दछ। जीवात्मा यो भौतिक शरीरको नियन्त्रक हो र उसले चाह्यो भने यस भौतिक शरीरबाट सधैंको लागि छुट्कारा लिएर जन्ममृत्युको चक्करबाट मुक्त भई परब्रह्मको रूप धारण गर्न सक्दछ। यो भौतिक शरीरले गरेका कर्मअनुसार उसले अर्को जुनी प्राप्त गर्दछ। जीवात्मा एक शरीर छाडेर अर्को शरीरमा देहान्तरण अर्थात् स्थानान्तरण मात्र हुन्छ त्यो नाँसिदैन र मर्दैन पनि। आफ्नो कर्मअनुसार जीवले शरीर धारण गर्दछ र समय आइपुगेपछि त्यसलाई त्याग्दछ र यो जन्ममृत्युको काम जीवात्माले मुक्ति प्राप्त नगरुन्जेल चलिनै रहन्छ। यो कुरालाई मूर्ख अज्ञानीहरूले बुझ्न सक्दैनन्। प्रकृतिको गुणअनुसार जीवले शरीर धारण गर्ने र सोही गुणअनुरूप उसले कर्म गर्ने कुरालाई पनि अज्ञानीले बुझेको हुँदैन। तर, जो तत्व ज्ञानी हुन्छ, त्यसले आफ्नो ज्ञानचक्षुद्वारा त्यो सबै देख्न सक्दछ र बुझ्न सक्दछ। आत्मा साक्षात्कार गरेको व्यक्ति तत्व ज्ञानी बन्न सक्दछ। मन अपवित्र भएको व्यक्तिले आत्मसाक्षात्कार गर्न सक्दैन। आत्मालाई नचिनेर बाहिर मात्र ज्ञानी, ध्यानी र योगीको ढोंग गरी बस्ने व्यक्तिले आत्मा र शरीरको सम्बन्ध र त्यसको प्रकृया आदि केही बुझेको हुँदैन।

**यदादित्यगतं तेजो जगद्भासयतेऽखिलम्।**
**यच्चन्द्रमसि यच्चाग्नौ तत्तेजो विद्धि मामकम्॥ (१५-१२)**

परमेश्वर सर्वव्यापक सर्वशक्तिमान र प्रकाशमय हुनुहुन्छ। सृष्टिका स्रोत उहाँमा सृष्टिका यावत कुराहरू स्थित छन्। यस

कुरामाथि प्रकाश पार्दै श्रीकृष्ण भन्नुहुन्छ- हे अर्जुन ! सूर्यको तेजिलो प्रकाश, चन्द्रमाको शीतल किरण, आगोको रापिलो तेज सबै मबाट नै उत्पन्न भएका छन्। परमेश्वरको शक्तिबाट उत्पन्न ती प्रकाश, किरण र तेजबिना संसारी क्रियाकलाप सम्भव छैन। त्यसैबाट जीवको पोषण, सम्वर्धन र संरक्षण भएको छ। यी सबैका मूलस्रोत परमेश्वर हुन् भन्ने कुरा जानेपछि मानिसहरू स्वभाविक रूपले परमेश्वरको कृपा प्राप्त गर्न आकर्षित हुन्छन्। हाम्रो जीव देहमा रहेका अङ्गप्रत्यङ्ग र इन्द्रियादि सबै परमेश्वरकै शक्तिले चलेका छन्।

**अहं वैश्वानरो भूत्वा प्राणीनां देहमाश्रितः।**
**प्राणअपानसमायुक्त पचाम्यन्नं चतुर्विधम्॥ (१५-१४)**

सम्पूर्ण जीवको शरीरमा रहने पाचन अग्नि प्राण अपानवायु उनै परमात्माको शक्ति हो, जसले खाएको खानेकुरालाई पचाइदिन्छ। परमेश्वरकै शक्तिबाट भूमण्डलमा अन्नको उत्पादन हुन्छ र उहाँकै शक्तिबाट यो शरीरभित्र रहेको अङ्ग, प्रत्यङ्ग, नसानाडी आदिले आ-आफ्नो कार्य गरिरहेको छ। प्रत्येक जीवको हृदयमा बस्ने अर्न्तयामी परमेश्वरबाट यस संसारका सबै कामहरू चल्ने गर्दछ। मानिसले उहाँकै कृपाबाट ज्ञान, बुद्धि, स्मृति, बिस्मृति प्राप्त गर्दछ। उहाँ सबै कुराको ज्ञाता हुनुहुन्छ। उहाँलाई जान्न र चिन्नको लागि वेदस्वरूप उहाँकै आराधना गर्नुपर्दछ। उहाँकै कृपाबाट जो कोही पनि वेदज्ञ बन्न सक्दछ। अर्न्तयामी परमेश्वर साक्षीस्वरूप भई सबैको हृदयमा बसेर सबैलाई कार्यकर्म गराउनुहुन्छ तर सो कर्मको फलबाट उहाँ बिल्कुल अलग रहनुहुन्छ अर्थात् कर्मफलबाट उहाँ प्रभावित बन्नुहुन्न।

**द्वाविमौ पुरुषौ लोके, क्षरश्चाक्षर एव च।**
**क्षरः सर्वाणी भूतानि कुटस्थोऽक्षर उच्चते॥ (१५-१६)**

यस संसारमा जीवहरू दुई प्रकारका हुन्छन्- एक नित्य, जो कहिल्यै नाश हुँदैनन् र अर्को अनित्य अर्थात् नाशवान्। भौतिक

जगतका जीवहरू नाशवान छन् भने आध्यात्म जगतका जीवहरू अमर छन् । अर्थात् परमात्मासँग जोडिएका जीवात्मा सदा, नित्य, शाश्वत र अमर हुन्छ भने उहाँबाट विमुख हुने जीवात्मा अनित्य र नाशवान हुन्छ। ती दुवै जीवहरूभन्दा पर अर्को महाजीव अर्थात् परमआत्मा पुरुषोत्तम हुनुहुन्छ जो सर्वश्रेष्ठ, सर्वव्यापक र सर्वशक्तिमान हुनुहुन्छ, जसले तिनै लोकका प्राणीहरूको पालन र सञ्चालन गर्नुभएको छ । श्रीकृष्ण अर्जुनलाई भन्नुहुन्छ- हे पार्थ ! यसरी जसले मलाई सर्व शक्तिमान परमेश्वर मानेर श्रद्धा, विश्वास र भक्तिपूर्वक भज्दछ, पूज्दछ त्यस्तो व्यक्ति ज्ञानी ठहरिन्छ र त्यो नै मेरो परमधाम पुग्न सफल हुन्छ।

यसअघि कसैलाई नबताएको गुह्य ज्ञानको कुरा मैले तिमीलाई बताएको छु भन्दै श्रीकृष्ण अर्जुनलाई भन्नुहुन्छ- हे पार्थ ! सबै शास्त्रको सार यस आध्यात्मिक ज्ञानलाई जसले बुझेर तदनुरूप कर्म गर्दछ त्यो नै योगी, ज्ञानी र बुद्धिमान हो । भक्तिबिना ज्ञान हुँदैन र ज्ञानबिना सत्असत् छुट्याउन सकिँदैन । भक्तिमा लागेको व्यक्तिको मन शुद्ध र निष्पाप हुन्छ यस्तो मन भएको व्यक्तिमा नै प्रेमाभक्तिको उदय हुन्छ र सोबाट ईश्वरको सामीप्य प्राप्त गर्न सकिन्छ।

**"प्राणीको मनमा बस्ने, अन्तर्यामी त्यो तत्व म ।**
**सम्झनु, बिर्सनु, जान्नु, त्यसको उत्पति स्रोत म ॥**
**वेदद्वारा जानिन योग्य, ब्रह्म तत्व त्यो ज्ञान म ॥।**
**समस्त ज्ञानलाई जान्ने, सर्वज्ञ त्यो पनि हुँ म ॥॥"**

# सोह्रौं अध्याय

यो अध्यायमा दैवी र आसुरी गुणले युक्त मानिसका स्वभाव, विचार र कर्महरूबारे व्याख्या गरिएको छ। यसअघिका अध्यायहरूमा पनि सत्व, रज र तम गुणका विषयमा विस्तृत रूपले चर्चा भएको छ। दैवीस्वभाव र आसुरी स्वभावका मानिसहरूबाट हुने क्रियाकलापहरू उनीहरूभित्र रहेको दैवी गुण र आसुरी गुणका प्रभावबाट प्रेरित भएर गरिएको हुन्छ। सत्वगुणी अर्थात् दैवीगुणले युक्त भएको मानिस आध्यात्मिक मार्गतर्फ लागेर आफ्नो जीवनलाई धन्य बनाउँछ भने तमोगुणी अर्थात् आसुरी गुणले युक्त व्यक्ति पापी, लोभी, क्रोधी, अन्यायी र अत्याचारी हुने भएकाले उसले आफू र समाज दुवैको कुभलो गरेर नारकीय जीवन व्यतीत गरेको हुन्छ र त्यस्तो मानिस अनन्त कालसम्म जन्ममृत्युको चक्करमा रुमल्लिरहन्छ। दैवीगुणले सम्पन्न मानिसको स्वभावबारे श्रीकृष्ण भन्नुहुन्छ- हे भारत !

**अहिंसा सत्यमक्रोधस्त्यागः शान्तिरपैशुनम।**
**दया भूतेष्वलोलुप्तं मार्दवं ह्रीरचापलम्॥** (१६-२)

मन, वचन र कर्मले कसैलाई कुनै प्रकारले दुःखकष्ट नदिने, आफ्नो कुभलो गर्नेको पनि कुभलो नचाहने, कसैसँग रिस, राग र द्वेष नगर्ने, अहंकाररहित, देवपितृ र समाजको विरुद्ध आचरण नगर्ने व्यक्तिलाई सत्वगुणी व्यक्ति भन्नुपर्दछ। दैवीगुण सम्पन्न व्यक्ति त्यो हुन्छ जो निर्भिक छ, जो कोहीसँग डराउँदैन, जो ईश्वर सधैं आफ्नो साथमा छन् भन्ने विश्वास राख्दछ र निर्भिक भई आफ्नो कर्तव्य कर्ममा लागिरहन्छ। जो व्यक्तिको आत्मा शुद्ध छ अर्थात् सत्वसंशुद्धिको गुण जसमा छ र जो आफ्नो वर्णधर्मानुसार शुद्ध आचरणको अनुयायी छ, जो ज्ञानको अनुशीलन गर्दछ, जो दानशील छ र आफूसँग भएको धन सम्पत्तिबाट अरुको सेवा

सहयोग गर्दछ, त्यस्तो व्यक्तिलाई सत्वगुणले युक्त व्यक्ति भनिन्छ। यसै सन्दर्भमा श्रीकृष्ण अर्जुनलाई सम्झाउनुहुन्छ, दान सुपात्रलाई दिनुपर्दछ। कुपात्रलाई दिएको दानले दिने र लिने दुवैको हित र कल्याण गर्दैन। सत्वगुणीको लक्षणबारे श्रीकृष्ण थप्दै भन्नुहुन्छ- हे पार्थ ! जो व्यक्ति आत्मसंयमी छ अर्थात् इन्द्रिय सुख भोगादिमा आशक्त हुँदैन, जो हरिनाम, संकीर्तन र जपतप, यज्ञादि सम्पन्न गर्दछ र स्वध्याय अर्थात् वेदशास्त्रहरूको अध्ययनबाट ज्ञान प्राप्त गर्दछ, जो शरीर मन र जिब्रोलाई नियन्त्रणमा राख्दछ, जो सरल, नरम, क्रोधरहित र अहिंसक छ, जो सदा सत्यमा रहन्छ र सत्य कर्म गर्दछ, जो धैर्य र शीलवान् छ, र आफूले कार्य गरेर पनि आफूलाई अकर्ता मान्दछ अर्थात् 'मैले जे जति कर्मकार्य गरेको त्यो सबै ईश्वरबाट गराइएको हो म त त्यसको माध्यम मात्र हुँ' भन्ने ठान्दछ, जसको चित्त स्थिर तथा दृढ छ, जो परनिन्दा गर्दैन र क्षमावान छ, जो मोहरहित छ, त्यस्तो व्यक्तिलाई दैवीगुणले सम्पन्न व्यक्ति मान्नुपर्दछ। त्यस्तो व्यक्ति नै मुक्तिको हकदार बन्दछ र देवतातुल्य मानिन्छ। यस्तो दैवीगुणयुक्त व्यक्तिले यस जीवनमा सुखशान्ति पाई अन्तमा ब्रह्मलोकमा उसको बास हुन्छ।

**दम्भो दर्पोऽभिमानश्च क्रोध पारुष्यमेव च।**
**अज्ञानं चाभिजातस्य पार्थ संपदमासूरीम्॥ (१६-४)**

हे अर्जुन ! आसुरी व्यक्तिलाई सधैं घमण्ड, क्रोध, अहंकार र अज्ञानताले घेरिरहेको हुन्छ। यस्तो व्यक्ति अरुको भलो चाहँदैन र अरुको राम्रो भएको कुरा उसलाई सह्य हुँदैन। उसलाई स-साना कुरामा पनि रिस उठिरहन्छ। आफूसँग भएको धन, सम्पत्ति, मान पदको उसमा ठूलो अभिमान हुन्छ र आफ्नो स्वार्थको लागि ऊ कस्तै अमानवीय काम गर्न पनि पछि हट्दैन। अज्ञानताले गर्दा उसले यो शरीर र संसारलाई साँचो र स्थायी सम्झिएको हुन्छ र संसारी सुखभोगमा नै आशक्त भई पुनः ८४ जुनीको चक्कर लगाइरहन्छ।

दैवीसम्पदा/गुण सधैं मुक्तिको लागि हुन्छ भने आसुरी सम्पदा/गुण संसारी बन्धनमा बाँध्ने खालको हुन्छ। यस्तो व्यक्तिको न त बाहिरी शरीर न त अन्तष्करण नै शुद्ध हुन्छ। त्यो व्यक्तिको आचरण पनि राम्रो हुँदैन। उसका बोलीवचन पनि मिठो र सत्य हुँदैन। ऊ नस्तिक हुने भएकाले उसले यो संसार आफैं स्त्रीपुरुषको संयोगबाट बनेको छ यसमा सृष्टि गर्ने कुनै अन्य अलौकिक शक्ति छैन भन्ने कुरामा ऊ विश्वस्त हुन्छ। यसरी आसुरी स्वभावका मानिसहरूबारे वर्णन गर्दै श्रीकृष्ण भन्नुहुन्छ- हे पार्थ ! आसुरी स्वभावका मानिसहरू अहंकारी, घमण्डी, क्रोधी, अभिमानी, हिंसक र अज्ञानी हुन्छन्। दैवीगुण भएका मानिसहरूको स्वभाव नरम, आध्यात्मिक, दयालु र परोपकारी हुन्छन् भने आसुरी गुण भएका मानिसहरू निर्दयी, कठोर र पापाचारी हुन्छन्, जसले गर्दा यिनीहरू आफ्नो अज्ञानता र कुकर्मको जालभित्र अल्झिरहन्छन् र आफ्नो कर्मको फलअनुसार यिनीहरूले निच योनीमा जन्मने मर्ने र फेरि जन्मने कम अटुट रूपमा भोगिरहन्छन्।

**दैवीसंपद्विमोक्षाय निबन्धायासुरी मता।**
**मा शुचः संपदं दैवीमभि जातोऽसि पाण्डव ॥ (१६-५)**

हे पार्थ ! तिमी यस विषयमा चिन्ता नगर किनकि तिम्रो स्वभाव दैवीगुणले युक्त छ। वर्णधर्मअनुसार तिमीले युद्ध गर्नु तिम्रो क्षेत्रिय धर्म हो यसमा तिमीलाई कुनै नराम्रो काम गरेको दोष लाग्दैन। यहाँ श्रीकृष्णले वेद र शास्त्रसम्मत वर्णधर्मको पालन गर्नुपर्ने कुरामा विषेश जोड दिनुभएको छ। भगावान् भन्नुहुन्छ- यस संसारमा मानिसहरू दुई प्रकारका हुन्छन्, एक दैवी स्वभावका र अर्को आसुरी स्वभावका। जो दैवीगुणले सम्पन्न भएका छन् तिनीहरू आध्यात्मिक विचारधाराबाट प्रेरित भई वेद तथा शास्त्रसम्मत शुभकर्महरू गर्दछन् भने अर्काथरि आसुरी प्रकृतिका मानिसहरू भने नास्तिक हुन्छन्। उनीहरू कुनै शास्त्रसम्मत धर्मकर्महरू गर्न

चाहँदैनन् र आफ्नो मनमा जे लाग्यो त्यो नै गर्ने खालमा हुन्छन्। उनीहरूबाट अरुको भलो हुने काम हुँदैन र लोभ, मोह र क्रोधको वशमा परेर उनीहरू अनेक कुकर्म गर्न पछि पर्दैनन्। आ-आफ्नो धार्मिक तथा वैदिक मूल्य र मान्यतालाई उनीहरूले पालना गर्दैनन् त्यसले गर्दा समाजमा अशान्ति र पापाचारको वृद्धि हुन पुग्दछ। आसुरी स्वभावका मानिसले ईश्वरको सर्वव्यापकता र सर्वश्रेष्ठतामा विश्वास गर्दैन र त्यसलाई मान्दैन पनि। झुठो आडम्बर देखाउनु र कामवासना पूर्ति गर्नु नै उसको जीवनको प्रमुख ध्येय हुन्छ र क्षणिक मोजमज्जा दैहिक सुख र भूलभूलैयामा उसले आफ्नो अमूल्य मानव चोला गुमाउँदछ। अज्ञानताले गर्दा उसले सृष्टि, सृष्टिकर्ता र क्षणभंगुर भौतिक जगतको विषयमा सत्य कुरा बुझ्न र जान्न सक्दैन। अहंकार र अल्पबुद्धिले गर्दा ऊ दिग्भ्रमित भई समाजमा अशान्ति र अस्थिरता फैलाई त्यसलाई उधोगतितर्फ डोऱ्याउन सहायक बन्दछ।

आसुरी स्वभावका मानिसहरूको लक्षणबारे थप प्रकाश पार्दै श्रीकृष्ण अर्जुनलाई भन्नुहुन्छ- हे साथी ! आसुरी स्वभावका मानिस भौतिकवादलाई मान्ने हुनाले उसले संसारलाई सत्य र नित्य मानेर संसारी माया मोहको जन्जालमा पारिरहन्छ र झुठो सानमान र प्रतिष्ठा आर्जन गर्नमा नै आफ्नो समय बिताउँछ। धन, मान, शक्ति र सान प्राप्त गर्नको लागि उसले जस्तोसुकै पापचार गर्न हिच्किचाउँदैन। अज्ञानी र अविवेकी हुने हुनाले आफू कुकर्म गरिरहेको र कुबाटो हिँडिरहेको कुरा पनि पत्तो पाउँदैन। आसुरी स्वभावका मानिसहरूले इन्द्रिय सुखभोगलाई सर्वोपरि महत्व दिँदै त्यसैको तृप्तिका लागि जुनसुकै प्रकारले धनआर्जन गर्छन् र इन्द्रिय सुखभोगमा अल्मलिएर आफ्नो बहुमूल्य मानव चोला खेर फाल्दछन्। यस्ता आसुरी स्वभावको व्यक्ति आफूसँग भएको धन, मान र शक्तिको धाक लगाउँछन् र "म जस्तो राम्रो, बलियो, घरानियाँ अरु कोही छैन भन्ने कुराको अभिमान गर्दछ" "मैले यति दान गरें

र यति काम गरें "मजस्तो दाता र धर्मात्मा अरु कोही छैन" भन्ने कुराको अहंकारले उसलाई अन्धो बनाइदिएको हुन्छ जसले गर्दा आफू कुन बाटो कसरी हिंडेको छु र कहाँ पुगिन्छ भन्ने कुराको उसलाई पत्तो हुँदैन। संसारी मोह र मायाको जालमा परेर उसले यस झुठो जगतको वास्तविकतालाई जान्न बुझ्नसकेको हुँदैन। आसुरी स्वभावका व्यक्ति परमात्माको सर्वव्यापकता र सर्वोत्तमतालाई मान्दैन र स्वयं आफ्नो हृदयमा बस्ने परमात्मालाई उसले चिन्दैन। उसले काम, क्रोध, लोभ, मोह र अहंकारको भूमरीभित्र अल्झिएर अमूल्य मानवजीवनको दुरूपयोग गरिरहेको हुन्छ। अर्कालाई धाक देखाउन र आफूलाई ठुलो धर्मगुरुको रूपमा स्थापित गर्न कोही यस्ता व्यक्तिहरू विभिन्न धार्मिक कथा, प्रवचन, यज्ञ यज्ञादि र धर्मकर्महरू गर्ने गर्दछन्। वास्तवमा यिनीहरू अरुको धर्मको निन्दा गर्ने र अरुको आत्मा नचिन्ने ढोंगी हुन्छन्। श्रीकृष्ण भन्नुहुन्छ- यस्ता आसुरी स्वभावका व्यक्तिहरूलाई उसको कुकर्मको फल भोगाउन म उसलाई नीच योनीमा पठाई जन्ममृत्युको चक्करमा लगाइराख्नेछु। यसरी आसुरी स्वभावको कारणबाट नीच योनीमा जन्म लिन पुग्ने व्यक्ति कहिल्यै उँभो लाग्न सक्दैन। आ-आफ्नो कर्मको फलअनुसार कसलाई कस्तो योनि अथवा शरीर धारण गराउने हो त्यो परमेश्वरकै हातमा रहेको कुरा भुल्नु हुँदैन।

**त्रिविधं नरकस्येदं द्वारं नाशनमात्मनः।**
**काम क्रोधस्तथा लोभस्वस्मादेतत्त्रयं त्यजेत्॥** (१६-२१)

काम, क्रोध र मोह यी तिन कुरा मानिसका ठुला शत्रु हुन्। यिनले मानिसलाई नरकमा पुऱ्याइदिन्छन्। त्यसैले मानिसले आफूलाई यी तीन ठुला शत्रुबाट बचाउनु पर्दछ। यसरी यी महाशत्रुबाट आफूलाई जोगाउन सक्ने व्यक्तिले नै आत्म साक्षात्कारद्वारा क्रमशः आफ्नो कल्याण गर्दै अन्तमा परमगति प्राप्त गर्दछ। अर्को कुरा वेदद्वारा निर्धारित अर्थात् शास्त्रसम्मत

क्रियाकर्म गरेपछि मात्र मानिसलाई आत्मसाक्षात्कारको सौभाग्य प्राप्त हुन्छ र आत्मसाक्षात्कारबाट नै मोक्ष प्राप्त हुन सक्दछ।

**यः शास्त्र विधिमुत्सृज्य वर्तते कामकारतः।**
**न स सिद्धिमावाप्नोति नसुखं न परां गतिम्॥ (१६-२३)**

जो व्यक्ति वेद तथा शास्त्रद्वारा निर्धारित क्रियाकलाप नगरी आफ्नो मनोमानी ढङ्गले क्रियाकर्म सम्पन्न गर्दछ भने त्यसबाट उसलाई न कुनै सिद्धि वा लाभ प्राप्त हुन्छ न त मोक्ष नै मिल्दछ। त्यसैले मानिसले वेद तथा शास्त्रले बताएअनुसारको क्रियाकलाप गर्नुपर्दछ। के राम्रो, के नराम्रो, के गर्नुहुन्छ, के गर्नु हुँदैन भन्ने कुरा जानेर बुझेर आफ्नो कर्तव्य र कर्म गर्दा नै सबैको कल्याण हुन्छ। सबै मानिसको आ-आफ्नो वर्णधर्मअनुसार कर्तव्य र अकर्तव्य निर्धारित भएको हुन्छ। यसरी शास्त्रसम्मत निर्धारित क्रियाकर्म गर्दा नै मानिसले सिद्धि, सुखसमृद्धि प्राप्त गरी अन्तमा दिव्य लौकिक धाम पुग्ने सौभाग्य पाउँदछ। आध्यात्म चिन्तन गर्ने व्यक्तिमा सात्विक गुणको विकास हुन थाल्दछ र सात्विक गुणकै प्रभावबाट उसले सत्कर्मतर्फ आफूलाई लगाउँछ र सत्कर्मकै माध्यमबाट उसले आफ्नो जीवनलाई धन्य बनाई मृत्युपश्चात देवलोकमा पुग्न सफल हुन्छ।

**चित्तलाई बसमा राख्ने, परनिन्दा गर्दैन जो।**
**नम्र, दयालु निर्लोभी, गुणी मानिस हुन्छ त्यो॥**

# सत्रौं अध्याय

माथिको अध्यायमा दैवी र आसुरी स्वभावको मानिसले गर्ने कामको प्रकृति र प्रकृयाबारे व्याख्या गरिएको र जुनसुकै जस्तै कर्म पनि शास्त्रीय विधिअनुसार श्रद्धापूर्वक गरिन्छ भने त्यो कर्म सात्विक हुन्छ भनिएको छ। यस अध्यायमा श्रीकृष्णले सात्विक, राजसी र तामसी क्रियाहरू आफ्ना गुणअनुसार भिन्न भए जस्तै श्रद्धा पनि तीन प्रकारका हुन्छन् भन्ने कुरालाई स्पष्ट पार्नुभएको छ। वेद तथा शास्त्रको निर्देशनविपरीत आचरण गर्ने व्यक्ति आसुरी स्वभावको हुने तर त्यस्तो व्यक्तिले यदि श्रद्धापूर्वक ईश्वरको पूजा आराधना गर्छ भने त्यो के हुन्छ ? अर्थात् त्यसको त्यो कर्म सात्विक, राजसी अथवा तामसी कुन वर्गमा पर्दछ ? भन्ने अर्जुनको जिज्ञासाको उत्तर दिँदै श्रीकृष्ण भन्नुहुन्छ

**सत्वानुरूपा सर्वस्य श्रद्धा भवति भारत ।**
**श्रद्धामयोऽयं पुरुषो यो यच्छ्रद्धः स एव सः ॥ (१७-३)**

मानिसको श्रद्धा उसको आफ्नो अन्तस्करणअनुसार बनेको हुन्छ। जसको अन्तस्करण श्रद्धामय छ त्यो व्यक्ति श्रद्धावान नै हुन्छ। हे पार्थ ! जीवात्माले आफ्नो पूर्वजन्मको कर्मअनुसार प्राप्त गरेको गुण/स्वभावहरू तीन प्रकारका हुने गर्दछन्। मानिसको आफ्नो स्वभाव र श्रद्धाअनुसार त्यस्तै व्यक्तिसँग उसको संगत हुन्छ। हुन त जीवात्मा परमात्माको एक अंश भएकाले प्रकृतिका तीन गुणबाट ऊ आफूलाई अप्रभावित तुल्याउन सक्दैन तर आत्मसाक्षात्कारद्वारा उसले आफूलाई परमात्मामा लिन गराउन सक्दछ। भौतिक जगतमा बाँधिएको अर्थात् संसारी मोहजालमा फँसेको मानिसमा शुद्ध सात्विक श्रद्धा हुन गाह्रो पर्दछ। सात्विक तथा शुद्ध श्रद्धाबाट मात्र भगवानलाई बुझ्न र उसको सामीप्यमा पुग्न सकिन्छ। जसको हृदय सात्विकताले भरिएको छ, त्यसको श्रद्धा सात्विक हुन्छ। आ-आफ्नो श्रद्धाअनुसार

मानिसले विभिन्न धर्मकर्महरू सम्पन्न गर्दछन्। आफ्नो गुण, स्वभाव र श्रद्धाअनुसार सत्वगुणीहरूले देवदेवताहरूलाई पुज्दछन् भने रजोगुणीहरूले भूत, प्रेत, पिचास आदिलाई मान्दछन्। धर्मशास्त्रले बताएको कुरालाई नमानी अहंकारले आफ्नो इच्छा र बुद्धिअनुसार यज्ञ, जप, तप गर्ने व्यक्तिलाई आफ्नो शक्तिको मात लागेको हुन्छ र विषयभोगमा आशक्त भएको त्यस्तो व्यक्तिको श्रद्धा र स्वभाव अवश्य पनि आसुरी प्रकृतिको हुन्छ। आसुरी प्रकृतिको मानिस अज्ञानताले गर्दा अनुचित भ्रममा परेर ईश्वरको अवहेलना गर्ने र आफ्नो शरीरलाई पनि अति कष्ट दिने हुन्छ। परमात्माको वास रहेको यो हाम्रो भौतिक शरीरलाई अति कष्ट दिएर सम्पन्न गरिने यज्ञ, तप, दान आदि कुनै पनि कार्य परमात्मालाई स्वीकार्य हुँदैन।

**आहारस्त्वपि सर्वश्य त्रिविधो भवति प्रियः।**
**यज्ञस्तपस्तथा दानं तेषां भेदमिमं श्रुणु॥ (१७-७)**

श्रद्धा जस्तै मानिसले खाने भोजन पनि प्रकृतिको गुणअनुसार तीन प्रकारका (सात्विक, राजसी र तामसी) हुन्छन्। साथै मानिसले सम्पन्न गर्ने यज्ञ, तप, जप, दान पनि तीन प्रकारका हुन्छन्। सात्विक मानिसहरू शास्त्रद्वारा निर्देशित अर्थात् शास्त्रसम्मत कार्य गर्दछन् भने राजसी र तामसी स्वभाव र श्रद्धाले युक्त व्यक्तिहरू आफ्नो मनोमानी ढङ्गले आफ्नै इच्छा र भावनाअनुसार क्रियाकर्महरू गर्दछन्, जसले गर्दा उनीहरूमा रहेको त्यो रजोगुण र तमोगुणबाट उनीहरू कहिल्यै मुक्त हुन पाउँदैनन्।

**आयु:सत्वबलारोग्य सुख प्रीति विवर्धनाः।**
**रस्याः स्निग्धा स्थिरा हृद्या आहाराः सात्विकप्रियाः॥ १७-८**

जुन भोजनले आयु, बुद्धि, बल र आरोग्य बढाउँछ र जुन भोजन ताजा रसिलो र हितकर हुन्छ, त्यो भोजन सात्विक हुन्छ र त्यस्तो भोजन सत्वगुणीलाई मन पर्दछ। यसैगरी राजसी व्यक्तिहरूले अति तातो, पिरो, अमिलो, नुनिलो र रूखो, जुन खाना खाएपछि

शरीरलाई पोल्ने र डाह हुने हुन्छ, त्यस्तो खाना उनीहरूलाई मन पर्दछ। बासी गन्हाउने, सडेगलेको, नसालु, जुठो र खान नहुने खाना मन पराउने व्यक्तिहरू तामसी हुन्छन्। खानाअनुसार मानिसको शरीर मन र मस्तिष्कको विकास हुन्छ। त्यसैले खाना शुद्ध, पोसिलो, ताजा र स्वस्थकर हुनुपर्दछ।

भोजन जस्तै मानिसले गर्ने यज्ञ, तप, दान आदि पनि सात्विक, राजसी र तामसी हुन्छन्। आफ्नो कर्तव्य सम्झी फलको इच्छा नराखी शास्त्रले बताएको विधिअनुसार सम्पन्न गरिने यज्ञ सात्विक यज्ञ हो भने फलको इच्छा राखेर अहंकार र देखासिकीबाट गरिने यज्ञहरू राजसी हुन्। शास्त्रविधिविपरीत र अश्रद्धाबाट गरिने यज्ञहरू तामसी हुन्छन्। भोजन र यज्ञ जस्तै तप पनि तीन प्रकारका हुन्छन्। फलको इच्छा नराखी श्रद्धापूर्वक गरिने तप सात्विक हुन्छ भने अहंकार र देखावटी रूपले धन, मान, र सम्मान पाउने इच्छाबाट प्रेरित भएर गरिने तप राजसी हुन्छन्। त्यस्तै अरुलाई दुःख, पीडा र हानी पुऱ्याउने नियतले गरिने तप र आफ्नो शरीरलाई ठुलो कष्ट, यातना दिई सम्पन्न गरिने तपहरू तामसी हुन्छन्। यसका अतिरिक्त ब्रह्मचर्य, अहिंसाको पालन गर्नु र आफूले मान्नुपर्ने देवता, ब्राम्हण, गुरु, ज्ञानी र आमाबावुलाई यथोचित मान सम्मान र आदार गर्नु शारीरिक तप हो भने साँचो, मिठो र हितकारी शब्द बोल्नु वाणीको तप मानिन्छ।

**श्रद्धया परया तप्तं तपस्तत्त्रिविधं नरैः।**
**अफलाकाङ्क्षिभिर्युक्तै : सात्विकं परिचक्षते॥ (१७-१७)**

फलको आशा नराखी कर्म गर्ने कार्ययोगी पुरुषले श्रद्धापूर्वक सभामा गरेका माथि उल्लेखित यज्ञ, तप, दान आदि सबै सात्विक तप कहलाइन्छ।

**अदेशकाले यद्दानमपात्रेभ्यश्च दियते।**
**असत्कृतमवज्ञातं तत्तामसमुदाहृतम्॥ (१७-२२)**

यज्ञ, तप जस्तै दान पनि तिन प्रकारकै हुन्छन् । आफूले दिएको दानको बदलामा कुनै कुरा पाउने आशा नराखी कर्तव्य संझी श्रद्धाले सत्पात्रलाई दिएको दान अर्थात् उचित स्थान, समय र व्यक्तिलाई दिएको दान सात्विक दान हो । आफूले दिएको दानको बदलामा केही पाउने मनसायले मन नलगाई कर, बल र देखावटी रूपले गरिने दान राजसी दान मानिन्छ । अश्रद्धा र हेलागरी कुमान्छे र कुसमयमा दिएको वा दिईने दान तामसी दान हुन्छ । तर यी तिनवटै कर्म अर्थात् यज्ञ, तप र दान सम्पन्न गर्नु अघि यदि " ॐ तत् सत् " यी तिन शब्द उच्चारण गरेर परमात्मालाई सम्झी काम प्रारम्भ गरिन्छ भने त्यो कार्य फलिभूत हुन्छ अर्थात् त्यो कर्म ईश्वरमय भैदिन्छ । किनकी ॐ, तत्, सत् यी तिनै शब्द परब्रह्म परमात्माको संयुक्त शब्द हुन् । त्यसैले अनादी काल देखि जुनसुकै धार्मिक अनुस्थान वा शास्त्रसम्मत क्रिया कर्मको थालनी अर्नु अघि यी तिन शब्द ॐ तत्, सत् को उच्चारण गरिदै आएको छ । ठुला ठुला महात्मा योगी ऋषि माहात्माहरूले पनि निष्काम रूपले ब्रह्म प्राप्तिको लागि गरिने यज्ञ, तप, दान आदि कार्यको थालनी ॐकारको उच्चारणबाट नै गर्दछन् । सत् शब्द सतकर्म र सद्‌भावको पर्यायवाची शब्द हो । सबै कर्मको सिद्धिको लागि यो शब्दलाई प्रारम्भमा नै उच्चारण गरिन्छ । सम्पूर्ण कार्यको सिद्धि र पूर्णताको लागि ॐ, तत्, सत् शब्द प्रयोग हुन्छ । धर्मशास्त्रअनुसार गरिने यज्ञ, तप, दानहरू ईश्वर प्राप्तिको लागि गरिन्छ भने त्यो सत् अर्थात् त्यसले सिद्धि प्राप्त गर्दछ र यदि त्यसको उद्देश्य ईश्वर प्राप्ति होइन भने त्यो असत् हुन्छ त्यो सत् हुन सक्दैन, त्यसले सिद्धि प्राप्त गर्दैन र ती सबै कार्य व्यर्थ हुन्छन् ।

**अश्रद्धया हुतं दत्तं तपस्तप्तं कृतं च यत ।**
**असदित्यूच्यते पार्थ न च तत्प्रेत्य नो इह ॥ (१७-२८)**

जुनसुकै कार्य ईश्वर प्राप्तिको उद्देश्य राखेर श्रद्धापूर्वक गरिन्छ भने त्यो कार्य शुभकार्य हुन्छ र त्यो सफल हुन्छ, श्रद्धाविना गरिएको यज्ञ, तप, दान आदि कर्महरू सबै व्यर्थ हुन्छन्। यस्तो कर्मबाट न यस लोकमा फाइदा हुन्छ न मृत्युपछि यसले सुख दिन्छ। श्रद्धा जगाउन सद्गुरुको मार्गदर्शनको पनि आवश्यकता पर्दछ। यसरी यस अध्यायमा श्रीकृष्णले अर्जुनलाई श्रद्धाको महत्व र आवश्यकता माथि प्रकाश पार्दै परमात्मा प्राप्तिको लागि श्रद्धापूर्वक कर्महरू सम्पन्न गर्नुपर्ने कुरामा जोड दिनुभएको छ।

**"प्रकृतिको गुणानुसार, खाना हुन्छन् तिनैथरी ।**
**यज्ञ, तप, दानमा पनि, भेद हुन्छन् त्यसैगरी ॥"**

# अठारौं अध्याय

श्रीमद्भागवत् गीताको अठारौं अध्याय सम्पूर्ण गीताको सारसंक्षेप हो । यस अध्यायमा गीताको एकदेखि सत्रौं अध्यायसम्म जेजति कुराहरू उल्लेख भएका छन् त्यसको सारलाई यहाँ संक्षेप रूपमा उल्लेख गरिएको छ । गीताको पहिलो ६ अध्याय (१–६) मा कर्मयोग, ध्यानयोग र ज्ञानयोगको व्याख्या भएको छ भने दोस्रो ६ अध्याय (७–१२) मा भक्तियोग, आत्मसंयम योग, ज्ञानविज्ञान योग, भगवत्प्राप्ति, परमगोपनीय ज्ञान, भागवत् ऐश्वर्य आदिको विषयमा चर्चा गरिएको छ । गीताको अन्तिम ६ (१३–१७) अध्यायमा ज्ञान, वैराग्य, पराअपरा प्रकृति, प्रकृतिका तीन गुणहरू दैवीआसुरी स्वभाव, श्रद्धा आदिका विषयमा प्रकाश पारिएका छन् । मुख्यत यहाँ श्रद्धा र भक्तिपूर्वक परमात्माको आश्रय लिएर सम्पूर्ण कार्य गर्दा नै मोक्ष प्राप्त हुने कुरामाथि जोड दिइएको र त्याग, वैराग्य र भक्तिद्वारा नै जीवनको उद्देश्य प्राप्त गर्न सकिन्छ भन्ने कुरालाई स्पष्ट पारिएको छ । कुरुक्षेत्रको युद्धभूमिमा आफन्तसँग युद्ध नगर्ने अर्जुनको घोषणालाई लिएर प्रारम्भ भएको गीताको उपदेशको सिलसिलामा श्रीकृष्णले अर्जुनलाई बताउनुभएको कर्मयोग, ज्ञानयोग र भक्तियोग आदि विषयको उपदेशले पनि अर्जुनको मनको सन्देहलाई हटाउन नसकेको हुँदा उनी श्रीकृष्णलाई यसअघि बताइएका सबै ज्ञान उपदेशको सारलाई स्पष्ट रूपले बुझाइदिनका लागि अनुरोध गर्दछन् । अर्जुनको मनमा रहेको सन्देहलाई हटाउन श्रीकृष्ण आफूले अहिलेसम्म बताइएका सबै ज्ञान उपदेशको सार तत्वमाथि प्रकाश पार्दै भन्नुहुन्छ, हे पार्थ ! मेरो यो गिता उपदेशको मुल कुरो नै "फलइच्छा नराखी आफ्नो कर्तव्य कर्म गर" भन्ने हो । कर्मको त्याग नै सन्यासीको लक्षण हो । संसारी इच्छा र मोहको त्यागलाई कोही 'सन्यास' भन्छन् भने कोही फलको

इच्छाको त्याग नै 'सन्यास' हो भन्छन्। त्यस्तै कोही सकाम कर्मलाई त्याग्नु पर्छ भन्छन् भने कोही आफ्नो कर्तव्य कर्मलाई कहिल्यै त्याग्नु हुँदैन भन्छन्। कुनै शास्त्रले यज्ञमा पशु हत्या गर्नुपर्छ भन्छन् भने कोही त्यसो गर्दा पाप लाग्छ भन्छन्। यस विषयमा स्पष्ट पार्दै श्रीकृष्ण भन्नुहुन्छ-

**एतान्यपि तु कर्माणी सङ्गं त्यक्त्वा फलानी च।**
**कर्तव्यानीति मे पार्थ निश्यीते मतमुत्तामम्॥ (१८-६)**

हे अर्जुन ! प्रकृतिको तीन गुणअनुरूप सबै जीवात्मा ती तीन गुणबाट प्रभावित छन्। श्रद्धापूर्वक मानिसले आ-आफ्नो गुण र स्वभावअनुसार गरिएको जुनसुकै कर्महरू यज्ञ, दान र तपलाई उचित मान्नु पर्दछ तर सो कर्म गर्दा त्यसलाई आफ्नो कर्तव्य सम्भी, आशक्तिरहित भई र त्यसको प्रतिफलको इच्छा नराखी गरिएको हुनुपर्दछ। मेरो विचारमा त्यो नै सबैभन्दा उत्तम कुरा हो। आ-आफ्नो धर्म र प्रकृतिअनुसार निर्धारित भएका कर्म नगर्दा उल्टो पाप लाग्दछ। प्रकृतिका तीन गुणअनुसार मानिसबाट गरिने त्याग कर्म पनि ३ प्रकारकै हुन्छन्। फल इच्छाको त्याग र संसारी आसक्तिको त्याग सात्विक हो भने आफूलाई निर्धारित गरिएको कर्मलाई दुःखकष्ट हुन्छ भनेर त्यसको त्याग गर्नु राजसी त्याग हो र अहंकार, इच्छा, द्वेषले गरिने कर्मको त्याग तामसी त्याग मानिन्छ। सात्विक गुण भएको व्यक्ति शुभ अशुभ दुवै कर्मप्रति समभाव राख्दछ। कर्तव्य कर्म गर्दा सुखदुःख जेजस्तो परिस्थिति भएपनि त्यसलाई स्वीकार गर्दै ठिक ठाउँ ठिक समयमा उसले आफ्नो कर्म सम्पन्न गरेको हुन्छ भने त्यस्तो व्यक्तिलाई हामीले बुद्धिमान मान्नुपर्दछ।

**न हि देहभृता शक्यं त्यक्तुं कर्माण्यशेषतः।**
**यस्तु कर्मफलत्यागी स त्यागीत्यभिधीयते॥ (१८-११)**

मानिस कहिल्यै कर्म नगरी बस्न सक्दैन। कर्मको फलको इच्छा र आशा नराखी भगवानलाई सम्फेर कर्म गर्ने व्यक्ति त्यागी महापुरुष हो। 'म जेजस्तो कर्म गर्दैछु, त्यो परमात्माको प्रेरणबाट उनैका लागि गरिएको हो' भनी ठान्ने व्यक्तिलाई उसले गरेको पापकर्मको पनि दोष लाग्दैन अर्थात् उसले कर्मफल भोग्नुपर्दैन। परमात्मानै सबै कुराको उद्गम स्रोत हुन्। उहाँले यस संसारमा हामी सबैलाई आ-आफ्नो प्रकृतिको गुणअनुसार कर्महरू गर्न प्रेरित गर्नुहुन्छ। हामी स्वयं आफू कर्ता होइनौं परमात्माले हामीलाई हाम्रो शरीर, मन र बुद्धिको माध्यमबाट कर्म गराउनु हुन्छ। माथि उल्लेखित कुराहरूलाई बुझेर जो व्यक्ति संसारी कर्म गर्दछ भने पनि ऊ कर्म बन्धनमा बाँधिएको हुँदैन।

मानिसको मन, वचन र शरीरबाट गरिने उचित अनुचित सबै कर्महरू पाँच कारक तत्वको कारणबाट भएका हुन्छन् भन्ने कुरालाई हामीले बिर्सनु हुन्न। कर्ता, स्थान, इन्द्रिय, चेष्टा र विचार यी बाहिरी अर्थात् भौतिक कारक तत्व हुन् भने भित्री कारक तत्व परमात्मा हुन्। यी पाँच तत्वहरूबाट प्रेरित भएर मानिस कार्य गर्दछ। यो कुरालाई बुझेर नै अर्जुनले कुरुक्षेत्रको युद्धभूमिमा आफन्तलाई नमार्ने र सो गर्दा आफूलाई माहापाप लाग्ने कुरा गर्नुभएको हो। आखिर गर्ने गराउने सबै परमात्मा हुन् म तसिर्फ माध्यम मात्र हुँ भन्ने कुरो बुझेको भए अर्जुनले "तस्मान्नाहं वयं हन्तुं धार्तराष्ट्र स्वबान्धवान्, स्वजनं हि कथं हत्वा सुखिनः स्याम माधव" भन्ने यो शब्दहरू किन उच्चारण गर्नुपर्दथ्यो ?। अज्ञानता र अहंकारले गर्दा अर्जुनले आफूलाई 'कर्ता' मानेका थिए। जे हुन्छ र जे भइरहेको छ त्यो सबै ईश्वरबाट परिचालित छन् भन्ने ज्ञान भएको भए अर्जुनबाट लडाइँ नगर्ने कुरो हुँदैनथ्यो।

**यस्यन्नाहं कृतो भावो बुद्धिर्यस्य न लिप्यते।**
**हत्वापि स इमाँल्लोकान्नहन्ति न निवध्यते॥ (१८-१७)**

जुन मानिसको मनमा "म कर्ता हुँ" भन्ने भाव हुँदैन र जसको मन भौतिक बस्तु तथा संसारी सुखमा लिप्ट हुँदैन त्यस्तो व्यक्तिले कसैलाई मारेता पनि न त त्यो मारिएको हुन्छ न त त्यसको पाप नै उसलाई लाग्दछ। यसै सन्दर्भमा श्रीकृष्ण अर्जुनलाई भन्नुहुन्छ- हे पार्थ ! तिमी व्यर्थमा किन चिन्ता गर्दछौ ? तिमी कसैलाई मार्न सक्दैनौ न कसैबाट तिम्रो मृत्यु हुन्छ किनकी तिम्रो शरीर तिमी होइनौ तिमी त आत्मा हौ। आत्मा न कहिले जन्मन्छ न कहिले मर्दछ। यो अजन्मा, अमर, नित्य र शाश्वत छ। यो शरीर न तिम्रो हो र न तिमी यो शरीरका हौ। तिम्रो हाम्रो यो शरीर त पञ्चमाहाभूत अर्थात् अग्नि, जल, वायु, पृथ्वी र आकाशबाट बनेको छ र पछि पनि यसैमा मिल्न पुग्दछ। यो जगत परिवर्तनशील छ, परिवर्तन भइरहनु यसको स्वभाव हो। जसलाई तिमी मृत्यु सम्झन्छौ त्यो तिम्रो अज्ञानता हो। मृत्यु नै जीवन हो। सुखदुःख, हानीलाभ, ठुलोसानो भन्ने कुराहरू जीवनमा आउँछन्, जान्छन् त्यो कहिल्यै स्थिर भएर रहँदैन। त्यसैले सुखदुःख, लाभहानी आफ्नोअरुको भन्ने विचार मन बुद्धिबाट हटाऊ तब मात्र यो जगतका समस्त प्राणी तिम्रो र तिमी सबैको हुन सक्नेछौ। हे पार्थ ! तिमी किन विस्मात् गर्छौ, 'म र मेरो' भन्ने भ्रमबाट मुक्त होऊ तिमी यो संसारमा रित्तो हात एक्लै आयौ र अब पनि रित्तो हात एक्लै यो संसार छोडेर जानेछौ। आज तिमी जसलाई मेरो आफ्नो मानिस भनि राखेका छौ, ती पहिले पनि अरु धेरैका आफ्नो मानिस भइसकेका हुन र भोलि पनि अरु कसैका हुनेछन्। त्यस्तै तिमी आफू पनि पहिले कसैको आफन्त थियौ र भोलि पनि अरु कसैको आफन्त बन्न पुग्नेछौ। यहि 'म' र 'मेरो' को मोहमा परेर नै मानिस दुःखी र चिन्तित बनिरहेको छ। त्यसैले 'म' र 'मेरो' को भ्रमबाट मुक्त भई सबै मेरो र म सबैको हुँ भन्ने सम्झ, यसैमा तिम्रो कल्याण छ।

**नियतं सङ्गरहितमरागद्वेषतः कृतम्।**
**अफलप्रेप्सुना कर्म, यन्तत्सात्विकमुच्यते ॥ (१८-२३)**

मानिसले गर्ने कुनै पनि कर्म ज्ञान, ज्ञानको विषय (कर्म) र ज्ञाता (कर्ता) कै कारणबाट सम्पन्न हुन्छन् । प्रकृतिका तीन (३) गुणबाट ज्ञान, कर्म र कर्ता प्रभावित भएका हुन्छन् । यसै सन्दर्भमा ज्ञान तीन प्रकारका हुन्छन् भन्दै श्रीकृष्ण भन्नुहुन्छ- हे पार्थ ! जुन ज्ञानले विभिन्न जीवहरूमा विभाजित देखिएका परमात्मा एउटै हुन् भनी परमात्माको अविनाशी अविभाजित र सर्वव्यापी स्वरूपलाई चिनाउँछ त्यो ज्ञान सात्विक हो भने जुन ज्ञानले शरीर र आत्मा एउटै हो भन्ने ज्ञान दिन्छ त्यो ज्ञान राजसी र जुन ज्ञानले सत्य कुराको जानकारी दिँदैन, तुच्छ, निच कुरा गर्न र शारीरिक सुखभोगमा रमाउन प्रेरित गर्दछ र त्यसैमा आशक्त तुल्याउँछ त्यो ज्ञान तामसी हो । आत्मा र परमात्मासम्बन्धी ज्ञान सात्विक हो भने भौतिक विकाससम्बन्धी ज्ञान राजसी हुन्छ । शास्त्रले मानिसहरूको लागि आफ्नो गुण र वर्णाश्रम धर्मअनुसार कर्महरू निर्धारित गरेको हुन्छ । शास्त्रले निर्धारण गरेअनुसार अनाशक्त भावले द्वेष, घृणा, क्लेसरहित भई भगवानलाई सम्झेर गरिने कर्म सात्विक हुन्छ । आफ्नो इच्छा र कामना पूर्तिको लागि अहंकार भावले अति परिश्रम र कठोर यातनाबाट सम्पन्न गरिने कर्म राजसी हुन्छ । धर्मविपरीत अर्कालाई दुःखकष्ट दिने नियत र मोहको वशमा परेर गरिने कर्महरू तामसी कर्म मानिन्छ । ज्ञान र कर्म जस्तै कर्ता पनि तीन (३) प्रकारका हुन्छन् । प्रकृतिका गुणहरूबाट अप्रभावित अहंकाररहित धिरज, समभाव मनमा राखेर आफ्नो धर्म, वर्ण र स्वभावअनुसार जसले कर्म गर्दछ त्यस्तो कर्तालाई सतोगुणी कर्ता भनिन्छ ।

**मुक्त सङ्गोऽनहंवादी धृत्यूत्साहसमन्वित ।**
**सिध्द्यसिध्दयोनिर्विकारः कर्ता सात्विक उच्चते ॥ (१८-२६)**

विषय भोगमा रुचि राख्ने, कर्मफलको इच्छा राख्ने, लोभी, इर्ष्यालु, असंयमित र अपवित्र कर्म गर्ने कर्ता रजोगुणी हुन्छ भने भौतिकवादको

आश्रय लिने, शास्त्रविपरीत काम गर्ने, धूर्त, स्वार्थी, जिद्दीवाल, अरुको निन्दा अपमान गर्ने, हिंसा गर्ने र अल्छी यस्तो कर्ता तमोगुणी कर्ता हो। यसै सिलसिलामा तीन प्रकारको गुणले युक्त बुद्धि र संकल्पको विषयमा प्रकाश पार्दै श्रीकृष्ण अर्जुनलाई सम्झाउनुहुन्छ।

**अधर्मं धर्ममिति या मन्यते तमसावृता।**
**सर्वार्थान्विपरीतांश्च बुद्धि सा पार्थ तामसी॥ (१८-३२)**

हे पार्थ ! जुन बुद्धिले मानिसलाई सद्‌मार्गतर्फ डोहोऱ्याउँछ, राम्रो नराम्रो, उचित-अनुचित र कर्तव्य-अकर्तव्यको बोध गराउँछ त्यो बुद्धि सात्विक बुद्धि हो भने सत्-असत्, उचित-अनुचित कार्यलाई छुट्ट्याउन नसक्ने बुद्धि राजसी हो। अज्ञानले गर्दा भ्रममा परेर अधर्मलाई धर्म र धर्मलाई अधर्म सम्झने र सधैं कुकर्म र कुबाटोतर्फ अग्रसर गराउने बुद्धि तामसी हो। यसैगरी हाम्रो मनभित्र रहेको संकल्प अर्थात् धारणा पनि तीन(३) प्रकारकै हुन्छन्। योगाभ्यासद्वारा दृढ र अविचलित भएर धारण गर्ने र इन्द्रियलाई नियन्त्रणमा राख्नसक्ने शक्तिरूपी संकल्पलाई सात्विक संकल्प भनिन्छ भने विषय भोगको चाहना राख्ने र त्यसलाई प्राथमिकता दिनेको संकल्प राजसी हुन्छ। तामसी संकल्प भएको व्यक्ति सधैं डर, त्रास, आलस्य, शोक, चिन्ता र मोहमा जकडिरहेको हुन्छ। त्यस्तै तीन प्रकारका सुखका विषयमाथि प्रकाश पार्दै भनिएको छ कि संसारी जीवहरू कहिले त्यही कुरालाई सुख मानेर रमाउँछन् भने कहिले त्यही कुरा उसको लागि सुखद हुँदैन। कुनैवेला उसले मानेको सुखकै कारणबाट ऊ ठूलो दुःखको भूमरीमा फँस्दछ। जुन सुख सुरुमा विषतुल्य भएपनि पछि अमृततुल्य हुन्छ र सुरुमा जतिसुकै गाह्रो, कठिन र कष्टप्रद भएपनि त्यसले पछि आनन्द दिनुका साथै व्यक्तिलाई आत्मज्ञानतर्फ अभिप्रेरित गर्छ भने त्यो सात्विक सुख हो। विषयभोगबाट प्राप्त सुख सुरुमा सुखद् भएपनि पछि त्यो दुःख र पीडामा परिणत हुन्छ त्यस्तो इन्द्रिय सुखभोगलाई

राजसी सुख मानिन्छ। इन्द्रिय र विषयको संयोगबाट प्राप्त हुने सुख सधैं दुःखमा टुङ्गिन्छ र यस्तो सुख स्थायी पनि हुँदैन भन्ने कुरालाई हामीले बिर्सनु हुँदैन। मोह, निन्द्रा र आलस्यबाट पैदा हुने सुखानुभूति जो आत्मसाक्षात्कारबाट विल्कुल विमुख रहन्छ, त्यस्तो सुख तामसी सुख हो। तामसी सुखमा मानिसले आफूलाई सुखानुभूति भएको अनुभव गर्न सक्दैन। प्रकृतिका तीन (३) गुणहरूबाट प्रभावित नहुने व्यक्ति स्वर्ग, मर्त्य र पाताल कहीं पनि भेटिँदैन। प्रकृतिका तीन गुणबाट सम्पूर्ण ब्रह्माण्डलाई प्रभावित पारेको हुन्छ।

**ब्राम्हण क्षेत्रियविशां शुद्राणां च परंतप।**
**कर्माणी प्रविभक्तानी स्वभावप्रववैर्गुणै॥ (१८-४१)**

प्रकृतिको गुणअनुसार ब्राम्हण, क्षेत्रिय, वैश्य र शुद्रहरू पनि विभिन्न गुणहरूमा विभाजित छन्। निर्भिकता, आत्मसंयमता, पवित्रता, शान्ति, तपस्या, इमान्दारिता, ज्ञान आदि ब्राम्हणका स्वभाविक गुण हुन् भने वीरता, शौर्य, शक्ति, बल, संयमिता, युद्धकौशलता, नेतृत्व आदि क्षेत्रियहरूका स्वभाविक गुणहरू हुन्। त्यसैगरी खेतिपाती, बन्दव्यापार, उधोगधन्दा वैश्यहरूको गुणहरू हुन् भने अरुलाई सेवा पुऱ्याउनु, शारीरिक परिश्रम गर्नु शुद्रहरूको गुण हो। जीवात्मा हामी सबै उनै परमात्माको एक अंश भएकाले उनको सामीप्य प्राप्त गर्न खोज्नु स्वभाविक हो। त्यसैले आ-आफ्नो स्वभावअनुसार सर्वेश्वर भगवानको आरधना अर्चना गर्ने व्यक्तिले सिद्धि प्राप्त गर्दछ। आ-आफ्नो गुण अथवा स्वभावअनुसार कर्महरू कसरी गर्नुपर्दछ भन्ने विषयमा स्पष्ट पार्दै श्रीकृष्ण भन्नुहुन्छ- अर्काको लागि निर्धारित गरिएको कर्मलाई तिमीले जतिसुकै मिहिनेत साथ सम्पन्न गरेपनि त्यसले राम्रो प्रतिफल दिँदैन।

**श्रेयान्स्वधर्मो विगुणः परधर्मात्स्वनुष्ठितात्।**
**स्वभाव नियतं कर्म कुर्वान्नाप्नोति किल्विषम्॥(१८-४७)**

शास्त्रले तिम्रो लागि निर्धारण गरेका कर्महरू जतिसुकै नराम्रो भएपनि यदि तिमीले त्यसलाई आफ्नो कर्तव्यकर्म सम्झेर गर्छौ भने त्यो तिम्रो लागि कल्याणकारी हुन्छ। उक्त कामको सिलसिलामा तिमीले कुनै कुकर्म गर्नुपरेपनि त्यसको भागिदार तिमी हुनेछैनौ। त्यसैले मानिसले आफ्नो गुण, स्वभाव र वर्णअनुसार कर्म गर्नुपर्दछ र त्यो कर्म भगवानप्रति अर्पण भएको हुनुपर्दछ। आफ्नो कर्म सम्पन्न गर्न बाधा अड्चन आरोप दोष आइलाग्यो भनेपनि त्यसलाई त्याग्नुहुँदैन। संसारी विषयभोगबाट पन्छिएर अनाशक्त भावले आफ्नो कर्म गर्दा उसले सिद्धि प्राप्त गरी सदाको लागि भवबन्धनबाट मुक्त भई परमधाम प्राप्त गर्न सक्दछ। यो नै आत्मसाक्षात्कारको विधि पनि हो। आफ्नो बुद्धिद्वारा मन शरीर इन्द्रिय वाणीलाई वशमा राख्ने, राग, द्वेष र अहंकारबाट मुक्त, अल्पआहारी, बैरागी, काम, क्रोध, लोभ, मोहबाट पर, भौतिक सुख सुविधामा लालच नगर्ने, शान्त र धीर पुरुष नै आत्मसाक्षात्कारको स्थितिमा पुग्न सक्दछ। यस्तो आत्म साक्षात्कारको स्थितिमा पुगेको व्यक्ति परंशान्तिको अनुभूत गर्दछ र परंब्रह्मको सामीप्य प्राप्त गरी त्यसैमा आफूलाई एकाकार गर्दछ।

यस भौतिक जगतको मानिस आफ्नो इन्द्रिय सुखभोगको लागि नै कार्य गर्दछन् तर आध्यात्मिक जगतको मानिस शुद्ध भगवत भक्तिमा लागेर त्यसैमा आनन्दित हुन पुग्दछ किनकि उसलाई अरु कुनै भौतिक इच्छा, चाहना र आवश्यकताले सताएको हुँदैन। यस्तो मानिस उचनिच, सुखदुख, लाभहानी सबै कुरामा समभाव राख्दछ र सतचित आनन्दमा रमाएको हुन्छ। शुद्ध भक्तिविना मानिसले भगवानको यथार्थ रूपलाई बुझ्न र चिन्न सक्दैन। शुद्धभक्तले भगवानको सधैं संरक्षण र सामीप्य प्राप्त गरिरहेको हुन्छ र अन्तमा उहाँकै कृपाबाट ऊ अविनाशी, नित्य परमधाममा पुग्न सफल हुन्छ। म जे जस्तो गर्दैछु त्यो गर्ने गराउने परमात्मा हुन् भन्ने सम्झेर यदि हामीले आफ्ना सबै कर्महरू ईश्वरमा अर्पण गर्छौ भने त्यसबाट प्राप्त हुने लाभहानी,

पुण्यपापको फल हामीले भोग्नु पर्दैन। भगवान सधैं आफ्ना शरणमा आउने भक्तको रक्षा गर्न तत्पर हुनुहुन्छ। तर, यदि कोही अहंकारले भगवानलाई हेला र अटेर गरी आफ्नो तुच्छ देहात्म बुद्धिअनुसार कर्म गर्छ भने त्यो कर्मको फल विनाशकारी बन्न पुग्दछ र त्यसैबाट उसको नाश पनि हुन्छ। यसबारे व्याख्या गर्दै श्रीकृष्ण अर्जुनलाई फेरि सम्झाउनुहुन्छ- हे पार्थ ! मैले भनेको कुराअनुसार तिमी आफ्नो कर्म (युद्ध) गर्दैनौ भने तिमी विनाशतर्फ उन्मुख हुनेछौ। किनकि युद्ध गर्नु तिम्रो गुणअनुसारको कर्तव्य हो। आफ्नो कर्तव्यकर्म नगर्ने व्यक्तिको भलो हुँदैन र अरुको पनि भलो ऊबाट हुन सक्दैन। तिमी 'म' र 'मेरो' को झुठो मोहमा परेर यो कुरो गरिरहेका छौ। तिमी आफू स्वयं केही गर्दैनौ तिमीलाई कर्म गर्न लगाउने उनै ईश्वर हुन तिमी त सिर्फ एक माध्यम मात्र हौ।

**यदहंकारमाश्रित्य न योत्स्य इति मन्यसे।**
**मिथ्यैष व्यवसायस्ते प्रकृतिस्त्वां नियोक्ष्यति॥ (१८-५९)**

हे अर्जुन ! यो कुरालाई नबुझेर तिमी अझै मोहवश युद्ध गर्न हिच्किचाउँदछौ भने पनि तिम्रो स्वभाव र कर्मले तिमीलाई युद्ध गर्न बाध्य तुल्याउने नै छ। सबै जीवात्माको आत्माभित्र रहेको परमात्माले कस्लाई कुनबेला, कसरी, कुन कार्यमा लगाउने हो सो गर्न लगाउनु हुनेछ। कुनै पनि जीवात्मा कर्म गर्न आफू स्वतन्त्र छैन ऊ सधैं परमात्माको नियन्त्रणमा रहेको हुन्छ। त्यसैले प्रत्येक जीवात्माले उनै परमात्माको शरणमा जानुपर्दछ, उनैले सही मार्गदर्शन गर्नुहुन्छ र जीवात्मालाई भवबन्धनबाट मुक्त गर्नुहुन्छ।

**तमेव शरणं गच्छ सर्वभावेन भारत।**
**तत्प्रसादात्परा शान्तिं स्थानं प्राप्स्यसि शाश्वतम्॥ (१८-६२)**

श्रीकृष्ण भन्नुहुन्छ- हे अर्जुन ! तिमी जे जस्तो कर्म गर्छौ त्यसलाई ममा अर्पण गर्दै जाऊ जसले गर्दा तिमी आफूले गरेको

कर्मको भोग भोग्न बाध्य हुनेछैनौ र तिमी सदा जीवनमुक्तको आनन्दको अनुभव गर्न पाउनेछौ।

श्रीकृष्ण भन्नुहुन्छ- हे अर्जुन ! तिमी मेरो अति प्यारो साथी भएकाले तिम्रो हित र कल्याणको लागि यो अति गोप्य ज्ञानका कुराहरू बताएँ र अब यसबारे चिन्तन मनन गरी के कसो गर्ने हो ? तिमी आफैं सोच। यसरी श्रीकृष्णले अर्जुनलाई कर्मयोग, ज्ञानयोग, कर्मसन्यास योग, प्रकृतिका गुणहरू र भक्तिको स्वरूप र त्यसको तौरतरिकाबारे व्याख्या गर्दै अर्जुनलाई निष्काम कर्म गर्न (युद्ध) प्रेरित गर्नुहुन्छ। मानिसले सधैं भगवानकै चिन्तन मनन र उनैको पूजाअर्चना र बन्दना गर्नुपर्छ त्यसो भएमात्र उसले भगवानको सामीप्य प्राप्त गर्न सक्दछ। हे अर्जुन ! तिमी सधैं ममा नै मन लगाऊ, मेरो नै भक्ति गर त्यसो भए मात्र तिमी मेरो हृदयभित्र बास गर्न पाउँछौ। बिनाभक्ति ज्ञानले मात्र मलाई पाउन सक्दैनौ। बिनाभक्तिले ज्ञान मार्गमा प्रवेश पाउन सकिंदैन। श्रीकृष्ण भन्नुहुन्छ- हे अर्जुन, सबै धर्मलाई त्यागेर तिमी मेरो शरणमा आऊ म तिमीलाई सबै पापबाट मुक्त गर्नेछु यसमा तिमीले कुनै शंका गर्नुपर्दैन।

**सर्वधर्मान्परित्यज्य मामेकं शरणं ब्रज।**
**अहंत्वाम् सर्वपापेभ्यो मोक्षयिष्यामि मा शुचः॥ (१८-६६)**

मैले तिमीलाई बताएको यो दिव्य, गोप्य ज्ञानका कुराहरू सिर्फ मेरो शुद्धभक्तहरूलाई मात्र बताउन योग्य छ। नास्तिक, अभक्त, असंयमी र ईश्वरको निन्दा गर्ने व्यक्तिहरूलाई यो गोप्य ज्ञान दिनु हुँदैन। जसले मेरो यो दिव्य ज्ञान मेरा भक्तहरूलाई बताउँछ र सुनाउँछ त्यो मेरो प्रिय हुन्छ किनकि उसले मेरो भक्तहरूलाई यो दिव्य ज्ञानहरू प्रदान गरेर उनीहरूको उद्धार गर्ने जस्तो सेवा कार्य गरेको छ। यो हामी दुईबीच भएको वार्तालाप (ज्ञानका कुराहरू) लाई कसैले अध्ययन, मनन र

चिन्तन मात्र पनि गर्छ भने उसले मेरो पूजा गरेसरह हुन्छ र यसलाई कसैले श्रद्धापूर्वक सुन्छ, सुनाउँछ भनेपनि आफूले गरेका सबै पाप नाश भएर उसले परमगति प्राप्त गर्दछ। हे पार्थ ! मैले भनेका ज्ञानका कुराहरू सुनेर अब तिम्रो मनबाट अज्ञानता र मोह हट्यो होला ? भन्ने श्रीकृष्णको वचन सुनेपछि अर्जुन खुसीले गद्‌गद् हुँदै बिन्ती गर्छन्-

**नष्टोमोह स्मृतिर्लब्ध्वा त्वत्प्रसादान्मयाच्यूत ।**
**स्थितोऽस्मि गतसन्देह, करिष्ये वचनं तव ॥ (१८-७३)**

हे प्रभु ! हजुर साक्षात परब्रह्म परमात्मा हनुहुन्छ, हजुरको अमृत वचन सुनेर मेरो मनबाट सबै अज्ञानता र मोह नष्ट भएको छ। अब म छर्लङ्ग भएको छु। के ठिक, के बेठिक, के सत्य, के असत्य भन्ने कुरो मैले बुझें, त्यसैले अब म हजुरको आज्ञाअनुसार युद्ध गर्न तयार छु भनी अर्जुन गाण्डिव धनु हातमा पुनः उठाउँछन् र युद्ध गर्न तयार हुन्छन्। श्रीकृष्णबाट 'गीता' उपदेश सुनिसकेपछि अर्जुनले श्रीकृष्णलाई परमब्रह्मको रूपमा स्विकारेका हुन्। उता सञ्जय कुरुक्षेत्रको मैदानमा आफूले दिव्य दृष्टिद्वारा देखेका र सुनेको सबै कुराहरू सविस्तार राजा धृष्टराष्ट्रलाई बताउँदै छन् र भन्छन्- हे राजन ! श्रीकृष्ण र अर्जुन जस्ता महापुरुषबीचको वार्तालाप सुनेर मेरो सारा शरीर रोमान्चित भएको छ। अब मलाई निश्चय भैसकेको छ कि जहाँ श्रीकृष्ण भगावन् र अर्जुन जस्ता श्रद्धालु, जिज्ञासु र ज्ञानी पुरुष एकसाथ छन् त्यसतर्फको विजय निश्चित छ। भगवान् व्यासजीको कृपाबाट मैले साक्षात परमब्रम्ह परमात्माको मुखारबिन्दबाट श्रीमद्भागवद्‌गीतारूपी दिव्यज्ञान उपदेश सुन्ने सौभाग्य पाएँ म उहाँप्रति सधैं कृतज्ञ र आभारी छु। सञ्जय भन्छन्- हे राजन ! जबजब म यी दुई माहापुरुषबीचको दिव्य वार्तालाप र श्रीकृष्णले अर्जुनलाई दिनुभएको आफ्नो विश्वरूपको दर्शनका दृश्यहरू

सम्झन्छु मेरो सारा शरीर रोमान्चित हुनपुग्दछ र परमआनन्दको अनुभव गर्न पुग्दछु। साक्षात परमात्मालाई सारथी पाएका अर्जुनबाट अब सुरु हुनथालेको लडाइँ अवश्य पनि पाण्डवपक्षको विजयमा टुङ्गिन्छ भन्दै सञ्जय राजा धृतराष्ट्रलाई कुरुक्षेत्रको युद्धभूमिको अरु वर्णनहरू सुनाउन थाल्दछन्।

**"भक्तभन्दा प्रिय मेरो, अरु हुन्न कोही यहाँ ।**
**मेरा लागि अति प्रिय, भक्त हुन्छ संसारमा ॥"**

**पूर्णामदः पूर्णमिदम् पूर्णात् पूर्णमुच्यते**
**पूर्णस्य पूर्णमादाय पूर्णमेवावसिष्यते**
**ॐ शान्ति, शान्ति शान्तिः**

इति समाप्तम्



## आत्मिक परिचय

सावित्री थापा, नाम सत्य हैन
देहीको नाम त्यो, जो नीत्य छैन
न थर ठेगान, साँचो हो मेरो
सम्मान पद, न त हो त्यो साँचो ॥

म दिदी बहिनी, नछोरी कसैको
आमा र पत्नी, न हुँ म कसैको
न त रुपरङ्, अनी जात मेरो
योग्यता उमेर, न हो त्यो है साँचो ॥

मान र पदवी, अनुभव ठूलो
कर्मादी सबै ति, हुन है यो देहको
आत्मा स्वरुपले, म भित्र रहेको
गर्ने गराउने, उनै हुन् सबैको ॥

## दैहिक परिचय

| | | |
|---|---|---|
| नाम | : | सावित्री जङ्गम थापा |
| जन्म मिति | : | २००१, जेष्ठ महिना |
| जन्म स्थान | : | टौमढी टोल, भक्तपुर नगरपालिका |
| हालको ठेगाना | : | ६/८८ कुमारी मार्ग धोबीधारा, वडा नं. ३३, काठमाडौं । |
| शैक्षीक योगयता | : | स्नातकोत्तर – राजनीति शास्त्र २०२० |
| | | स्नातक – कानुन २०२७ |
| कार्यगत अनुभव | : | २०२० सालबाट सामाजिक सेवा र |
| | | सहकारी अभियानको विकासमा संलग्न । |
| हालको संलग्नता | : | संस्थापक अध्यक्ष – शान्ति आश्रम |
| | | संस्थापक संरक्षक – वृद्ध सेवा कोष |
| | | अध्यक्ष – श्रोत विकास केन्द्र, पूर्वाञ्चल |
| | | उपाध्यक्ष – साप नेपाल |
| | | महासचिव – महिला सुरक्षा दवाव समुह |
| | | कार्यकारी सदस्य – जेष्ठ नागरिक संघ संस्था राष्ट्रिय संजाल |
| | | सल्लाहकार – विभिन्न सहकारी तथा सामाजिक संस्था |

कृति तथा प्रकाशन :

- नेपालमा समाज सेवा २०३३/२०६१
- सहकारी परिचय – २०५०
- जीवन धारा – काव्य २०५५
- चेलीको व्यथा – गीति काव्य २०६१
- सय थोपा गितामृत – २०६३
- त्रिवेणी – कर्म, ज्ञान र भक्तीको – श्रीमद् भगवद् गीता – २०६५
- समाज सेवा महिला विकास तथा सहकारी सम्बन्धी
  विभिन्न समसामयिक लेख तथा कार्यपत्रहरुको लेखन ।

प्रकाशक :
वृद्ध सेवा कोष, शान्ति आश्रम
काठमाडौं

